आएर श्रीगणेशको पूजा-आराधना गर्दछन् ।[१७]

### १५ ) पशुपतिनाथ परिसरका गणेशमन्दिर र मूर्तिहरू

नेपालको प्रसिद्ध पशुपतिनाथमन्दिरको उत्तरतर्फ ब्रह्मा, शिव-पार्वती, विष्णु र कुमारका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ । आर्यघाटको अलिकति दक्षिणतर्फ पुलकै मुखमा पञ्चगणेशको मन्दिर रहेको छ । यज्ञेश्वर शिवलिङ्गको परिक्रमा गर्दै त्यहाँबाट बाहिर निस्कँदा भित्तामा दक्षिणकाली, नवदुर्गा र भैरवको मूर्तिका साथै गणेशको मूर्ति पनि कुँदिएको देख्न सकिन्छ। पशुपति मन्दिरको गर्भगृहमा लालगणेशको दुर्लभ मूर्ति रहेको छ । पूजारीबाहेक अरू कसैको दृष्टि नपर्नाले त्यति प्रसिद्ध नभए तापनि लालगणेश भगवान् पशुपतिसरह नै प्रभावकारी, सद्यफलदाता र विघ्नहर्ता मानिएका छन् । पशुपति मन्दिरको दक्षिणतर्फ सिनामङ्गलमा भगवान् पशुपतिनाथसँग सम्बद्ध सिद्धिविनायकको मन्दिर रहेको छ ।

प्राचीन राजा शिवदेवले देउपाटनमा नौ टोल बनाई अनेक देवी-देवताको स्थापना गर्दा प्रत्येक टोलमा एक-एक गणेशमूर्तिको स्थापना गरेको विषय वंशावलीहरूमा प्रकाश पारिएको छ । उनैले देउपाटनको पश्चिमी भेगमा पनि चार वटा गणेशमूर्तिको स्थापना गरेको उल्लेख गरिएको छ । प्राचीन राजा शिवदेवले पशुपति वनकालीको स्थापना गरेपछि त्रिनेत्र र विशालकाय मूर्ति बनाई वनकालीमन्दिर र वर्तमान वनकाली धर्मशालाको बीचमा वचनविनायकको मन्दिर बनाई मूर्ति प्रतिष्ठा गरेको कुरा भाषा वंशावली भाग - एकमा उल्लेख गरिएको छ । पशुपतिनाथ मन्दिर परिसरभित्र रहेको रक्तविनायकको मूर्ति मल्लकालमा पनि सिद्धिप्रद मूर्तिका रूपमा प्रसिद्ध रहेको कुरा प्रताप मल्ल आदि मल्लकालीन राजाहरूका अभिलेखहरूबाट प्रमाणित हुन्छ ।

### १६ ) साईगणेशमन्दिर

काठमाडौंको भाटभटेनीमा श्रीगणेशका भक्त मीनबहादुर गुरुङद्वारा स्थापित श्रीसाई गणेशको भव्य मन्दिर रहेको छ । दक्षिणाभिमुख यो मन्दिर मङ्गलवार एवं शनिवार भक्तहरूका निमित्त आकर्षणको केन्द्र बनेको छ ।

## ख ) नेपालका प्रमुख गणेशमन्दिरहरू[१८]

नेपालका सबै जिल्लाहरूमा प्राचीन एवं अर्वाचीन सयकडौं गणेशमन्दिर, गणेशमूर्ति एवं गणेशतीर्थ रहेका छन् । प्राप्त सामग्रीको आधारमा जानकारीमा आएका ती गणेशमन्दिर, मूर्ति एवं तीर्थहरूको जिल्लागत आधारमा परिशिष्ट - एकमा वर्णन गरिएकोछ । तीमध्ये केही प्रमुख गणेशमन्दिर एवं गणेशमूर्तिको सङ्क्षिप्त विवरण यहाँ प्रस्तुत गरिँदैछ ।

---

१७. प्रा.डा. मुकुन्द अर्याल एवं प्रा.डा. जगदीशचन्द्र रेग्मीको भनाइको आधारमा ।

१८. नेपालको विभिन्न जिल्लामा रहेका गणेशमन्दिर एवं मूर्ति, भारतका प्रसिद्ध गणेशमन्दिर एवं मूर्ति र नेपाल-भारत बाहिरका गणेशमन्दिर एवं मूर्तिहरूको विस्तृत विवरण परिशिष्ट - एकमा समावेश गरिएको छ । यहाँ उल्लिखित नेपालका गणेशमन्दिर एवं गणेशमूर्तिहरूको विवरण पुरुषोत्तम ढकालद्वारा लिखित मन्दिरैमन्दिरको देश र मन्दिरसम्बन्धी अन्य कृतिहरूका साथै ती ती स्थानका स्रोत व्यक्तिहरूबाट प्राप्त जानकारीका आधारमा तयार गरिएको छ ।

**१) पाथीभराका गणेशमूर्ति**

**ताप्लेजुङ** जिल्लाको **तापेथोक** गा.वि.स.मा घोप्ट्याएर राखिएको पाथीको आकारमा रहेको पाथीभरा डाँडामा पूर्वाञ्चलकै **प्रसिद्ध पाथीभरा भगवती**को अथवा अन्नपूर्णा भगवतीको प्राकृतिक मन्दिर रहेको छ । त्यहाँ प्राकृतिक शिलालाई नै देवी मानेर पूजा गरिन्छ । पश्चिमाभिमुख यस मन्दिरको बीचको खोपामा श्रीगणेशको मूर्ति रहेको छ । त्यस मन्दिरको नजिकमा रहेको एउटा सिमलको रूखमुनि विभिन्न देवीदेवताका मूर्तिहरूको बीचमा गणेशको मूर्ति पनि प्रतिष्ठापित छ । पाथीभरा परिसर सिद्धक्षेत्र हो भन्ने जनविश्वास रहेको छ ।

**२) झापाको अर्जुनधाराको गणेशमन्दिर**

अर्जुनधारा जलेश्वरधामलाई पूर्वको पशुपतिक्षेत्र मानिएको छ । यहाँका शिवपाञ्चायनका पाँच मन्दिरमध्ये श्रीगणेशको मन्दिर पनि एक हो । यसै क्षेत्रमा रहेको पोखरीमा अन्य देवीदेवताका मूर्तिहरूका साथै गणेशको मूर्ति पनि रहेको छ ।

**३) सुनसरीको वराहक्षेत्रका गणेशमूर्ति**

वराहक्षेत्रमा रहेको वराहमन्दिरभित्र दक्षिणतर्फ गणेशको विशाल मूर्ति रहेको छ । यसैगरी त्यहाँ ठाउँ-ठाउँमा अन्य देवताका मूर्तिका साथै गणेशका मूर्तिहरू पनि रहेका छन् ।

**४) खोटाङ हलेसी महादेव मन्दिरपरिसरको गणेशमन्दिर**

हलेसी महादेवको मन्दिर खोटाङको सदरमुकाम दिक्तेलबाट २४ कि.मि.पश्चिम दक्षिणभेगमा महादेवस्थान गाविस वडा नं. ५ मा हलेसी भन्ने ठाउँमा रहेको छ । पहिले यी महादेवको नाम हलेश्वर रहेकोमा पछि अपभ्रंश हुँदै जाँदा हलेसीका रूपमा प्रचलित भएको जनविश्वास छ । हलेसीमा रहेको महादेवगुफामा प्राकृतिक पत्थरको शिवलिङ्ग छ । यस शिवलिङ्गलाई हलेश्वर अथवा हलेसीका नामबाट पूजा-आराधना गरिन्छ । महादेवगुफाको दक्षिणपट्टि रहेको अर्को बसाहागुफामा शिवलिङ्ग, शिवप्रतिमा र देवताका मूर्तिहरू छन् । यहाँको बसाहा महादेवगुफातर्फ फर्किएर रहेको छ । शिवलिङ्गदेखि पाँच-छ मिटरमाथि चुनढुङ्गाको प्रतिमा छ । यस प्रतिमालाई पार्वतीको प्रतीक मानी पूजा-आराधना गरिन्छ । यहाँ शिवरात्रिका दिन भोटे जातका मानिसहरूले सुम्निमा-पारोहाङ्का रूपमा शिव-पार्वतीको पूजा गर्दछन् । रामनवमीका दिन यस क्षेत्रमा सोहृदिने मेला लाग्दछ । हलेसी महादेवलाई पूर्वका पशुपति पनि भनिन्छ । यहाँ पुजारी र गुठीको राम्रो व्यवस्था छ । यी महादेवको पूजा-आराधना गर्नाले निर्धन धनि हुने, मूर्ख विद्वान् बन्ने, खडेरीमा पानी पर्ने, रोगीको रोग निको हुने, सन्तानहीनले सन्तान प्राप्त गर्ने, पितृहरू तर्ने र मनकामना पूरा हुने आदि फल प्राप्त हुने कुरामा श्रद्धालुहरू विश्वस्त छन् ।

बसाहास्थानदेखि पूर्वपट्टिको डाँडामाथिको फेदिबाट तलतिर हेर्दा डरलाग्दो अँध्यारो गुफाभित्र महादेवस्थान रहेको देखिन्छ । त्यहाँ भऱ्याङबाट ओर्लेजस्तै तल ओर्लिनु पर्दछ । तल ओर्लेपछि पश्चिमपट्टिको भित्ताका वरिपरि ढुङ्गे वेदी छन् । माझमा ढेढ हात अग्लो शिवलिङ्ग छ । शिवलिङ्गको नजिकमा उत्तरपट्टि ढिकीको आकारका सेता-चिल्ला ढुङ्गाहरू स्तम्भका आकारमा उभिएका छन् । ती ढुङ्गाको चेपबाट ठूलो शरीरका मानिस पनि चेपिएर फुत्त निस्कन सक्छन् । त्यस्तै अर्को चिल्ला ढुङ्गाको बाटुलो प्वालबाट

पनि मानिसहरू छिर्दछन् । यी दुई दुलालाई धर्मद्वार र पापद्वार भनिन्छ । ती खम्बाको बीचबाट छिर्न सक्नेलाई धर्मात्मा भनिन्छ ।

यो महादेवगुफा नजिकै दार्जिलिङका शेर्पाहरूले बनाएको गुम्बा पनि रहेको छ । हलेसी महादेवको इतिवृत्तलाई पौराणिक भस्मासुरको कथासँग जोड्ने गरिएको पाइन्छ । यो सिद्धभूमि भएको र यहाँ ब्रह्मा, विष्णु, महेश्वर आदि देवताहरूले नित्यनिवास गर्ने गरेको विषयमा विद्वान्, महात्मा र सिद्धहरू विश्वस्त छन् । यसै सिद्धभूमिमा पार्वती र परमेश्वरका प्यारा पुत्र श्रीगणेशको मन्दिर नभएको तथ्यलाई महसुस गरी खोटाङ जिल्लाकै निवासी गणेशभक्त श्रीमीनबहादुर गुरुङद्वारा गणेशमन्दिर बनाई श्रीगणेशको विशाल प्रतिमा प्रतिष्ठापित गरिएको छ ।

**५) ओखलढुङ्गाको गणेशमन्दिर**

ओखलढुङ्गा गा.वि.स. वडा नं. ६ मा रहेको बजारमा गणेशमन्दिर अवस्थित छ । प्यागोडा शैलीको दुइतले यस मन्दिरमा गणेशको प्रतीकस्वरूप प्राकृतिक शिला रहेको छ । त्यसलाई नै गणेश मानी पूजा गर्ने गरिन्छ ।

**६) जनकपुर स्वर्णशिखर राममन्दिरको गणेशमूर्ति**

जनकपुरमा रहेको स्वर्णशिखरसम्पन्न राममन्दिर देश-विदेशमा प्रसिद्ध छ । यसै राममन्दिरको बाहिरपट्टि श्रीगणेशको सिद्धप्रतिमा रहेको छ ।

**७) फूलहरको गणेशमन्दिर**

जनकपुरदेखि करीब १५ कि.मि. दक्षिणतर्फ रहेको फूलहरनामक पौराणिक स्थानमा प्राचीन गणेशमन्दिर रहेको छ । यसलाई साधनासिद्धिदायक गणेशक्षेत्र मानिएको छ ।

**८) सिन्धुपाल्चोकको गणेशकुण्ड**

सिन्धुपाल्चोक जिल्लामा सरस्वतीकुण्ड, इन्द्रकुण्ड, नौलिङ्गकुण्ड र बगामकुण्ड रहेजस्तै गणेशको नामबाट गणेशकुण्ड पनि रहेको छ ।

**९) पलाञ्चोक भगवतीमन्दिरको गणेशमूर्ति**

पाँचखालदेखि सात कि.मि. उचाइमा पर्वतको डाँडामा रहेको पलाञ्चोक भगवतीको मन्दिर निकै प्राचीन मन्दिरका रूपमा विख्यात छ । त्यहाँ भगवतीमूर्तिको उत्तरतर्फ गणेशमूर्ति स्थापना गरिएको छ ।

**१०) नुवाकोटको जगात गणेशमन्दिर**

नुवाकोट जिल्लाको चतुराल गा.वि.स.मा रहेको गणेशमन्दिर जगात गणेशमन्दिरको नामबाट प्रसिद्ध छ। यहाँको गणेशमूर्ति आफ्नो वाहन छुचुन्द्रोमाथि सवार छ। नुवाकोट जिल्लाका अनेक देवीदेवताका मन्दिरहरूमा गणेशमूर्ति पाइन्छन्। यस मन्दिरमा नै नेपाल संवत् ६७६ को विनायक स्थापनासम्बन्धी अभिलेख रहेको छ । यी गणेशको स्थापना उजोतसिंह र उनका पारिवारिक मानिसहरूले गरेको उल्लेख गरिएको छ ।

**११) पाल्चोक र खोन नदी दोभानको गणेशमन्दिर**

यो गणेशमन्दिर मकवानपुर जिल्लाको टिष्टुङ गा.वि.स. वडा नं. १ को पाल्चोक र खोन नदीको दोभानमा पर्दछ । यो प्यागोडा शैलीको एकतले मन्दिरभित्र गणेशको प्रतीक प्राकृतिक शिलाको मूर्ति छ।

यस मन्दिरमा प्रत्येक शनिवार र मङ्गलवारका अतिरिक्त बडादशैंमा पनि विशेष पूजा हुन्छ ।

**१२ ) गण्डकीनगर चितवनको श्रीगणेशमन्दिर**

चितवन जिल्लाको रामनगरदेखि दक्षिणतर्फ जाँदा भरतपुर र नारायणगढ जाने चोकमा पुगिन्छ । त्यहाँबाट भरतपुर जाने बाटोमा लागेपछि बीचमा अत्यन्त प्राचीन गण्डकीनगरको गणेशमन्दिर देख्न सकिन्छ । यो मन्दिर गणेशपुराणको क्रीडाखण्डमा वर्णन गरिएको गण्डकीनगरमा स्थापित गणेशमूर्ति हो भन्ने जनविश्वास रहेको छ । सिन्धुनामक दैत्यको वध गरेपछि श्रीगणेश गण्डकीनगरमा थुनिएका देवताहरूलाई मुक्त गर्न देवगणसहित त्यहाँ जानुभएको थियो । देवताहरूलाई कारागारबाट मुक्त गरेपछि सिन्धुदैत्यका पिता चक्रपाणिले श्रीगणेशको भक्तिपूर्वक आराधना गरेका थिए । प्रसन्न हुनुभएका भगवान् गणेशबाट आशीर्वाद प्राप्त गर्ने चक्रपाणिले आफ्ना नागरिकहरूसँग मिलेर गण्डकीनगरमा गणेशमन्दिर तयार गरी गणेशमूर्तिको प्रतिष्ठा गरेका थिए । यस मन्दिरको मूर्ति निकै पुरानो शिलामा कुँदिएको छ । त्यतिबेला चक्रपाणिले स्थापित गरेको मन्दिर नै वर्तमान मन्दिर हो भन्ने विषयमा भक्त एवं विद्वान्हरू विश्वस्त रहेका छन् । चितवननगरमा उक्त गणेशको उपस्थितिका कारण चितवन क्षेत्रलाई श्रीगणेशका पवित्र क्षेत्रहरूमध्ये एउटा क्षेत्र मानिएको छ ।

**१३ ) गोर्खाको सत्यरूपेश्वर सिद्धिविनायकमन्दिर**

सिद्धिविनायक गणेशको मन्दिर गोरखा दरबारको नजिकै रहेको छ । यस मन्दिरको निर्माण वि.सं. १९७९ मा उद्योत शाहले गरेका हुन् । यस मन्दिरको गणेशमूर्ति खस्रो शिलाले बनेको छ । यसको पादपीठमा नाग अङ्कित छ । त्यस पादपीठमाथि रहेको कमलासनमा चारबाहु भएका, घाँटीमा जनैजस्तो गराई नागमाला पहिरिएका, दुवै पाउ आफ्ना वाहन मूसामाथि राखेका गणेश उभिएको स्थितिमा रहेका छन् । त्यस भेगका श्रद्धालुहरू विशेषतः मङ्गलवार र गणेशचौथीका दिन दर्शनार्थ यहाँ आउने गर्दछन् ।

**१४ ) स्याङ्जा भृगुतुङ्गेश्वरको गणेशशिला**

स्याङ्जा जिल्लामा पर्ने तर पाल्पा र गुल्मीको ज्यादै निकट रुरुक्षेत्र पारिपट्टि कालिपारमा रहेको भृगुतुङ्गेश्वर मन्दिर सिद्धक्षेत्रका रूपमा प्रख्यात छ । त्यस प्राकृतिक मन्दिरमा श्रीगणेशको प्राकृतिक भव्य शिलामय मूर्ति रहेको छ ।

**१५ ) पाल्पा राम्दी सिद्धगुफाको गणेशमूर्ति**

काली गण्डकीको तट राम्दीघाट नजिकै पहराको बीचमा सिद्धगुफा रहेको छ । यहाँ पौराणिक कालमा कपिलमुनिले तपस्या गरेका थिए । यस गुफामा सिद्ध, गणेश र सरस्वतीका स्वयम्भू प्रतिमाहरू छन् ।

**१६ ) पाल्पा जलेश्वर महादेवमन्दिरको गणेशमूर्ति**

पाल्पाको ऐतिहासिक राजधानी रिब्दीकोटमा जलेश्वर महादेवको मन्दिर रहेको छ । यस मन्दिरको शिवलिङ्ग रूपन्देही जिल्लाको सैनामैना भन्ने ठाउँमा स्वयम्भू लिङ्गका रूपमा प्रकट भएको थियो । लिङ्ग प्रकट भएको ठाउँबाट सार्नका लागि हजारौं मानिसहरूले प्रयास गर्दा पनि उठाउन सकेनन् । पछि पाल्पा रिब्दीकोटका सिद्धयोगी श्रीरामानन्दपुरीले एक्लै त्यो स्वयम्भू लिङ्ग उठाई पाल्पाको रिब्दीकोटमा लगी जलेश्वर महादेवका नामबाट स्थापित गरेका थिए । उक्त मन्दिरको गर्भगृहमा र परिसरमा पनि श्रीगणेशका मूर्तिहरू रहेका छन् ।

१७ ) रुरुक्षेत्रको गणेशमन्दिर

यो गणेशको मन्दिर गुल्मीजिल्लाको रुरु गा.वि.स. वडा नं. ५ मा पर्दछ । त्यहाँ गुम्बज शैलीका दुई मन्दिर छन् । तीमध्ये पश्चिमपट्टिको मन्दिरभित्र रिडीखोलाको पुरानो मन्दिर बगाएपछि त्यहाँकै पुरानो मूर्ति ल्याई गणेशको स्थापना गरिएको हो । पूर्वपट्टिको मन्दिरमा भैरवमूर्ति रहेको छ ।

१८ ) बुटवलको जलविनायक मन्दिर

बुटवल नगरपालिका तिनाउपारि गणेशटोलमा प्राचीन गणेशमन्दिर रहेको छ । दक्षिणाभिमुख भएको पित्तलको गजुरले युक्त एकतलेमन्दिरभित्र शिलाका गणेश छन् भने दायाँबायाँ पित्तलका गणेशका मूर्तिहरू छन् । यहाँ प्रत्येक मङ्गलवार, शनिवार र माघ महिनामा दर्शनार्थीहरूको घुइँचो लाग्दछ ।

१९ ) स्वर्गद्वारी आश्रमको गणेशमूर्ति

प्यूठानको सदरमुकाम खलङ्गाबाट २६ कि.मि. पश्चिम **स्वर्गद्वारी गा.वि.स.** वडा नं. १ मा स्वर्गद्वारी आश्रम रहेको छ । स्वर्गद्वारी आश्रम महाप्रभु **हंसानन्द सरस्वती**द्वारा वि.सं. १९५२ मा स्थापित भएको हो । यहाँ दैनिक हवन गर्ने कुण्ड छ । यसै कुण्डलाई अखण्डधुनि मानिएको छ । नवग्रहको हवनकुण्डका चार सुरमा भगवती, शिव र शालिग्रामका मूर्तिहरूका साथै गणेशमूर्ति पनि रहेको छ ।

२० ) छिल्लीकोटको गणेशमन्दिर

दाङ जिल्लाको उत्तरी भेगमा रहेको पर्वतशिखरमा कालिकामन्दिर र मालिकामन्दिरको मध्यभागमा विशाल प्राकृतिक शिलामूर्तिसहितको गणेशमन्दिर रहेको छ ।

२१ ) जुम्लाको गणेशगुफा

यो गुफा जुम्लाबाट ५ कि.मि. दक्षिण ठाकुरनाथ जाने बाटोमा बोहरा गाउँको डाँडामाथि पर्दछ । यस गुफाभित्र चुनढुङ्गा जस्तै सेतो गणेशमूर्ति रहेकाले यस गुफालाई गणेशगुफा भनिएको हुनुपर्दछ । यहाँ गणेशचौथी, हरिबोधिनी र हरिशयनी एकादशीका दिन मेला लाग्दछ । यहाँ हनुमान् र मालिका भगवतीका मन्दिरहरू पनि रहेका छन् । यस जिल्लामा रहेका विभिन्न मन्दिरहरूमा अङ्गमूर्तिका रूपमा गणेशका मूर्तिहरू पनि रहेका छन् ।

२२ ) बर्दियाको गणेशबाबामन्दिर

बर्दियाको राजापुर बजारदेखि दक्षिणपूर्वी भागमा गणेशबाबामन्दिर रहेको छ । गुम्बज शैलीको पश्चिम फर्केको र गजुर भएको यस मन्दिरभित्र पहिले गणेशको शिरको आकार बन्न गएको पीपलको जरा रहेको छ । त्यसैलाई गणेश मानी पूजा गर्दै आएको पाइन्छ । यस मन्दिरमा श्रीपञ्चमीका दिन दर्शनार्थीहरूको भीड लाग्ने गर्दछ ।

२३ ) अछामको गणेशपञ्चदेवल

यो पञ्चदेवलमन्दिर अछाम जिल्लाको घोडाकन्ने भन्ने डाँडामा रहेको छ । वरिपरि चारवटा देवल र बीचमा चारैतिर चौतारी बनाएर गणेशदेवल निर्माण गरिएको छ । यस पञ्चदेवलको निर्माण सिञ्जाली राजाका छोरा अक्षय मल्लले वि.सं. १३३९ मा गरेका हुन् ।

२४) डडेल्धुराको गन्यापधुरा - गणेशमन्दिर

गणेशमन्दिरको रूपमा मानिने यो मन्दिर सदरमुकामबाट करीब १५ कि.मि. पूर्व गणेशपुर गा.वि.स.अन्तर्गत पर्दछ । गणेशमूर्तिको रूपमा रहेको शिलालाई ताम्रपत्रले छोपेको छ । यहाँ सदा सर्पले रक्षा गर्ने र त्यहाँको ढुङ्गा झिक्न खोजेमा सर्पले झिक्न नदिने भन्ने भनाइ छ । यस जिल्लामा रहेका अन्य मन्दिरहरूमा अङ्कमूर्तिका रूपमा गणेशका मूर्ति रहेका छन् ।[११]

## ७.३ भारतका २१ गणेशक्षेत्र

भारतमा अनेक गणेशक्षेत्र, गणपतितीर्थ , गणपतिमन्दिर र गणपतिमूर्ति रहेका छन् । तीमध्ये प्रमुख तीर्थ, मन्दिर एवं मूर्तिहरूको विवरण परिशिष्ट - एकमा दिइएको छ । गणेशक्षेत्रको निरूपणका लागि यो प्रकरण प्रारम्भ गरिएको छ।

### क ) ढुण्ढिराजक्षेत्र

काशीको ढुण्ढिराजमन्दिर निकै प्रसिद्ध छ । काशीलाई ढुण्ढिराजक्षेत्र भनिन्छ । ढुण्ढिराजको अधीनमा काशीमा ५६ गणेशमूर्ति रहेका छन् । तिनको आफ्नै किसिको महत्त्व छ ।

### ख ) ओङ्कारगणपतिक्षेत्र

प्रयागलाई ओङ्कारगणपतिको सिद्धक्षेत्र मानिएको छ । यस क्षेत्रमा ओङ्कारगणपतिलगायत अनेक सिद्धिप्रद श्रीगणेशका मन्दिर एवं मूर्तिहरू रहेका छन् ।

### ग ) भूस्वानन्दक्षेत्र

पूना नजिकै रहेको मोरेश्वर स्थानलाई भूस्वानन्दक्षेत्र भनिन्छ । यहाँ मयूरेश्वर भगवान्‌को मन्दिरका साथै गणेशका अनेक मन्दिर र मूर्ति रहेका छन् ।

### घ ) चिन्तामणिक्षेत्र

यो क्षेत्र यवतमाल नगरको समीपमा रहेको छ । यसलाई अहिले कलम्ब भन्दछन् । यहाँ देवराज इन्द्रले चिन्तामणिगणेशको स्थापना गरी आराधना गरेका थिए । मनले चिताएको पुऱ्याउने भएका कारण यहाँका गणेशलाई चिन्तामणि गणेश भनिन्छ र उहाँ रहनुभएको यस क्षेत्रलाई चिन्तामणिक्षेत्र भनिएको छ ।

### ङ ) शमीविघ्नेशक्षेत्र

भारतको नागपुर-छिन्दवाडा रेवले लाइनमा रहेको सामनेर स्टेशनको नजिकमा अधोषनामक स्थान रहेको छ । त्यसलाई शमीविघ्नेशक्षेत्र भनिन्छ । यहाँ परापूर्वकालमा ऋषिहरूले श्रीगणेशको स्थापना गरेका थिए । भगवान् वामन पनि बलिको यज्ञमा जानुभन्दा पहिले यस क्षेत्रमा शमीविघ्नेशको दर्शन गर्न आउनुभएको थियो भन्ने पौराणिक मान्यता रहेको छ ।

### च ) बल्लालविनायकक्षेत्र

महाराष्ट्रको कुलावा जिल्लामा रहेको पालीनामक स्थानलाई बल्लालविनायकक्षेत्र भनिन्छ । यस क्षेत्रमा बल्लालनामक वैश्य बालकले भक्तिपूर्वक तपस्या गरेका कारण भगवान् श्रीगणेशले ती बालकलाई बल्लालविनायकका रूपमा दर्शन दिनुभएको थियो ।

११. २१ गणपतिक्षेत्र, कल्याण, पूर्ववत्, पृ. ४२४-४२५ ।

**छ) मङ्गलमूर्तिक्षेत्र**

नर्मदा नदीको तटमा रहेको पारिनेर क्षेत्रमा मङ्गलग्रहले तपस्या गरी गणेशको आराधना गरेका थिए। मङ्गलमूर्ति भगवान् गणेशले मङ्गललाई यसै ठाउँमा दर्शन दिनुभएको थियो। त्यसकारण यहाँको गणेशमूर्तिलाई पारिनेर मङ्गलमूर्ति भनिन्छ भने यस क्षेत्रलाई पारिनेर मङ्गलमूर्तिक्षेत्रका रूपमा चिनिन्छ। यहाँ स्थापित श्रीगणेशलाई मङ्गलविनायक भनिन्छ।

**ज) भालचन्द्रगणेशक्षेत्र**

गोदावरी नदीको तटमा रहेको गङ्गामसलेनामक स्थान भालचन्द्रगणेशक्षेत्रको नामबाट प्रसिद्ध छ। यहाँ प्राचीन समयमा चन्द्रमाले श्रीगणेशको आराधना गरेका थिए।

**झ) विज्ञानगणेशक्षेत्र**

गोदावरी नदीको तटमा राक्षसभुवननामक स्थान रहेको छ। यसलाई विज्ञानगणेशक्षेत्रको नामबाट पनि चिनिन्छ। यहाँ दत्तात्रेय ऋषिले तपस्या गरी विज्ञानगणेशको स्थापना गरेका थिए।

**ञ) विघ्ननाशक-गणेशक्षेत्र**

पूनाभन्दा पाँच माइल टाढा थेउरनामक स्थानमा विघ्ननाशक गणेशको मन्दिर रहेको छ। ब्रह्माजीले सृष्टिकार्यमा सम्भावित विघ्नहरूको निवारणका लागि यस क्षेत्रमा रहेर विघ्ननाशक गणेशको आराधना गर्नुएको थियो। यो समयदेखि यो क्षेत्र विघ्ननाशकगणेशक्षेत्रका रूपमा प्रसिद्ध छ।

**ट) सिद्धिविनायकक्षेत्र**

भीमानदीको तटमा रहेको सिद्धिविनायक क्षेत्रमा भगवान् विष्णुले तपस्या गरी श्रीगणेशको दर्शन पाउनुभएपछि सिद्धिविनायकको प्रतिमा स्थापना गर्नुभएको थियो। वेदव्यासले वेदको विभाजन गर्नुभन्दा पहिले यहाँ आई सिद्धिविनायकको दर्शन र आराधना गरेका थिए। यस मन्दिरमा सिद्धिविनायक भगवान्को स्वयम्भू मूर्ति रहेको छ। मूर्तिको सूँढ दायाँतर्फ फर्किएको छ। सिद्धिविनायकलाई महाराष्ट्रका आठ विनायकहरूमध्ये एक मानिन्छ।

**ठ) महोत्कटविनायकक्षेत्र**

पूना नजिकै राजन गाउँमा भगवान् शङ्करद्वारा स्थापित एवं पूजित महोत्कटविनायकको मन्दिर रहेको छ। कश्यप र अदितिका पुत्रका रूपमा अवतार लिनुहुने महोत्कटविनायक आफ्नो अनुपम लीलाका कारण जगत्मा प्रसिद्ध हुनुहुन्छ। उहाँकै लीलालाई गणेशपुराणमा समेटिएको छ।

**ड) अनलासुरहन्ता गणपतिक्षेत्र**

मद्रास-मङ्गलोर रेलवे लाइनमा पर्ने विजयमङ्गलम् स्टेशन नजिकै गणपतिको प्रसिद्ध मन्दिर रहेको छ। यहाँ अनलासुरको वधका लागि भगवान् श्रीगणेशको आविर्भाव भएको थियो।

**ढ) अनुग्रहमूर्ति गणेशक्षेत्र**

दक्षिणभारतमा कश्यपद्वारा स्थापित एवं पूजित अनुग्रहमूर्ति भगवान् श्रीगणेशको प्रसिद्ध मन्दिर रहेको छ।

**ण) मयनिर्मित गणेशक्षेत्र**

दक्षिण भारतको जलेशपुरमा मयदानवद्वारा निर्मित र त्रिपुरवासी असुरहरूद्वारा स्थापित गणेशमूर्ति रहेको छ।

### त ) लेह्याद्रि ( लेखनाद्रि ) गणेशक्षेत्र

महाराष्ट्र प्रान्तअन्तर्गत पूना जिल्लाको जुआरतातुकादेखि पाँच माइल टाढा रहेको लेह्याद्रिमा प्राचीन श्रीगणेशमन्दिर रहेको छ । यहाँ भगवती पार्वतीले श्रीगणेशलाई पुत्रका रूपमा प्राप्त गर्न तपस्या गर्नुभएको थियो भन्ने मान्यता रहिआएको छ ।

### थ ) लक्षविनायकक्षेत्र

औरङ्गाबादअन्तर्गत वेरोलमा अर्थात् एलापुर क्षेत्रमा पार्वती एवं शिवका पुत्र स्कन्दद्वारा स्थापित एवं पूजित लक्षविनायक भगवान् श्रीगणेशमन्दिर रहेको छ ।

### द ) प्रवालगणपतिक्षेत्र

बम्बई-भुसावल रेवले लाइनमा महसावद स्टेशनभन्दा पाँच माइल टाढा रहेको प्रवाल क्षेत्रमा प्रवाल-गणपतिमन्दिर रहेको छ । यहाँ शेषनाग र कार्तवीर्यद्वारा स्थापित गणेशका दुई मूर्ति रहेका छन् ।

### ध ) आशापूरक गणपतिक्षेत्र

प्रसिद्ध आशापूरक गणेशमन्दिर काचीमुडा-मनमाड रेलवे लाइनको जालना स्टेशनबाट केही टाढा रहेको नामल गाउँमा विद्यमान छ । यहाँ धर्मराजले माताको सरापबाट मुक्त हुन आशापूरक गणेशको स्थापना गरी आराधना गरेका थिए ।

### न ) राजसदनक्षेत्र

जालना रेलवे स्टेशनभन्दा चौध माइल टाढा रहेको राजसदन क्षेत्रमा ज्ञानदाता गणेशको अनुग्रहमूर्ति स्थापित छ । यहाँ सिन्दूरासुरको वध गरेपछि श्रीगणेशले राजा वरेण्यलाई गणेशगीताको उपदेश गर्नुभएको थियो ।

### प ) श्वेतविघ्नेश्वरक्षेत्र

[१००]दक्षिण भारतको कुम्भकोणम् तीर्थअन्तर्गत तिरुवलं चुलिस्थानमा कावेरीतट नजिकै श्वेतविघ्नेश्वर अथवा सुधागणेशको भव्य प्रतिमा रहेको छ । अमृतमन्थनको समयमा यहाँ आई देवताहरूले श्वेतविघ्नेश्वर गणेशको स्थापना गरी आराधना गरेका थिए । त्यसै आराधनाका कारण समुद्रमन्थन गर्दा अमृतको उत्पत्ति भयो। त्यसकारण श्वेतविघ्नेश्वरलाई सुधागणेश पनि भनिन्छ ।[१०१]

## ७.४ नेपाल-भारत बाहिरका श्रीगणेशमन्दिर एवं मूर्ति

बौद्ध धर्म, साहित्य, संस्कृति र साधनाबाट प्रभावित श्रीलङ्कार, बर्मा, जावा, बोर्नियो, चीन, अफगानिस्तान, जापान, कोरिया, तिब्बत, मङ्गोलिया, तुर्किस्थान, श्याम, कम्बोडियो, बाली, मलयद्वीप आदि देशहरूका साथै अमेरिका, इरान, मिश्र, युनान आदि देशहरूमा रहेका गणेशका मन्दिर एवं मूर्तिहरूमा अर्चना-उपासना हुँदै आएको छ ।

मलयद्वीपपुञ्जमा पाषाणनिर्मित एवं धातुनिर्मित गणेशका मूर्ति पाइन्छन् । जावामा नदीहरूका घाटहरूमा गणेशमूर्ति देख्न सकिन्छ । जावामा गणेशलाई 'महापिएन' भनिन्छ । महापिएन शब्द महाविनायक शब्दको अपभ्रंश हो भन्न

---

१००. भारतका प्रमुख गणेशमन्दिर, मूर्ति एवं तीर्थहरूको विवरण परिशिष्ट - एकमा समावेश गरिएको छ ।

१०१. गणेशप्रसाद जैन, विदेशों के गणेशविग्रह और मन्दिर, कल्याण, पूर्ववत्, पृ. ४५१-४५२ ।

सकिन्छ । श्याम देशमा गणेशका स्थापित मूर्तिहरू पाइन्छन् । कम्बोडियामा गणेशलाई 'केनेस' भनिन्छ र त्यहाँको गणेशको कांस्यमूर्ति प्रसिद्ध छ । चीनमा गणेशलाई 'विनायक' र 'कांगितेन' भनिन्छ ।

चीनको तुनुहआङ नामक स्थानमा रहेको एउटा गुफाको भित्तामा अजन्ता शैलीमा मूर्तिहरू कुँदिएका छन् । तिनमा गणेशको मूर्ति पनि रहेको छ । मूर्तिनिर्माणको तिथि संवत् ५८८ अङ्कित गरिएको छ । यति पुरानो गणेशमूर्ति सम्भवतः भारतीय उपमहाद्वीपमा पनि पाइँदैन । यस मूर्तिलाई विनायक मूर्ति भनिन्छ । मूर्तिको पीठमा चिनिया भाषामा 'यो हात्तीहरूका अमानुष राजाको मूर्ति हो' भनिएको छ ।

जापानको सिङ्गवेन सम्प्रदायमा विनायक पूजा गर्ने परम्परा रहेको छ । तिब्बतका प्रत्येक बौद्धमठमा मठाधीशका रूपमा गणेशको पूजा गर्ने प्रचलन छ ।

युनानमा 'ओरेनस' देवताको श्रद्धापूर्वक पूजा गरिन्छ । हिन्दूहरूका अरुणास्य र युनानीहरूका ओरेनस एउटै देवता प्रतीत हुन्छन् । अरुणास्य र ओरेनसमा ध्वनि सादृश्यमात्र होइन अपितु पूज्यतासादृश्य पनि देखिन्छ ।

मिश्र देशमा बुद्धिका अधिष्ठाता र परिपूर्णस्वरूप देवतालाई 'एकटोन' भनिन्छ । यो एकटोन शब्द र हिन्दूहरूको गणेशवाचक एकदन्त शब्दमा पनि ध्वनिसादृश्य प्रतीत हुन्छ । अतः एकटोन शब्द एकदन्तको अपभ्रंश हुन सक्ने सम्भावनालाई नकार्न सकिँदैन ।

इरान देशका पारसीहरू हिन्दूहरूले श्रीगणेशलाई श्रद्धेय देवता मानी आराधना गरेझैँ आफ्ना आराध्य देवता 'अहुरमज्दा'को आराधना गर्दछन् । हिन्दू एवं बौद्धहरूका गणेशपरक वाङ्मयमा गणेशका अलौकिक लीला र सामर्थ्यको बयान गरिएझैँ पारसीहरूको धर्मग्रन्थ जिन्दावेस्ताका पचासौँ आयातहरूमा अहुरमज्दाको लोकोत्तर शक्ति र विशेषताको बयान गरिएको छ । अहुरमज्दा शब्द र गणेशको पर्यायवाची शब्द 'असुरमदहा' शब्दमा सादृश्य देखिन्छ । पारसी भाषा 'स' को उच्चारण 'ह' गरिन्छ । तदनुसार सिन्धुलाई हिन्दू, मासलाई माह, सप्ताहलाई हप्ता इत्यादि रूपमा अनेक शब्दहरूमा सकारको ठाउँमा हकारको उच्चारण गरिएको अनुभव गर्न सकिन्छ । यस उच्चारणगत रूपान्तरण प्रक्रियालाई हेर्दा अहुरमज्दाको मूल रूप असुरमदहा हुन सक्ने सम्भावना गर्न सकिन्छ । भगवान् गणेशले सैकडौँ असुरहरूको शक्तिमदलाई छियाछिया बनाउनुभएको कुरा गणेशपुराण आदि आर्षग्रन्थहरूबाट ज्ञात गर्न सकिन्छ ।

एलिस गेट्टी नामक प्रसिद्ध पाश्चात्य लेखिकाले 'गणेश ए मोनोग्राफ अफ द एलिफेन्ट फेस्ड गाड' नामक आफ्नो पुस्तकमा गणेशका नाम, नामसाम्य र गुणसाम्यका विषयमा विस्तृत चर्चा गरी यस्ता सम्भावनाहरूको वास्तविकता उजागर गर्ने प्रयास गरेकी छिन् ।

अमेरिकामा लम्बोदर गणेशको मूर्ति प्राप्त भएको छ । 'हिन्दू अमेरिका' नामक कृतिका रचयिता दीवान चमनलालले कोलम्बसद्वारा अमेरिका खोज गरिनुभन्दा पहिलेदेखि नै त्यहाँ गणेश, सूर्य आदि देवताहरूका मूर्तिहरूको अस्तित्व रहेको कुरा उल्लेख गरेका छन् । दक्षिण अमेरिकाको ब्राजिल नामक देशमा उत्खनन गर्दा प्राप्त भएको मूर्तिलाई ४-५ हजार वर्ष पुरानो मूर्ति मानिएको छ ।

उपर्युक्त विवरणहरूका आधारमा उत्तर मङ्गोलियादेखि दक्षिण बालीसम्म र जापानदेखि अमेरिकासम्म विभिन्न रूपमा गणेशको अर्चना, उपासना र मूर्ति प्रतिष्ठा गर्ने परम्परा रहिआएको कुरा ज्ञात हुन्छ । यसबाट श्रीगणेश धर्मविशेष र देशविशेषका मात्र देवता नभई विश्वब्रह्माण्डका आराध्य र विश्वव्यापी एवं सर्वान्तर्यामी देवता हुनुहुन्छ भन्न सकिन्छ ।

## परिच्छेद - आठ

# निष्कर्ष र उपसंहार

## ८.१ निष्कर्ष

ओङ्काररूप श्रीगणेशका साकार एवं निराकार रूप, लीला, चरित्र, उपासना र विशेषताको बयान गर्ने श्रीगणेशपुराणलाई वैनायक सम्प्रदायको विशिष्ट ग्रन्थ मानिएको छ । कूर्मपुराण अनुसार यो भार्गव उपपुराण हो र आनन्दरामायणमा यसलाई विनायकपुराण भनिएको छ । भृगु ऋषिले राजा सोमकान्तलाई उपदेश गरेका कारण यो पुराण भार्गवपुराणका नामबाट प्रसिद्ध भयो । समयक्रममा श्रीगणेशपुराणका नामबाट ज्यादै प्रसिद्ध भयो । श्रीगणेशपरक पुराणहरूमध्ये यो प्रथम पुराण हो भने मुद्‌गलपुराण अन्तिम पुराण हो । सम्भवत: रचनाकालमा यसमा १२ हजार जति श्लोकहरू रहेकाले यसलाई द्वादशसाहस्री संहिता भनियो, तर अहिले यसमा ११ हजारभन्दा केही बढी श्लोकहरूमात्र पाइन्छन् । यसको प्रथम भाग उपासनाखण्डमा ९२ अध्याय र द्वितीय भाग क्रीडाखण्डमा १५५ अध्याय रहेका छन् ।

श्रीगणेशपुराणको उपासनाखण्डको विषयवस्तु श्रीगणेशको उपासनामा आधारित भएकाले यो खण्ड उपासनाखण्डका नामबाट प्रसिद्ध छ । यस खण्डका अनेक विषयहरूमध्ये चहकिलो विषय अमोघ-सामर्थ्यसम्पन्न गणेशसहस्रनाम हो। श्रीभास्कर रायले यसको टीका लेखिदिएर यसको महत्त्व अरू बढाएका छन् । गणेशतत्त्वको निरूपण, गणेशमन्त्रहरूको प्रकाशन, गणेशतीर्थहरूको महिमगायन, गणेशभक्तहरूको समर्पण; निष्ठा एवं श्रद्धा-भक्तिको वर्णन, सङ्कष्टचतुर्थीव्रत, मङ्गलचतुर्थीव्रत, वरदचतुर्थीव्रत, पार्थिवपूजनजस्ता उपासनाका सरणिहरूको निरूपणका साथै दूर्वाङ्कुरको महत्त्वकीर्तनजस्ता विषय उपासनाखण्डका जीवन्त तत्त्व बनेर रहेकाछन् ।

श्रीगणेशपुराणको दोस्रो भाग क्रीडाखण्डका नामबाट प्रसिद्ध छ । यसमा श्रीगणेशका अनेक अवतारप्रसङ्ग, अद्‌भुत शौर्य प्रकाशन गर्ने विलक्षण लीला र विचित्र चरित्र पनि छन् । सत्ययुगमा अदिति-कश्यपनन्दनका रूपमा श्रीगणेशको दशभुज महोत्कट अवतार, उहाँको अवाङ्मनसगोचर काशीलीला, उहाँद्वारा नरान्तक एवं देवान्तकजस्ता दुर्जेय दानवराजहरूको वधजस्ता घटनाचक्रहरूको वर्णन क्रीडाखण्डका केन्द्रीय विषय हुन् । त्रेतायुगमा गौरी-शङ्करका प्यारा पुत्र बनेर श्रीगणेशले गर्नुभएका विचित्र लीला, कमलासुर एवं सिन्धुजस्ता पापाचारी दानवहरूको वध र गणेशले दानवदलन गर्नुभएको उपलक्ष्यमा ब्रह्माजीले उहाँलाई सिद्धि एवं बुद्धि नामक कन्याहरू टक्र्याएर सम्मान गर्नुभएको कुरा पनि श्रीगणेशको महिमा र उत्कर्ष द्योतन गर्ने क्रीडाखण्डका महत्त्वपूर्ण विषय हुन् । द्वापरयुगमा श्रीगणेशले गौरीपुत्र बनेर चतुर्भुज गजाननका रूपमा अवतरित भई सिन्दूरासुरको वध गरेर पितृकल्प राजा वरेण्यलाई गणेशगीताको उपदेश गर्नुभएको विषय ज्यादै महनीय छ । वास्तवमा गणेशपुराणमा निहित गणेशगीताले अध्यात्मपथका पथिकहरूलाई सरल तर भावगम्भीर शैलीमा गन्तव्यको बोध गराउँछ । विद्वान् टीकाकार नीलकण्ठले टीका लेखिदिएर गणेशगीताको गौरव बढाइदिएका छन् । यस खण्डमा नै श्रीगणेशले कलियुगमा धूम्रवर्णको नामबाट द्विभुज अवतार लिएर असत्य र अधर्मका कारकतत्त्वहरूको विध्वंस गरी सत्य र धर्मको सुरक्षा गर्नु हुनेछ भन्ने सङ्केतसमेत गरिएको छ।

श्रीगणेशपुराणमा भक्तहरूका भावपूर्ण र चिन्तनपूर्ण स्तुतिहरू छन् । श्रीगणेशले विभिन्न अवसरमा आफ्ना भक्तहरूलाई दर्शन दिनुभएका अनेक सन्दर्भ छन् । उपासकहरूले स्तुतिहरूको माध्यमबाट श्रीगणेशको साकार ब्रह्मरूपता र निराकार ब्रह्मरूपताको मीमांसा गर्दै उहाँको विश्वव्यापी सर्ववन्द्य स्वरूपलाई साक्षात्कार गरेका मार्मिक प्रसङ्ग पनि छन् । यहाँ अन्य अवतारलीलाभन्दा विलक्षण वीर, करुणाकोमल र अध्यात्मप्रोज्ज्वल श्रीगणेशलीला स्पष्ट भएको छ । वास्तवमा श्रीगणेशको अनुपम चरित्र, विशेषता र परब्रह्मरूपतालाई हृदयङ्गम गराई गणेशतत्त्वलाई पाठकहरूको हृदयपटलमा सजाएर राखिदिन सक्ने श्रीगणेशपुराणबाहेक अरू कुनै पनि कृति दृष्टिगोचर हुँदैन ।

आशुतोष भगवान् श्रीगणेशको महिमालाई सर्वसंवेद्य बनाउने ग्रन्थ गणेशपुराण स्वयं महिमामय छ । श्रीगणेशपुराणयज्ञ लगाई श्रीगणेशको विधिपूर्वक अर्चना-उपासना गर्दै पारायण एवं प्रवचनरूप पीयूषपान गर्ने भक्तहरूका लौकिक एवं पारमार्थिक कामनाहरूलाई फलीभूत तुल्याउने विशेषताकै कारण श्रीगणेशपुराण विद्वान् एवं सर्वसाधारण उपासकहरूमा लोकप्रिय छ । लोकैषणा, वित्तैषणा एवं पुत्रैषणाको परिपूर्ति गराउने र अध्यात्मपिपासाशमन गराउने यो श्रीगणेशपुराण रिपु, रोग र ऋणद्वारा सन्त्रस्त दुःखीजनहरूका लागि सबल अवलम्बनमात्र होइन, दुःखनिवारक रामवाण पनि हो ।

श्रीगणेशपुराणमा निरूपित श्रीगणेशको बालचरित्र र श्रीमद्भागवत महापुराणमा निरूपित बालचरित्र समान छन् र दुवै समानस्तरमा हृदयाभिराम पनि छन् । कतिपय घटनाहरूमा अत्यन्त सादृश्य देखिने हुँदा यो कुन पुराणको कथा हो भन्न पनि धौ-धौ पर्छ । तसर्थ ब्रह्मवैवर्तपुराणका श्रीकृष्ण नै श्रीगणेशका रूपमा अवतरित हुनुभएको हो भन्ने भनाई यथार्थ प्रतीत हुन्छ ।

धार्मिक एवं आध्यात्मिक सौन्दर्यले अनुप्राणित श्रीगणेशपुराण साहित्यिक सौन्दर्यबाट पनि आप्लावित छ । महोत्कट गणेश, मयूरेश गणेश र गजानन गणेशका बाललीलाहरूमा वात्सल्य, वीर र अद्भुत रसको परिपाक भएको छ । दुर्जेय दानवहरूका चरित्रमा भयानक, रौद्र र बीभत्स रसको परिपाक भएको छ । सिन्धुदैत्यको वध भएपछि त्यसका माता-पिता र धर्मपत्नीको करुणक्रन्दनमा करुण रसको पूर्ण परिपाक देखिन्छ । श्रीगणेशका भक्त भुशुण्डी र शुक्ल ब्राह्मणको चरित्रनिरूपणमा भाव एवं शान्त रस अभिव्यक्त भएको पाइन्छ । पर्यन्तमा यो गणेशपुराण श्रीगणेशप्रति अपार भक्ति अभिव्यञ्जन गर्ने आर्ष काव्य भएकाले यहाँ भावकै साम्राज्य अनुभव गर्न सकिन्छ । ठाउँ-ठाउँमा शब्दसंयोजनजनित चारुताका कारण उपमा, रूपक, उत्प्रेक्षाजस्ता अर्थालङ्कार चमत्कृतिपूर्ण प्रतीतिका विषय बनेका छन् । एतावता, श्रीगेशपुराण साहित्यिक सौन्दर्यले परिपूर्ण भएको तथ्य स्पष्ट हुन्छ ।

श्रीगणेशको सर्वाङ्गीण स्वरूपसौन्दर्य, उपासना, लीला र अद्भुत पराक्रम प्रकाशित गर्ने श्रीगणेशपुराणमा नगाधिराज हिमालय, सप्तकर्णाली, सप्तगण्डकी, सप्तकोशी आदि पवित्र नदी, अनुपम प्राकृतिक सुषमा, आह्लादक संस्कृति एवं अनुपम धार्मिक सहिष्णुताले देदीप्यमान नेपालभूमिको पनि प्रकारान्तरबाट उल्लेख गरिएको पाइन्छ । विश्वको एकमात्र नदी कालीगण्डकीमा पाइने शालग्रामशिला र गण्डकीक्षेत्रको उल्लेख गणेशपुराणका अनेकौं ठाउँमा भएकाले श्रीगणेशपुराणमा नेपालको महिमामय स्थान रहेको तथ्य अवगत गर्न सकिन्छ । गण्डकीनगरमा श्रीगणेशले आफ्नो वीरलीला देखाई दैत्यराज सिन्धुको वध गर्नु भएपछि चक्रपाणिलगायतका भक्तहरूले मन्दिर बनाई श्रीगणेशमूर्तिको प्रतिष्ठा गरेको विषय गणेशपुराणमा सविस्तार वर्णन गरिएको छ । काशीमा ढुण्ढिराज गणेशको श्रीविग्रह बनाउँदा कालीगण्डकीमा पाइने शालग्रामशिलाको उपयोग गरिएको कुरा श्रीगणेशपुराणबाट ज्ञात हुन्छ । गणेशपुराणमा गण्डकीक्षेत्रलाई गणेशतीर्थका रूपमा उपस्थापित गरिएको छ । देवघाट र नारायणघाटका बीचमा पर्ने रामनगरदेखि भरतपुरतर्फ जाने बाटोमा रहेको प्राचीन गणेशमन्दिर नै गणेशपुराणमा वर्णित गणेशमन्दिर हो भन्ने त्यस क्षेत्रका

भक्तहरूको विश्वास रहेको पाइन्छ । यसरी अध्ययन गर्दा गणेशपुराणमा हिमाली सुन्दर राज्य नेपाललाई पूज्य स्थान प्रदान गरिएको देखिन्छ । गणेशपुराणमा नेपालको स्थानबारे चर्चा भएपछि नेपालमा गणेशपुराणको स्थान के कस्तो छ भन्ने जिज्ञासा प्रकट हुनु स्वाभाविक हुन आउँछ । गण्डकी-प्रस्रवणक्षेत्र नै गणेशतीर्थका रूपमा सम्मानित भएको हुनाले गण्डकीक्षेत्रअन्तर्गतका जिल्लाहरूमा गणेशपुराणप्रति प्राचीनकालदेखि नै व्यापक जनआस्था रहेको पाइन्छ । गण्डकीक्षेत्रमा पर्ने वागलुङ तथा पर्वत जिल्लाका भक्त एवं विद्वान्हरूका घरमा र अभिलेखालयहरूमा समेत गणेशपुराणका दुर्लभ पाण्डुलिपिहरूको प्राप्ति भएबाट पनि नेपालमा प्राचीनकालदेखि नै गणेशपुराणको अध्ययन-मनन, पारायण-प्रवचन एवं यज्ञको आयोजना गरिँदै आएको कुरा प्रमाणित हुन्छ । अहिले पनि गण्डकीक्षेत्रमा जे-जति गणेशपुराणयज्ञ हुन्छन् त्यति अन्य क्षेत्रमा भएको पाइँदैन । उपर्युक्त प्रस्तुतिबाट शालग्रामशिला, कालीगण्डकी र गण्डकीक्षेत्रसँग श्रीगणेशको घनिष्ठ सम्बन्ध रहेको बुझिन्छ ।

अनन्तकोटि ब्रह्माण्डका नायक ओङ्काररूप परात्पर परिपूर्ण सच्चिदानन्दघन ब्रह्मतत्त्व नै श्रीगणेशतत्त्व हो । उक्त तत्त्व नै जब लोककल्याण र विश्वशान्तिका लागि साकार हुने क्रममा गौरीनन्दन, अदितिनन्दन वा पुष्पिकानन्दन बनेर मूर्तिमान् हुन आउँछ तब त्यो लोकचक्षुगोचर बन्दछ । गणेशतत्त्व साकार हुँदा आफ्नो विलक्षण शारीरिक संरचना र अनुपम करुणामय स्वभावका कारण जन-जनको नायक विनायक बनेर सुहाउँछ ।

श्रीगणेशको साकार रूपमा अवतरणका निश्चित अवसर हुन्छन्, तर भक्तिप्रिय भगवान् गणेश भक्तहरूको आर्त पुकार हुँदा अनिश्चित अवसरहरूमा पनि प्रकट हुनुहुन्छ । वस्तुतः संसारमा अधर्मको वृद्धि, धर्मको ह्रास, नीति, नियम र नैतिकताको उपहास, स्वच्छन्दतावादको उल्लास, अशक्तहरूको सर्वनाश र सशक्त बाहुवलीहरूको जंगली राज हुँदा सत्य र धर्मको संरक्षण- संवर्धन र सती एवं सज्जनहरूको त्राण-उद्धारका लागि निराकार ब्रह्मरूप श्रीगणेशको साकार ब्रह्मरूपमा अवतरण हुन्छ । श्रीगणेशले परिस्थिति र आवश्यकता अनुसार दशभुज, षड्भुज चतुर्भुज, त्रिभुज आदि रूप लिएर लोकमाङ्गल्य गर्दै विघ्नव्यूहको निराकरण गर्नु हुन्छ ।

श्रीगणेशको अनन्तसौन्दर्यसम्पन्न साकार स्वरूप विश्वका कोटि-कोटि नर-नारीहरूका लागि आस्थाको धाम बन्दछ । श्रीगणेशको ज्योतिर्मय र कान्तिकमनीय दिव्य देहमा रहेको सूँढले छिटै अरू देवताभन्दा पृथक् रूपमा उहाँको पहिचान गराउँछ । उहाँका भुजाहरूमा रहेका अलङ्कार, आयुध र अवसरानुकूल वेषविन्यासले उहाँलाई परम वीर, परम कारुणिक, परम विस्मयधाम र परम आराध्य देवताका रूपमा चिनाउँछन् । यद्यपि श्रीगणेशका अनन्त रूप, अनन्त लीला र अनन्त चरित्र छन्, तापनि उहाँको गजाननरूप भक्तहरूका लागि विघ्नान्तक र मङ्गलमूर्तिमय बन्दछ । पार्वती र शङ्करका पुत्र, सिद्धि र बुद्धिका पति, क्षेम र लाभका पिता श्रीगणेशको दिव्य परिवार दिव्य सौन्दर्यको पर्याय बनेर रहेको छ ।

सम्प्रदायभेद, आगमभेद, आम्नायभेद, देशभेद र कालभेदका कारण श्रीगणेशको उपासना र आराधनाका विविध सरणि दृष्टिगोचर हुन्छन् । वैदिक उपासनाविधि, पौराणिक उपासनाविधि र तान्त्रिक उपासनाविधि प्रमुख विधि हुन् । श्रद्धा एवं भक्तिपूर्वक जसले, जसरी, जहिले र जुन रूपमा श्रीगणेशको आराधना गरे पनि उहाँ प्रसन्न हुनुहुन्छ, किनकि उहाँ आशुतोष हुनुहुन्छ । त्यसैले उहाँलाई क्षिप्रप्रसादन पनि भनिएको छ । श्रीगणेशपुराणको प्रथम भागको नाम नै उपासनाखण्ड भएकाले यो पुराण उपासनाकोषका रूपमा रहेको छ ।

वैदिकवाङ्मय अन्तर्गत गणेशाथर्वशीर्ष, गणेशपूर्वतापिनी उपनिषद्, गणेशोत्तरतापिनी उपनिषद् आदि ग्रन्थहरूमा श्रीगणेशलाई ओङ्काररूप परमात्मा भनिएको छ र उहाँको उपासना एवं अर्चनाका विधिहरूको निर्देश गरिएको छ । याज्ञवल्क्य स्मृति आदि धर्मशास्त्रका ग्रन्थहरूमा श्रीगणेशको उपासना र महिमाबारे प्रकाश पारिएको छ । ब्रह्मवैवर्तपुराण,

शिवपुराण, स्कन्दपुराण आदि महापुराण र गणेशपुराण एवं मुद्गल पुराणमा श्रीगणेश तत्त्व , अवतरण, लीला, स्वरूपसौन्दर्य र उपासनाको विषयमा गहन निरूपण गरिएको छ । सुमेरुतन्त्र, श्रीविद्यार्णवतन्त्र आदि अनेकौं तन्त्रग्रन्थहरूमा गणेशोपासनाका सरणि र सोपानहरूको विस्तृत वर्णन गरिएको पाइन्छ । योगसाधना, शङ्कराचार्यसिद्धान्त, रामोपासकपरम्परा, जैनसिद्धान्त र बौद्धसिद्धान्तमा समेत श्रीगणेशको आराधना-उपासनाबारे चर्चा गरिएको छ । तसर्थ, श्रीगणेश हिन्दू धर्मानुयायीका मात्र आराध्य देवता नभई जैन धर्मानुयायी एवं बौद्ध धर्मानुयायीहरूका पनि आराध्य देवता हुनुहुन्छ ।

हिन्दू एवं बौद्ध धर्मावलम्बीहरूका आस्थाका केन्द्र श्रीगणेशको नेपाली जनजीवनमा के-कस्तो प्रभाव छ भन्ने अध्ययन एवं अनुसन्धान गर्ने व्यक्तिले श्रीगणेशको ऐतिहासिक तथा सामाजिक प्रभावका दृष्टिबाट अध्ययन गर्नुपर्ने हुन्छ । सामाजिक दृष्टिबाट नियालेर हेर्दा नेपालमा बसोबास गर्ने नेपालीहरूमात्र नभई नेपालबाहिर बसोबास गरेका नेपालीहरूमा पनि सूँढिदेवता श्रीगणेशप्रति अपूर्व भक्ति र श्रद्धा रहेको पाइन्छ । वैदिक सनातन धर्मका अनुयायीहरूले प्रतिदिन घरघरमा पञ्चायन देवताको पूजा-आराधना गर्दछन् । पञ्चायनअन्तर्गतका पाँच देवतामध्ये एउटा देवता श्रीगणेश हुनुभएको हुनाले नेपालमा उहाँको नित्य पूजा-उपासना हुन्छ । प्रत्येक गृहस्थले जुनकुनै देवताको पूजा गर्दा पनि प्रारम्भिक चरणमा दीप, कलश तथा गणेशको अर्चना गर्नु अनिवार्य हुन्छ । नेपालीसमाजमा श्रीगणेशको विघ्ननिवारण गर्ने अङ्गदेवता र प्रधान देवताका रूपमा पनि अर्चना हुन्छ । यसरी श्रीगणेश सम्पूर्ण कर्ममा सर्वप्रथम पूजा गरिने देवता हुनुभएको हुनाले उहाँको स्मरण र पूजन गरिन्छ । श्रीगणेशलाई प्रसन्न तुल्याउन, कार्यसिद्धि गर्न, शत्रु, रोग एवं ऋणबाट मुक्ति पाउन, ऐश्वर्य, विद्या एवं सन्तान प्राप्त गर्न श्रीगणेशलाई मुख्य देवता बनाएर पूजा गर्ने परम्परा नेपालमा रहिआएको छ । भक्तिगीत, भजन तथा लोकगीतहरूमा पनि नेपाली समाजमा श्रीगणेशको स्मरण गर्ने परम्परा रहेको छ । नेपालीहरूले गाउँ र शहरका विभिन्न ठाउँमा मन्दिर बनाई गणेशमूर्तिको स्थापना गर्दैआएका छन् । अन्य देवीदेवताको मन्दिर बनाउँदा पनि गोपुरभित्र अनिवार्य रूपमा श्रीगणेशको मूर्ति स्थापना गर्ने परम्परा रहेको छ । सन्तान प्राप्त गर्न गणेशपुराणयज्ञ लगाई गणेशको विशेष आराधना गर्ने परम्परा रहेको छ । यसैगरी नेपालमा गणेशका मङ्गलचतुर्थीव्रत, सङ्कष्टचतुर्थीव्रत तथा वरदचतुर्थीव्रतका माध्यमबाट व्यापक रूपमा इष्टसिद्धिका निम्ति श्रीगणेशको आराधना गरिन्छ । यस प्रस्तुतिबाट श्रीगणेश सनातन हिन्दूसमाजमा अत्यन्त श्रद्धेय आराध्य देवताका रूपमा सम्मानित हुनुहुन्छ भन्ने प्रमाणित हुन्छ ।

ऐतिहासिक दृष्टिबाट अध्ययन गर्दा नेपालमा लिच्छविशासनकालभन्दा पहिलेको सामाजिक चित्र अहिलेसम्म स्पष्ट हुनसकेको छैन तापनि लिच्छविकालदेखि वर्तमान समयसम्म गणेशको आराधना, मन्दिरनिर्माण, मूर्तिप्रतिष्ठा तथा जीर्णोद्धार जस्ता विषयलाई प्रमाणित गर्ने यथेष्ट प्रमाणहरू पाइन्छन् । काठमाडौँ उपत्यकाका अष्टविनायकहरूका साथै मेचीदेखि महाकालीसम्म स्थापना गरिएका मन्दिर एवं मूर्तिहरूले प्राचीनकालदेखि अर्वाचीनकालसम्म नेपाली जनमानसमा रहेको गणेशप्रतिको अगाध भक्ति प्रतिबिम्बित गराउँछन् । प्राचीन अभिलेख, मुद्रा, मन्दिरका टुँडालहरूमा कुँदिएका मूर्ति, भित्तिचित्र र पाण्डुलिपिहरूमा कोरिएका श्रीगणेशका मुखचित्र एवं वंशावलीजस्ता ऐतिहासिक साक्ष्यहरूले लिच्छविकाल, मल्लकाल तथा शाहकालमा श्रीगणेशको अर्चना, उपासना गरिँदैआएको कुरा प्रमाणित गर्दछन् । नेपालका गणेशमन्दिर तथा मूर्तिहरूमा बौद्ध तथा हिन्दू दुवै सम्प्रदायका उपासकहरूले पूजा-आराधना गर्दैआएको पाइन्छ । नेपालमा महायान सम्प्रदायका बौद्धहरूले आ-आफ्ना घर, टोल र विहारहरूमा बौद्धसिद्धान्त अनुकूलका आयुध तथा अलङ्कारविन्यास गरिएका गणेशमूर्तिहरूमा पूजा गर्दैआएका छन् । नेपालमा बौद्धधर्मावलम्बीहरूद्वारा गणेशको पूजा-उपासना गरिने कार्य ऐतिहासिक कालदेखि नै चलिआएको पाइन्छ । हिन्दू तथा बौद्धधर्मावलम्बीहरूले

श्रीगणेशको सँगै पूजा गरी समवेत स्वरमा गणेशको प्रार्थना गरिएका दृश्य नेपालका मन्दिरहरूमा हेर्न पाइन्छ । नेपाली बौद्धलेखकद्वारा लेखिएको **गणपतिहृदयम्** नामक पुस्तकको विश्वभरि नै प्रसिद्धि रहेको छ । नेपालमा बौद्धहरूले स्थापना गरेका गणेशमन्दिर, गणेशमूर्ति र गणेशाराधनाका प्रमापक ऐतिहासिक सामग्रीहरूले नेपाली जनजीवनमा प्राचीन कालदेखि नै हिन्दू तथा बौद्धधर्मावलम्बीहरूबीच कायम रहेको सौमनस्य, सद्‌भाव एवं प्रेमभावलाई पुष्ट गर्दछन् । काठमाडौं उपत्यकामा रहेका अष्टविनायकका मूर्ति र अन्य हजारौं गणेशमूर्तिहरूले नेपाललाई गणेशमय तुल्याएका छन् । काठमाडौंका हिन्दू एवं बौद्धधर्मावलम्बी नेवारसमुदायले गणेशका शास्त्रीय स्वरूप, सिद्धान्त, लीला एवं चरित्रलाई अफ्नै भाषा-संस्कृतिमा परिणत गरेर आफ्नो संस्कृतिको विशिष्ट अङ्ग बनाएको परिप्रेक्ष्यमा भन्नुपर्दा नेपालमा श्रीगणेशलाई लोकप्रिय बनाउने कार्यमा नेवारसमुदायको महत्त्वपूर्ण योगदान रहेको प्रतीत हुन्छ । नेवारसमुदायद्वारा आफ्नै टोल एवं गल्लीहरूमा स्थापना गरिएका गणेशमूर्तिहरूका नामसमेत नेवारी भाषामा रहेको पाइन्छ । नेवारी संस्कृतिअनुसार गणेशको पूजा गर्दा आवश्यक मानिएका मङ्गलमय कलश, आरतीपात्र आदिको छुट्टै विशेषता रहेको छ ।

यस्तै लोकप्रियताका कारण नेपालका गाउँ, नगर, खोला, डाँडा, पर्वत, कुण्ड, संस्था, उद्योग, पसल एवं व्यक्तिका नामले समेत श्रीगणेशलाई आत्मसात् गरी आफूलाई परिचित गराएको पाइन्छ ।

श्रीगणेशपुराणका विभिन्न प्रसङ्गहरूमा अनेक देवता, ऋषिमुनि र अन्य भक्तहरूले गणेशको आराधना गरी गणेशको दर्शन प्राप्त गरेको सन्दर्भमा प्रसन्नतापूर्वक गणेशमूर्ति तयार गरेर मन्दिरहरूमा स्थापना गरी प्रतिष्ठा गरेको कुरा श्रीगणेशपुराणका विभिन्न प्रसङ्गहरूमा वर्णन गरिएको पाइन्छ । यसबाट गणेशमूर्ति र गणेशमन्दिरको निर्माणपरम्परा अत्यन्त प्राचीन हो भन्ने सिद्ध हुन्छ ।

नेपालमा पनि लिच्छविकालदेखि वर्तमान कालसम्म निर्मित हजारौं गणेशमूर्ति र मन्दिर रहेका छन् । काठमाडौं उपत्यकामा रहेका अशोकविनायक, जलविनायक, रक्तविनायक, सूर्यविनायक, चन्द्रविनायक, कमलविनायक, सिद्धिविनायक एवं कार्यविनायकका मन्दिरहरू भक्तहरूका निमित्त महत्वपूर्ण तीर्थस्थलका रूपमा रहेका छन् । नेपाल राज्यको मेचीदेखि महाकालीसम्म रहेका गणेशमूर्ति र मन्दिरहरूको आफ्नै महिमामय इतिहास रहेको छ ।

भारतका विभिन्न प्रान्तहरूमा एक्काइस गणपतिक्षेत्र रहेका छन् । ती एक्काइस क्षेत्र पनि विशिष्ट तीर्थस्थलका रूपमा सम्मानित छन् । भारतका साना-ठूला पचासौं प्रान्तहरूमा रहेका हजारौं गणेशमूर्ति र मन्दिरहरूले भारतीय जनजीवनमा श्रीगणेशप्रति अनुपम आस्था एवं भक्ति रहेको तथ्यलाई प्रमाणित गर्दछन् ।

नेपाल र भारतमा झैं बौद्धधर्मबाट प्रभावित जापान, श्रीलङ्का, कम्बोडिया, चीन, मङ्गोलिया, अफगानिस्तान, बर्मा, स्याम, मलाया आदि देशहरूमा पनि सैकडौं गणेशमूर्ति र मन्दिरहरू स्थापित गरिएका छन् । उपर्युक्त मन्दिर र मूर्तिहरूले श्रीगणेश देशविशेष एवं धर्मविशेषका मात्र देवता नभएर विश्वका नै आराध्य देवता हुनुभएको विषयलाई सिद्ध गर्दछन् ।

## ८.२ उपसंहार

परब्रह्मरूप श्रीगणेशको पारमार्थिक स्वरूप ओङ्कारका रूपमा ज्योतिर्मय बन्दछ भने भौतिक स्वरूप गजाननका रूपमा प्रकाशित हुन्छ । भक्तिभावनाले ओतप्रोत भई श्रीगणेशको उपासना गर्दा मानिसहरूका आधिभौतिक, आधिदैविक तथा आध्यात्मिक दुःखहरूको निवारण हुन्छ । वर्तमान समयमा समाजमा व्याप्त दुर्वासना, दुर्भावना, अनैतिकता, अनास्था, अपसभ्यता, अशिष्टता, अपसंस्कृति एवं स्वार्थदूषित प्रवृत्तिलाई निर्मूल गरी शान्त, सौहार्दमय र सदाचारसुन्दर

जीवनयापन गर्दै ज्योतिर्मय, मङ्गलमय, पावन एवं सच्चिदानन्दघन आध्यात्मिक जीवनको प्राप्तिका लागि श्रीगणेशको उपासना अचूक रामबाण हो ।

श्रीगणेशको उपासनाका अनेक रूप र रङ्गसित परिचित हुन, श्रीगणेशको अनिर्वचनीय महिमा आत्मसात् गर्न, श्रीगणेशका मङ्गलमय अवतारलीलाहरूको महिमा एवं महक प्राप्त गर्न र हृदयलाई सात्त्विक बनाएर आफूलाई उपासनाको सुपात्र बनाउन समेत श्रीगणेशका पवित्रतम लीलागाथाहरूमा आधारित श्रीगणेशपुराण अध्ययनीय एवं मननीय छ ।

उपर्युक्त परिप्रेक्ष्यमा श्रद्धालु पाठकहरूका निमित्त श्रीगणेशपुराण, श्रीगणेशतत्त्व, श्रीगणेशको अवतरण, स्वरूपसौन्दर्य, श्रीगणेशको उपासनाविधि, पावन लीला र विश्वव्यापक महिमाको बोध गराउने अनुसन्धानपूर्ण विस्तृत भूमिका र उपयोगी सामग्रीद्वारा सुसज्जित परिशिष्ट समेत संयोजन गरी नेपाली-भाषानुवादसहित श्रीगणेशपुराण प्रकाशित गरिएको छ ।

श्रीगणेशपुराणको नेपालीभाषामा अनुवाद गरी लोककल्याण एवं विश्वशान्तिमा सघाउ पुऱ्याउन वरद एवं अमोघ प्रेरणा दिनुहुने त्रिशक्तिरूपा माताश्री लीलादेवीज्यूका चरणारविन्दमा सविनय एवं सश्रद्ध प्रणाम गर्दछु । यस ग्रन्थका प्रकाशक विद्यार्थी पुस्तक भण्डारका प्रोप्राइटर श्री शान्त गौतमका साथै यस ग्रन्थका लागि शुभकामना प्रदान गर्नुहुने विद्वज्जन र अनुवाद कार्य एवं भूमिकाको निर्मितिमा सहयोग पुऱ्याउने निबन्ध, प्रबन्ध एवं लेख-रचनाका स्रष्टाहरूप्रति हार्दिक आभारिता प्रकाशन गर्दछु । गणेशपुराणको यस स्वरूपको तयारीमा आत्मीयतापूर्वक सहयोग गर्ने मित्र, बन्धु एवं परिवारजनप्रति धन्यवाद ज्ञापन गर्दछु । अन्तमा, वाङ्मयमूर्ति भगवती गौरी र सच्चिदानन्दघन श्रीगणेशप्रति भावपूर्ण नमन टक्र्याउँदै आफ्नो मन्तव्य यहीँ टुङ्ग्याउँछु । जय गणेश !

**यं निर्जरासुरनरा अखिलार्थसिद्ध्यै भूर्यन्तरायहतयेऽनुदिनं नमन्ति ।**
**तं भक्तकामपरिपूरणकल्पवृक्षं भक्त्या गणेशमखिलार्थदमानतोऽस्मि ।।**

विद्वद्वशंवद
वेणीमाधव ढकाल

# श्रीगणेशपूजाविधि

## विधिनिर्देश

कुनै पनि देवताको पूजा गर्दा सकिन्छ भने जूठो-सूतक निवारणका लागि एक साताअघि नै कपाल मुण्डन गरी घर लिपपोत गर्ने र कपडाहरू धोएर शुद्ध भई दीप, कलश, गणेश पूजा गर्नुपर्दछ । यस क्रममा आभ्युदयिक श्राद्ध, मातृका पूजा आदि पनि गरिन्छ। पुराण प्रारम्भ गर्ने दिन बिहानै उपासकले स्नान, सन्ध्या आदि नित्यकर्म सम्पन्न गरेपछि शुद्ध भई लिप-पोत गरिसकेको यज्ञमण्डपमा आई सुखासनमा पूर्वतिर फर्केर बस्नु पर्दछ । पञ्चगव्य निर्माण गरी प्राशन गर्ने-गराउने गर्नुपर्दछ । यसपछि कर्मपात्र निर्माण गरी चारैतिर जलसेचन गर्नुपर्दछ । जनै फेर्ने, शुद्ध वस्त्र धारण गर्ने र कुशको पवित्र धारण गर्ने कार्य पनि पूजाका प्रारम्भिक क्रियाकलाप हुन् । यसपछि यज्ञमण्डप वरिपरि जौ, तिल र सर्स्यूं छर्नु पर्दछ । अनि आचमन र प्राणायाम गर्नुपर्दछ ।

वेदीमा दीप, कलश, गणेश, चार सुरमा चार देवता र माझमा प्रधान देवताको रेखी हाली धान, चामल र घडा स्थापना गरेपछि बत्ती बाल्नु पर्दछ । अनि स्वस्तिवाचन गर्नुपर्छ । यसपछि प्रतिज्ञा सङ्कल्प, ब्राह्मण वरण, पुण्याहवाचन आदि यज्ञका कर्महरू गर्नुपर्दछ । पूजाका क्रममा दीप, कलश, गणेश, नवग्रह, मातृका, सरस्वती, ब्रह्मा आदि स्थापित देवताहरूको क्रमशः पूजा गर्ने विधान छ । यो पूजा सकिएपछि मण्डपबाहिर दश दिक्पालका लागि रेखी हाल्ने र रेखीमाथि धानका टपरी राखेर घडा स्थापना गरी सप्ताहमण्डपपूजाविधिअनुसार दश दिक्पालका ध्वजा-पताका, लिङ्ग आदि गाडी पूजा गर्ने विधान छ । यसपछि पुराणको पुस्तक शिरमा राखी कर्ताले पूर्णकलश लिई शङ्ख, घण्ट, चमर आदि लिएर जय-जयकार गर्दै तीन पटक मन्दिर प्रदक्षिणा गरी मन्दिरभित्र प्रवेश गर्नुपर्दछ ।

यसपछि प्रधान देवताको पूजाका लागि रेखी हालेको ठाउँमा धान, चामल, पूर्णकलश, पञ्चपल्लव इत्यादि राखेर कलशपूजाविधिले पूजा गर्नुपर्दछ । पुनः चामल राखी सर्वतोभद्र आदि यन्त्रहरू कपडामा लेखी त्यसको पनि पूजा गरी स्थालीमाथि ॐकार लेखेर चाँदीको सिंहासनमा प्रधानदेवताको सुनको प्रतिमा वा गणेशमूर्ति स्थापित गर्नुपर्दछ । त्यस प्रतिमालाई स्थापित गर्नुभन्दा पहिले अग्न्युत्तारण मन्त्र पढ्दै पञ्चगव्य र पञ्चामृतले शुद्ध पार्नुपर्दछ । यसपछि पुनः शुद्ध जलले पखाल्नुपर्दछ अनिमात्र मूर्ति स्थापना गरेर प्राणप्रतिष्ठा गर्ने विधान छ । त्यसपछि षोडशोपचारले भगवान्‌को मूर्तिको पूजा गरी पुस्तकको पूजा गर्नुपर्दछ र ब्राह्मणलाई चन्दन, अक्षता, माला, वस्त्रालङ्कार आदिले हरेक दिन पूजा गर्नुपर्दछ । यति गरिसकेपछि यज्ञ मण्डपको प्रदक्षिणा गर्नुपर्दछ र साष्टाङ्गदण्डवत् गरिसकेपछि यत्किञ्चित् जलपान गर्ने चलन छ । जलपानअघि यज्ञमण्डपबाट बाहिर ननिस्किँदै ब्राह्मणहरूले कर्तालाई प्रसाद लगाइदिने गर्नुपर्दछ । जलपानपछि लघुशङ्का आदि गरेर हात-पाउ धोई ब्राह्मण र कर्ताहरूले पञ्चगव्य खाई आ-आफ्नो आसनमा सुखपूर्वक बस्नुपर्दछ र सबैले पुष्पाञ्जलि लिई भगवान्‌को जय-जयकार गर्नुपर्दछ । यति गरिसकेपछि पुराण र प्रवचन शुरु हुन्छ ।

पुराणवाचनमा विच्छेद नगरीकन बाह्र बजेतिर मध्याह्न गर्नुपर्दछ । मध्याह्नको वेला स्वल्पाहारपछि हात-खुट्टा पखालेर (कतै - कतै मध्याह्न स्नान गर्ने चलन पनि छ) पुनः पञ्चगव्य प्राशन गरी यज्ञमण्डपमा आई धूप, बत्ती, नैवेद्य गरेर पुराणप्रवचन अगाडि बढाउने र साँझ एक दिनको पाठ सकिएपछि पुनः धूप, बत्ती गर्ने गर्नुपर्दछ । यसपछि आरती पुष्पाञ्जलि गरेर शान्तिपाठ, तिलकपाती, पञ्चामृत र प्रसाद वितरण आदि गरेर भोजन गर्नुपर्दछ । साँझ सन्ध्याकालमा सन्ध्यावन्दनादि गरी पञ्चोपचारले

स्थापित सबै देवताको सङ्क्षिप्त पूजा गर्नुपर्दछ । यसपछि प्रदक्षिणा, आरती र पुष्पाञ्जलि आदि कार्य सम्पन्न गरेर माहात्म्य भन्ने चलन छ । यति गरिसकेपछि साँझ भगवान्‌को नामसङ्कीर्तन गर्ने गरिन्छ । साँझ पनि पञ्चामृत-प्रसाद वितरण गर्नुपर्दछ । यसपछि रात्रिविश्राम हुन्छ ।

पुराणको अन्तिम दिन पुराणसम्बन्धी नित्य कर्म सकिएपछि अग्निस्थापना शुरु गर्नुपर्दछ । अग्निस्थापनालाई चतुःस्वस्तिसम्म पुऱ्याएर पुराणको दशांशले हवन, हवनको दशांशले तर्पण र तर्पणको दशांशले मार्जन गर्नुपर्दछ । हवन, तर्पण र मार्जन गर्दा प्रधान देवताको जुन मन्त्र छ त्यस मन्त्रले गर्नुपर्दछ । पूजा, हवन, तर्पण, मार्जन आदि कार्यहरू सकिएपछि गोदान, पूर्णपात्र, पुस्तकदान, गणेश र वाचक आदि ब्राह्मणहरूको दक्षिणा र भूयसी दक्षिणा आदि गर्नुपर्दछ । त्यसपछि आरती, पुष्पाञ्जलि र प्रदक्षिणा गरेर स्तुतिपाठ प्रार्थनासहित अर्घ्यनिवेदन गर्दै साष्टाङ्गप्रणाम गर्नुपर्दछ । अनि विसर्जन गर्ने र शान्तिकलशको जलले अभिषेक, तिलकपाती, रक्षाबन्धन, पञ्चामृत एवं प्रसाद ग्रहण गर्नुपर्दछ ।

सबै काम सकिएपछि शङ्ख, घण्ट आदि वाद्यहरू बजाउँदै र भजन-कीर्तन गर्दै नजिकैको ठूलो नदीमा पुष्प सेलाउन जाने चलन छ । त्यहाँ पुगेपछि पञ्चोपचारले गङ्गाजीको पूजा गरी पुष्प सेलाउने र गङ्गाजीमा बलेको बत्ती बगाइदिने एवं भेटीहरू चढाउने गर्नुपर्दछ । पुष्प सेलाइसकेपछि फूलपाती मिसिएको गङ्गाजल र पूजाको घडाको जलले समेत कर्ताहरूले कपडा लगाएरै स्नान गर्नुपर्दछ । यसपछि नभिजेको शुद्ध वस्त्र पहिरिई ब्राह्मणहरूद्वारा टीका-प्रसाद ग्रहण गरेर आशीर्वाद लिने गरिन्छ । त्यतिखेर ब्राह्मणहरूलाई टीका लगाइदिएर किञ्चित् दक्षिणा पनि दिनुपर्दछ र सबैलाई प्रसाद वितरण गरी भगवान्‌को नाम स्मरण गर्दै घर फर्किने चलन छ ।

गणेशपुराणलाई लक्षित गरी माथि विधिनिर्देश गरिएको छ । सामान्य गणेशपूजनमा परम्पराअनुसार गर्नुपर्दछ ।

**पूजाका उपचार** - गणेशपूजाका सोह्र प्रकारका उपचारहरू छन् - १) आवाहन २) आसन ३) पाद्य ४) अर्घ्य ५) आचमनीय ६) पञ्चामृत स्नान, शुद्धोदक स्नान ७) वस्त्र ८) यज्ञोपवीत ९) गन्ध १०) पुष्प, दूर्वाङ्कुर र माला ११) धूप १२) दीप १३) नैवेद्य १४) ताम्बूल (१५) आरती, दक्षिणा एवं प्रदक्षिणा १६) पुष्पाञ्जलि ।

**पूजाका चार मुख्य पात्र** - गणेशपूजनमा चार प्रकारका पात्रहरू आवश्यक हुन्छन् - १) पाद्यपात्र (यसमा जलसहित दूबो, विष्णुक्रान्ता, सामा र कमल राखिन्छ), २) अर्घ्यपात्र (यसमा जल, दही, दूबो, कुशको टुक्रा, फूल, अक्षता, कुंकुम, सर्स्यूँ र सुपारी राखिन्छ), ३) आचमनीयपात्र (यसमा जल, जाइफल, ल्वाङ् र कङ्कोल राख्नुपर्दछ) र ४) स्नानीयपात्र (यसमा अक्षता, गन्ध, पुष्प र जल राखिन्छ) ।

**पञ्चामृत** - दूध, दही, घिउ, चिनी र मह राखी पञ्चामृत तयार गर्नुपर्दछ ।

**पञ्चगव्य** - गोमूत्र, गोमय, दूध, दही र घिउमा कुशको जल मिसाई पञ्चगव्य तयार गर्नुपर्दछ ।

**पञ्चपल्लव** - वर, पीपल, आँप, डुम्री, पाँखरीका पातहरू ।

**अष्टाङ्गअर्घ्य** - जल, दूध, कुश, दही, घिउ, अक्षता, तिल र सर्स्यूँ यी वस्तु अर्घ्यका आठ अङ्ग हुन् ।

## पूजाप्रारम्भ

कर्ताले चोखो वस्त्र पहिरी नित्यकर्म सम्पन्न गरेर जनै फेरेर पूजामण्डपमा आएपछि पूजाका लागि गङ्गाजलसहित र षोडशोपचारका सामग्रीहरू आफ्नो समीपमा राख्नु पर्दछ । आचमन गरी पञ्चगव्य प्राशन गर्नुपर्दछ ।

## पञ्चगव्य निर्माणविधि

यसमा गउँत एक भाग, गोबर आधा भाग, दूध तीन भाग, दही दुई भाग, घिउ एक भाग, कुशपानी एक भाग यति सबै क्रमैसित लेखिएअनुसार मन्त्र पढ्दै एक-एक गरेर एउटा तामाको चोखो भाँडामा राख्नुपर्दछ । यसमा यथासम्भव गउँत कैली गाईको, गोबर काली गाईको, दूध सेती गाईको, दही राती गाईको र घिउ माली गाईको लिनुपर्दछ । नपाए पाँचै थोक कैली गाईको लिनुपर्दछ। त्यो पनि नपाए जस्तो गाईको पाइन्छ, त्यस्तै त्यस्तै लिनुपर्दछ। तल लेखिएका मन्त्रअनुसार पञ्चगव्य निर्माण गर्नुपर्दछ।

गउँत - **ॐ भूर्भुवःस्वः। तत्सवितुर्वरेण्यंभर्गोदेवस्यधीमहि । धियोयोनःप्रचोदयात् ।।** यो मन्त्र पढ्दै वरुणको ध्यान गरी तामाको चोखो भाँडामा गउँत राख्नुपर्दछ ।

गोबर - **ॐ गन्धद्वारान्दुराधर्षांन्नित्यपुष्टांकरीषिणीम् । ईश्वरींसर्वभूतानांतामिहोपह्वयेश्रियम् ।।** यो मन्त्र पढ्दै अग्निको ध्यान गरी गोबर राख्नुपर्दछ ।

दूध - **ॐ आप्यायस्वसमेतुतेविश्वतःसोमवृष्ण्यम् । भवावाजस्यसङ्गथे।।** यो मन्त्र पढ्दै चन्द्रमाको ध्यान गरी दूध राख्नुपर्दछ ।

दही - **ॐ दधिक्राव्णोऽअकारिषञ्जिष्णोरश्वस्यवाजिनः । सुरभिनोमुखाकरत्प्रणऽआयूꣳषितारिषत् ।।** यो मन्त्र पढ्दै वायुको ध्यान गरी दही राख्नुपर्दछ ।

घिउ - **ॐ तेजोसिशुक्रमस्यमृतमसिधामनामासिप्रियन्देवानामनाधृष्टन्देवयजनमसि ।।** यो मन्त्र पढ्दै सूर्यको ध्यान गरी घिउ राख्नुपर्दछ ।

कुश पानी- **ॐ देवस्यत्त्वासवितुःप्रसवेश्विनोर्बाहुभ्याम्पूष्णोहस्ताभ्याम् ।।** यो मन्त्र पढ्दै कुश-पानी र पवित्र राख्नुपर्दछ ।

दूबो - **ॐ काण्डात्काण्डात्प्ररोहन्तीपरुषःपरुषस्परि । एवानोदूर्वेप्रतनुसहस्रेणशतेनच ।।** यो मन्त्र पढ्दै दूबो राख्नुपर्दछ ।

त्यसपछि तलको मन्त्र पढी हातमा पवित्र लिएर पञ्चगव्य चलाउनु पर्दछ ।

**ॐ आपो हिष्ठा मयोभुवस्ता न ऊर्जे दधातन । महेरणाय चक्षसे ।।**

यसपछि तलको मन्त्र अथवा गायत्री मन्त्रले दश पटकसम्म पञ्चगव्यको अभिमन्त्रण गर्नुपर्दछ ।

**ॐ मानस्तोके तनये मा नऽआयुषि मा नो गो षु मा नोऽअश्वेषु रीरिषः ।**
**मा नो वीरान् रुद्र भामिनो बधीर्हविष्मन्तः सदमित्वा हवामहे ।।**

यसरी पञ्चगव्य बनाएर पहिले शिवजीलाई अर्पण गरेर आफूले तलको मन्त्र पढी खानुपर्दछ ।

**यत्त्वगस्थिगतं पापं देहे तिष्ठति मामके । प्राशनं पञ्चगव्यस्य दहत्वग्निरिवेन्धनम् ।।**

## कर्मपात्र निर्माणविधि

कर्ताले पञ्चगव्य प्राशन गरेपछि आसनमा बसी तीन पल्ट आचमन गर्नुपर्दछ । त्यसपछि **ॐ आधारशक्तये नमः** भनेर आफ्नो अघिल्तिर दाहिनेपट्टि भुईंमा अलिकति फूल-अक्षताहरू चढाएर त्यसमाथि तामाको एउटा चोखो भाँडो, सानो बाटा वा

थाली राख्नुपर्दछ । त्यसमा क्रमैसित तल लेखिएअनुसार मन्त्र पढ्दै पवित्र, कुश, जल, चन्दन, अक्षता, फूलहरू राखेर कर्मपात्र बनाउनुपर्दछ ।

कर्मपात्र स्थापना- ॐ यद्देवादेवहेडनन्देवासश्चकृमावयम्। अग्निर्मातस्मादेनसोविश्वान्मुञ्चत्वं हसः।।१।। ॐ यदिदिवायदिनक्तमेनां सिचकृमावयम् । वायुर्मातस्मादेनसोविश्वान्मुञ्चत्वं हसः।।२।। ॐ यदिजाग्रद्यदिस्वप्नऽएनां सिचकृमावयम् । सूर्योमातस्मादेनसोविश्वान्मुञ्चत्वं हसः।।३।। यो मन्त्र पढ्दै अक्षतापुञ्जमाथि कर्मपात्रको स्थापना गर्नुपर्दछ ।

कुशका पवित्र - ॐ पवित्रेस्थोवैष्णव्योसवितुर्वः प्रसवऽउत्पुनाम्यच्छिद्रेणपवित्रेणसूर्यस्यरश्मिभिः ।। यो मन्त्र पढ्दै कर्मपात्रमा पवित्र राख्नुपर्दछ ।

जल - ॐ शन्नोदेवीरभिष्टयऽआपोभवन्तुपीतये । शंय्योरभिस्त्रवन्तुनः।। यो मन्त्र पढ्दै कर्मपात्रमा जल राख्नुपर्दछ ।

पुष्प - ॐ श्रीश्चतेलक्ष्मीश्चपत्न्यावहोरात्रेपार्श्वेनक्षत्राणिरूपमश्विनौव्यात्तम्। इष्णन्निषाणामुमऽइषाणसर्वलोकमऽइषाण ।। यो मन्त्र पढ्दै कर्मपात्रमा पुष्प राख्नुपर्दछ ।

जौ - ॐ यवोसियवयास्मद्द्वेषोयवयारातीः।। यो मन्त्र पढ्दै कर्मपात्रमा जौ राख्नुपर्दछ ।

तिल - ॐ तिलोसिसोमदैवत्योगोसवोदेवनिर्मितः । प्रत्नमद्भिःपृक्तःस्वधयापितॄँल्लोकान्पृणाहिनःस्वाहा ।। यो मन्त्र पढ्दै कर्मपात्रमा तिल राख्नुपर्दछ ।

चन्दन - ॐ गन्धद्वारान्दुराधर्षान्नित्यपुष्टांकरीषिणीम् । ईश्वरींसर्वभूतानांतामिहोपह्वयेश्रियम् ।। यो मन्त्र पढ्दै कर्मपात्रमा चन्दन राख्नुपर्दछ ।

अक्षता - ॐ अक्षन्नमीमदन्तह्यवप्रियाऽअधूषत । अस्तोषतस्वभानवोविप्रानविष्ठयामतीयोजान्विन्द्रतेहरी।। यो मन्त्र पढ्दै कर्मपात्रमा अक्षता राख्नुपर्दछ ।

दूबो - ॐ काण्डात्काण्डात्प्ररोहन्तीपरुषःपरुषस्प्परि । एवानोदूर्वेप्प्रतनुसहस्रेणशतेनच।। यो मन्त्र पढ्दै कर्मपात्रमा दूबो राख्नुपर्दछ ।

अभिमन्त्रण - ॐ यद्देवादेवहेडनन्देवासश्चकृमावयम्। अग्निर्मातस्मादेनसोविश्वान्मुञ्चत्वं हसः।।१।। ॐ यदिदिवायदिनक्तमेनां सिचकृमावयम् । वायुर्मातस्मादेनसोविश्वान्मुञ्चत्वं हसः।।२।। ॐ यदिजाग्रद्यदिस्वप्नऽएनां सिचकृमावयम् । सूर्योमातस्मादेनसोविश्वान्मुञ्चत्वं हसः।।३।। उक्त तीन मन्त्रले कर्मपात्रको जललाई विस्तारै चलाउँदै अभिमन्त्रण गर्नुपर्दछ ।

सेचन - ॐ अपवित्रः पवित्रो वा सर्वावस्थां गतोऽपि वा। यः स्मरेत् पुण्डरीकाक्षं स बाह्याभ्यन्तरः शुचिः।। ॐ पुण्डरीकाक्षः पुनातु यो मन्त्रले कर्मपात्रको जल लिएर आफूलाई सेचन गरी अन्यत्र पनि छर्कनु पर्दछ ।

पवित्रधारण - ॐ पवित्रेस्थोवैष्णव्योसवितुर्वः प्रसवऽउत्पुनाम्यच्छिद्रेणपवित्रेणसूर्यस्यरश्मिभिः ।। यो मन्त्र पढ्दै हातमा पवित्र धारण गर्नुपर्दछ । यसपछि बत्ती बाल्नुपर्दछ ।

राजोवाच

पितुर्वाक्यरतो नित्यं श्रद्धया श्राद्धकृत् तथा ।
पिण्डदो यो गयायान्तु स पुत्रः पुत्र उच्यते ।।५९।।

अतो नीत्या समायुक्तः कुरु राज्यं ममाज्ञया ।
अमात्ययुक्तः शाधि त्वं पुत्रवच्चाखिलाः प्रजाः ।।६०।।

धर्मशास्त्रार्थतत्त्वज्ञो नीतिज्ञोऽखिलतोषकृत् ।
पितॄनुद्धरते यस्तु स पुत्रः पुत्र उच्यते ।।६१।।

अहं वनं गमिष्यामि गलत्कुष्ठोऽतिगर्हितः ।
पत्न्या सुधर्मया सार्धमनुजानीहि सुव्रत ।।६२।।

सोमकान्तले भने - पिता जीवित हुँदा तिनको आज्ञापालन गर्ने, पिता दिवङ्गत भएपछि तिथिका दिन श्रद्धापूर्वक श्राद्ध गर्ने र गयातीर्थमा गएर पिता एवं पुर्खाका लागि पिण्डदान गर्ने पुत्र नै उत्तम पुत्र मानिन्छ ।।५९।। त्यस कारण हे छोरा ! तिमीले नीतिनिष्ठ भएर मेरो आज्ञाअनुसार राज्य गर। अमात्यहरूलाई साथ लिएर तिमीले सम्पूर्ण प्रजाको पुत्रवत् पालन गर ।।६०।। जुन पुत्रले धर्मशास्त्रको रहस्य जान्दछ, सबैलाई आफ्नो व्यवहारबाट सन्तुष्ट तुल्याउँछ, नीतिशास्त्र जान्दछ र पितृहरूको उद्धारकार्यमा दत्तचित्त हुन्छ त्यसलाई नै उत्तम पुत्र भनिन्छ ।।६१।। हे सुव्रत पुत्र ! शरीरका अङ्ग-प्रत्यङ्गलाई सडाउने प्रकृति भएको यो कुष्ठरोग लाग्नाले अत्यन्त घृणित बनेको म आफ्नो सती रानी सुधर्माका साथ वन जानेछु। अहिले तिमीले मलाई वन जान अनुमति प्रदान गर ।।६२।।

ॐ

इतिश्रीगणेशपुराणान्तर्गते श्रीगणेशमाहात्म्ये सूत-शौनकादिसंवादे प्रथमोऽध्यायः

मतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोरकनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराणमाहात्म्यको पहिलो अध्याय पूर्ण भयो ।।१।।

ॐ

## द्वितीयोऽध्यायः { २ अध्याय }

ऋषय ऊचुः

कथं राजा सोमकान्तः किं वनं समुपागतः ।
किंसहायश्च किं चक्रे कर्म नो वद विस्तरात् ।।१।।

सूत उवाच

हेतवः कथयिष्यामि सोमकान्तो यथा वनम् ।
गत्वा चकार यत् कार्यं सादरं शृणुतानघाः ।।२।।

सुबलज्ञानगम्याभ्याममात्याभ्यां सुधर्मया ।
धर्मपत्न्या युतोऽरण्यं प्रविवेश दुरासदम् ।।३।।

अग्रतः प्रकृतिर्याता मध्ये राजाऽथ पृष्ठतः ।
धर्मपत्नी सुधर्माऽगात् सीतेव रामपृष्ठतः ।।४।।

एकाशनाश्च चत्वार एकचित्तासनालयाः ।
समसुखदुःखाश्चापि वनाद् वनमुपाययुः ।।५।।

क्षुधा तृषा श्रमैर्वापि निम्नोन्नतगताध्वभिः ।
अत्यन्तं कर्षिताश्छायामाश्रित्योपाविशन् क्वचित् ।।६।।

पुनर्वनान्तरं गत्वा ददृशुस्ते सरो महत् ।
यत्र वायुः सुखस्पर्शः पद्मकादम्बगन्धवान् ।।७।।

तत्र गत्वा जलं सर्वे पपुः शीतं श्रमापहम् ।
स्नात्वा नित्यक्रियां कृत्वा फलानि बुभुजुश्च ते ।।८।।

सुष्वाप च क्षणं राजा कच्छे कोमलवालुके ।
धर्मपत्नी सुधर्मा च पादसंवाहने स्थिता ।।९।।

तस्यानुमतमाज्ञाय द्वावमात्यावगच्छताम् ।
आदातुं कन्दमूलानि फलानि च बिसानि च ।।१०।।

**ऋषिहरूले सोधे** - हे सूतज्यू ! राजा सोमकान्त कुन वनमा कसरी प्राप्त भए र कसको सहयोग लिएर उनले के काम गरे ? हाम्रा यी प्रश्नहरूको विस्तारपूर्वक उत्तर दिनुहोस् ।।१।।

**सूतजीले भन्नुभयो** - हे निष्पाप मुनिजन ! राजा सोमकान्तले वनमा गएर उनले जसरी जे जे कर्म गरे तथा तिनले दुःख पाउनुमा जे-जस्ता कारण रहेका थिए ती सबैको विषयमा म बताउँछु, तपाईंहरू श्रद्धापूर्वक सुन्नुहोस् ।।२।। राजा सोमकान्त सुबल र ज्ञानगम्य नामक दुई अमात्य र सुधर्मा नामक आफ्नी महारानीका साथ दुर्गम वनमा प्राप्त भए ।।३।। वनप्रस्थान गर्दा राजाको अगाडि दुईजना अमात्य थिए, बीचमा आफैं राजा सोमकान्त थिए र तिनका पछाडि रामको पछि लागेर वन जाने सीतासमान रानी सुधर्मा हिंडिरहेकी थिइन् ।।४।। एउटै भाँडामा पाकेको भोजन गर्ने, समान चित्त, समान आसन र समान आश्रय लिएर वनवासका दिन बिताइरहेका ती चार जना एउटा वनबाट अर्को वनतर्फ नित्य यात्रा गरिरहेका देखिन्थे ।।५।। कुनै दिन भोक, तिर्खा र थकाईले क्लान्त बनेका, उकाला र ओराला बाटाहरूमा अनवरत यात्राका कारण अत्यन्त दुर्बल देखिने ती चार जना एउटा रूखको छायाँमा गएर बसेका थिए ।।६।। छायाँमा केहीबेर विश्राम गरेपछि ती सबै अर्को वनतर्फ लागे । तिनले त्यहाँ एउटा विशाल सरोवर देखे, जहाँ कमल र कदमको गन्ध बोकेको आनन्ददायक हावा प्रवाहित थियो । ।।७।। त्यहाँ ती सबैले थकाई मेटाइदिने मीठो पानी खाए । नुहाएर नित्यक्रिया सम्पन्न गरी तिनले मीठा फल पनि चाखे ।।८।। त्यसपछि राजा सोमकान्त तलाउको कोमल बालुवा भएको किनारमा निदाए । तिनकी धर्मपत्नी सुधर्मा पनि आफ्ना पति सोमकान्तको पाउ दबाएर सेवा गर्न थालिन् ।।९।। राजा सोमकान्तको आज्ञा पाएर साथमा आएका दुईजना अमात्यहरू कन्दमूल, फल र कमलका डाँठ सङ्ग्रह गर्न गए।।१०।। अमात्यहरू हिंडेपछि सुधर्माले त्यहाँ अद्भुत सुन्दर, प्रखर तेजस्वी र कान्तिद्वारा देदीप्यमान एउटा बालकलाई देखिन्। तिनले त्यस बालकलाई देखेर अद्भुत रूप भएका कारण कामदेव नै फेरि पैदा भई आएजस्तो मानिन् ।।११।।

ददर्श तत्राद्भुतरूपमुग्रं
बालं सुधर्मा प्रभया ज्वलन्तम् ।
उत्कृष्टरूपस्य कृते स्मरं तं
जातं पुरा बालमिति स्म मेने ।।११।।

दृष्ट्वैव तं सा जहृषे सुधर्मा
मेने च तं सा हितकारिणञ्च ।
क्षुब्धं प्रसन्नं हृदयं समीक्ष्या-
पकारिणं चोपकरं हि वक्ति ।।१२।।

पप्रच्छ तं कश्च कुतः प्रयातः
कस्यासि पुत्रो जननी च का ते ।
वदस्व शब्दामृतधारया मे
सखेव कर्णौ परितोषयाशु ।।१३।।

सूत उवाच

इति स्म पृष्टः स जगाद बाल-
स्तां राजपुत्रीं सुधया गिरा मे ।
पिता भृगुर्भामिनि ! मे पुलोमा
माता जलार्थी स्वगृहादिहागाम् ।।१४।।

च्यवनः खलु नाम्नाहं पितुराज्ञाकरः शुभे ।
त्वं च का कतमोऽयं ते कथं वनमिदं गतः ।।१५।।

स्रवन्ति कथमङ्गानि वर्षाकाले गिरेरिव ।
अति दुर्गन्धिता चास्य केन वा वद कर्मणा ।।१६।।

कृमिभारसमाकीर्णममुं वा सेवसे कथम् ।
स्वयं चारुतरा भूत्वा सुकुमारी सुलोचना ।।१७।।

सूत उवाच

इति पृष्टा सुधर्मा सा मुनिपुत्रेण धीमता ।
व्याचष्ट सकलं तस्मै शोकहर्षसमन्विता ।।१८।।

सुधर्मावचनं श्रुत्वा च्यवनो भृगुनन्दनः ।
त्वरया स्वमुपादाय कलशं जलसम्भृतम् ।।१९।।

दुःखितः परदुःखेन तूष्णीमेवागमद् गृहम् ।
तं भृगुः परिपप्रच्छ विलम्बकारिणं सुतम् ।।२०।।

सुधर्मा त्यस बालकको दर्शन पाएर अत्यन्त प्रसन्न भइन् । उनले त्यसलाई आफ्नो हितैषी पनि मानिन् । हुन पनि कुनै पनि क्रुद्ध मानिसलाई देख्दा यो अपराधी हो भन्ने र कुनै प्रसन्न मानिसलाई देख्दा यो उपकारी हो भन्ने कुरा आफ्नै मनले भनिरहेको हुन्छ।।१२।। सुधर्माले बालकसँग सोधिन् – बाबु तिमी को हौ ? कहाँबाट आएका हौ ? कस्का छोरा हौ ? तिम्री आमा को हुन्? यी प्रश्नहरूको उत्तर दिने सन्दर्भमा आफ्ना वचनामृतको धारा प्रवाहित गरेर मेरो मनलाई छिटो सन्तुष्ट तुल्याऊ ।।१३।।

**सूतजीले भन्नुभयो** – हे मुनिहरू ! सुधर्माद्वारा प्रश्न गरिएका ती बालकले आफ्नो अमृतमय वचनद्वारा उत्तर दिए – हे आदर्श नारी ! मेरा पिताको नाम भृगु ऋषि हो र मेरी आमालाई पुलोमा भन्दछन् । म अहिले यहाँ पानी लिन आएको छु ।।१४।। हे सुमङ्गली नारी ! मेरो नाम च्यवन हो । म पिताको आज्ञापालन गर्ने पुत्र हुँ । तपाईं को हुनुहुन्छ ? तपाईंसँग रहेका यी पुरुष को हुन् र किन तपाईं यो वनमा आउनुभएको छ ? ।।१५।। वर्षाकालमा पर्वतबाट पानीको धारा बगेझैं तपाईंका नजिक रहेका यी पुरुषका अङ्ग–प्रत्यङ्गहरूबाट किन पीप र रगतका धारा बगिरहेका छन् ? कुन कर्मले गर्दा यिनका शरीरबाट घोर दुर्गन्ध आइरहेको छ ? यी कुरा मलाई बताउनुहोस् ।।१६।। तपाईं आफू सुन्दर रूप भएकी नारी हुनुहुन्छ, सुकुमारी र सुनयना पनि हुनुहुन्छ, तर कीरैकीराको भारी बोक्ने यस्ता दुर्गन्धित र घिनलाग्दा मानिसको सेवा किन गरिरहनुभएको छ ? ।।१७।।

**सूतजीले भन्नुभयो** – हे मुनिजन ! भृगुका बुद्धिमान् छोरा च्यवनले यसरी सोधेपछि शोक र हर्षले युक्त भएकी सुधर्माले तिनलाई सबै आफ्ना कुरा बताइन् ।।१८।। सुधर्माका कुरा सुनेपछि महर्षि भृगुका छोरा च्यवन अत्यन्त दुःखित भए र छिटो –छिटो गरी कलशमा पानी भरी नबोलीकन आफ्नो घरतर्फ लागे । आफ्नो छोरालाई ढिलो आएको देखेर भृगु ऋषिले – तिमीले किन विलम्ब गर्‍यौ भनी सोधे ।।१९-२०।।

भृगुरुवाच

किमपूर्वं त्वया दृष्टं लक्ष्यसे चकितो यथा ।
विलम्बश्च कथं जातो वद पुत्र ! ममाग्रतः ।।२१।।

पुत्र उवाच

सौराष्ट्रदेशे विख्याते दैवते नगरे मुने ।
सोमकान्त इति ख्यातो राजा राजीवलोचनः ।।२२।।

चक्रे राज्यं बहुतिथं धर्मेण पालयन् प्रजाः ।
दुर्भगत्वं गतो दैवात् पुत्रे राज्यं निवेश्य सः ।।२३।।

पत्न्या सुधर्मया युक्तो भर्तुराज्ञाभृता पितः ।
सुबलज्ञानगम्याभ्यां प्रकृतिभ्यामिहागतः ।।२४।।

गलत्कुष्ठी कृमियुतो विभ्रमन् दुर्गमं सरः ।
सहस्रभगतां प्राप्तो यथेन्द्रो गौतमान् मुनेः ।।२५।।

क्व सा सुधर्मा चार्वङ्गी क्व गलत्कुष्ठवान् पतिः ।
इति मे पृच्छतो वृत्तं तदीयं गतवान् क्षणः ।।२६।।

तदीयैः करुणावाक्यैर्मनो मे कलिलं त्वभूत् ।
ततोऽहं कलशं पूर्णं कृत्वा शीघ्रमुपागतः ।।२७।।

सूत उवाच

सर्वं चाकथयत् तस्मै तया यत् कथितं वचः ।
श्रुत्वा तच्च पुनः पुत्रं च्यवनं भृगुरब्रवीत् ।।२८।।

भृगुरुवाच

सर्वानानय तान् शीघ्रं पुत्र ! गच्छ ममाज्ञया ।
द्रक्ष्यामि कौतुकं तेषां स्वीयं वा दर्शयामि तान् ।।२९।।

सूत उवाच

इत्थं स चोदितः पित्रा च्यवनः करुणानिधिः ।
जगाम सरसो भूमिं सुधर्मां द्रष्टुमुत्सुकः ।।३०।।

**भृगुले भन्नुभयो** - बाबु च्यवन ! आज तिमीले के अपूर्व कुरा देख्यौ ? तिमी आश्चर्यचकित देखिन्छौ ? किन विलम्ब भयो ? मेरा सामु सबै कुरा भन ।।२१।।

**च्यवनले भने** - हे पिताश्री ! विख्यात सौराष्ट्र देशमा देवतानगर नामक एउटा शहर छ । त्यहाँ कमलजस्ता आँखा भएका सोमकान्त नामक प्रख्यात राजा थिए ।।२२।। तिनले धर्मपूर्वक प्रजापालन गर्दै धेरै दिनसम्म राज्य गरे । दैवसंयोग तिनी कुष्ठरोगबाट ग्रस्त भए । त्यसपछि आफ्नो राज्य छोरालाई दिएर ती आज्ञापालक पत्नी सुधर्मा र सुबल एवं ज्ञानगम्य नामक मन्त्रीहरूका साथ यहीं नजिकको सरोवरमा आई बसेका छन् । कुष्ठरोगका कारण तिनको शरीरबाट रगत र पीपको धारा बगिरहेको छ । तिनको शरीर कीराहरूले ढाकिएको छ। जसरी पहिले गौतम ऋषिको सरापबाट सम्पूर्ण शरीरमा हजार योनि धारण गर्ने इन्द्र घिनलाग्दा देखिएका थिए त्यस्तै यी राजा सोमकान्त पनि घिनलाग्दा भएर तलाउको नजिकमा बसेका छन् । अत्यन्त मनोहर स्वरूप भएकी सुधर्मा कहाँ ? शरीरबाट रगत र पीपका धारा बगाउने ती पुरुष कहाँ ? यो सोचेर मलाई खुल्दुली भयो र तिनै सुधर्माका साथ संवादको क्रममा मैले धेरै समय बिताएँ ।।२३-२६।। हे पिताश्री ! ती सुधर्माका कारुणिक वचन सुनेर मेरो मन पग्लियो त्यसैले कलशमा पानी भरेर छिटो-छिटो गरी आश्रममा आइपुगें ।।२७।।

**सूतजीले भन्नुभयो** - च्यवनले आफ्ना पिता भृगुका सामु रानी सुधर्माले गरेका बिलौना सुनाए । आफ्ना पुत्रका मुखबाट सोमकान्त राजा र सुधर्मा रानीको विषयमा सबै कुरा सुनेर भृगु ऋषिले आफ्ना छोरालाई भन्नुभयो ।।२८।।

**भृगुले भन्नुभयो** - हे छोरा ! तिमी मेरो आज्ञाअनुसार छिटै सरोवरतर्फ गएर राजा सोमकान्त, रानी सुधर्मा र अमात्यहरू सुबल एवं ज्ञानगम्यलाई लिएर आऊ । मैले तिनलाई मेरै आश्रममा हेर्नेछु । मेरो मनमा तिनीहरूलाई हेर्ने कौतूहल भइरहेको छ । म राजा सोमकान्तलाई केही उपाय बताउने छु ।।२९।।

**सूतजीले भन्नुभयो** - यसरी आफ्ना पिताद्वारा अभिप्रेरित, दयालु स्वभावका च्यवन सरोवरको नजिकै रहेको सुधर्मालाई भेट्न उत्सुकतापूर्वक गए । च्यवन त्यहाँ पुग्दा फलको भारी

तस्मिन्नेव क्षणेऽमात्यौ फलकन्दभरान्वितौ ।
सुबलज्ञानगम्यौ तावागतौ राजसन्निधिम् ।।३१।।

तत ऊचे स तु मुनिः सुधर्मां चारुलोचनाम् ।
पिता मे स्वाश्रमं सर्वानाकारयति सुव्रते ।।३२।।

इति तद्वचनं श्रुत्वा सुधर्मा शोकविह्वला ।
तदैव सावधानाऽभूत् तनुः प्राण इवागते ।।३३।।

सुशीला राजपत्नी सा पीत्वा तद्वचनामृतम् ।
अगमत् सा सुचार्वङ्गी प्रकृतिद्वयसंयुता ।।३४।।

सोमकान्तेन पतिना मुनिपुत्रपुरःसरा ।
गणेशस्कन्दसहिता शिवेव शिवसंयुता ।।३५।।

शुशुभे मार्गमध्ये सा वाचस्पतिपुरःसरा ।
मन्त्रघोषयुतं प्राप भृगोराश्रममण्डलम् ।।३६।।

नानापुष्पलताकीर्णं नानापक्षिनिनादितम् ।
मार्जारा नकुलाः श्येना गजा गावो मयूरकाः ।।३७।।

भुजङ्गाः पक्षिणः सिंहा व्याघ्राः क्रीडन्ति यत्र च ।
न च वायुर्भृशं वाति न सूर्यस्तपते भृशम् ।।३८।।

न वर्षति भृशं मेघो वर्षते च तदिच्छया ।
विविशुस्ते हर्षयुता मुनिपुत्रपुरःसराः ।।३९।।

तत्राद्भुतं व्याघ्रमृगाजिनस्थं
दर्दर्श सूर्यप्रतिमं भृगुं तम् ।
राजाऽथ पत्नी प्रकृतिद्वयञ्च
ननाम बद्धाञ्जलिरब्रवीच्च ।।४०।।

राजोवाच

अद्याशिषो मे सफला द्विजेन्द्र !
द्विजेरिता धर्मचयस्तपोऽपि ।
आजन्मनोऽहं परिपूत एष
पितुर्जनन्याश्च सुजीवितं मे ।।४१।।

बोकेका सुबल र ज्ञानगम्य नामक अमात्यहरू पनि राजा बसेको ठाउँमा आइपुगे । च्यवनले त्यहाँ गएर सुनयनी सुधर्मालाई भने– हे सुव्रता नारी ! मेरा पिताश्रीले तपाईंहरू सबैलाई आफ्नो आश्रममा आमन्त्रित गर्नुभएको छ ।।३०-३२।। च्यवनका ती कुरा सुनेर शोकले विह्वल भएकी सुधर्मा प्राणको सञ्चार हुँदा शरीर सक्रिय भएझैं टाठी भइन् । सुशीला राजपत्नी ती सुधर्मा च्यवनको वचनामृत पान गरेर दुई अमात्य र आफ्ना पतिलाई साथ लिई भृगुको आश्रमतर्फ लागिन् । अगाडि मुनिपुत्र, तिनका पछि अमात्यहरू, तीपछि राजा सोमकान्त र तिनका पछि रहेकी सुधर्मा मुनिको आश्रमतर्फ जाँदा बाटाको बीचमा श्रीगणेश, स्कन्द र शिवजीका साथमा बृहस्पतिलाई अगाडि लगाएर यात्रा गरिरहेकी पार्वतीसमान देखिइन् । केही समयपछि वैदिक मन्त्रघोषले गुञ्जायमान भृगु ऋषिको पवित्र आश्रममा ती प्राप्त भइन् ।।३३-३६।। भृगु ऋषिको आश्रम अनेक प्रकारका लता र पुष्पले भरिभराउ थियो । त्यसलाई अनेक थरिका पक्षीहरूले आ-आफ्ना स्वर निकालेर ध्वनिमय तुल्याएका थिए । त्यहाँ बिराला, न्याउरी मुसा, बाज, हात्ती, गाई, मयूर, सर्प, पक्षी, सिंह, बाघजस्ता पशुपक्षीहरू आनन्दपूर्वक क्रीडा गरिरहेका थिए । त्यहाँ प्रचुर हावा थिएन र सूर्यको कडा ताप पनि थिएन । बादलले आवश्यकताअनुसार मात्र पानी वर्षाउँथे। त्यस दिव्याश्रममा ती सबै सहर्ष प्राप्त भए । तिनीहरूले त्यहाँ अद्भुत स्वरूपले सुहाएका, बाघ र मृगको छालामा विराजमान र सूर्यजस्तै चहकिला भृगु ऋषिको दर्शन गरे । राजा, राजपत्नी र अमात्यहरूले हात जोडेर भृगु ऋषिलाई प्रणाम गरे । त्यसपछि राजा सोमकान्तले नम्रतापूर्वक ऋषिलाई निवेदन गरे ।।३७-४०।।

**राजाले भने** – हे पूजनीय भृगु ऋषि ! मैले ब्राह्मणद्वारा प्राप्त गरेका ती आशीर्वादलाई आज सफल भएको अनुभव गरेको छु र मैले गरेका पुण्यकर्मलाई पनि फलीभूत भएको मानेको छु । मैले गरेका तपस्या र धार्मिक कार्यलाई परिपूर्ण भएको ठानेको छु । म घिनलाग्दो भए तापनि मैले आफूलाई जन्मदेखि नै अत्यन्त पवित्र भएको महसुस गरेको छु । मेरा मातापिताको जीवन र मेरो जीवनलाई पनि उत्तम जीवनको रूपमा परिणत भएको मानेको छु ।।४१।। पूर्वजन्ममा अर्जित

भवद्दृशिः सम्प्रति हन्त्यथैनः
पूर्वार्जितैः पुण्यचयैः कृताऽपि ।
आगामिकल्याणकरी मुनीन्द्र !
कालत्रये जन्म करोति पूतम् ।।४२।।

सौराष्ट्रदेशे खलु देवताख्ये
पुरे कृतं राज्यममोघदृष्टे !
भीतेन पापाद् द्विजदेवतादि-
पूजा कृता नीतिमता मुनीन्द्र ! ।।४३।।

आकस्मिकं मे दुरितं किमेतत्
प्रादुर्बभूवोग्रतरं दुरन्तम् ।
येनाऽहमीदृक् कुदशां प्रणीतो
जाने न किञ्चित् प्रतिकारमत्र ।।४४।।

अपायतां यान्ति कृता उपाया
युष्मत्कृतोपायमुपायमीहे ।
निर्वैरतां यान्ति हि जातिवैरा-
स्तवाश्रमे त्वां शरणं प्रपन्नः ।।४५।।

सूत उवाच

श्रुत्वेति वचनं तस्य भृगुस्तु करुणायुतः ।
उवाच सोमकान्तं तं ध्यानेनालोक्य सुव्रत ! ।।४६।।

भृगुरुवाच

उपायं वच्मि नृपते न चिन्तां कर्तु! मर्हसि ।
ममाश्रमगता दुःखं नहि विन्दन्ति जन्मिनः ।।४७।।

जन्मान्तरकृतं चैव दुरितं ते नृपोत्तम ! ।
येनेमाङ्गमितोऽवस्थां कथयिष्ये तदप्यहम् ।।४८।।

कुर्वन्तु भोजनं सर्वे चिरकालं बुभुक्षिताः ।
वनाद् वनान्तरं याताः श्रान्ताः क्लान्तानना भृशम् ।।४९।।

सूत उवाच

इत्युक्त्वा स्नापयामास सुतैलाभ्यङ्गपूर्वकम् ।
भोजयामास चान्नानि षड्रसानि त्वनेकशः ।।५०।।

गरेका पुण्यका प्रतापले मैले पाएको हजुरको दर्शनबाट मेरा वर्तमान पाप नष्ट भएका छन् । मेरा निमित्त आगामी समय कल्याणकारी हुनेछ भन्ने विश्वास गरेको छु । मैले भूत, भविष्य, वर्तमान यी तीन कालका निमित्त नै मेरो जन्म पवित्र भएको महसुस गरेको छु । ।।४२।। सौराष्ट्र देशको देवतापुरमा राज्य गरेको थिएँ । पापबाट भयभीत भई मैले ब्राह्मण र देवताको पूजा गर्दै नीतिपूर्वक राज्यसञ्चालन गरेको थिएँ, तर हे अमोघ दृष्टि भएका मुनिराज ! मलाई थाहा छैन, कुन पापबाट अकस्मात् यस्तो घिनलाग्दो रोग आइलाग्यो । यो रोग अत्यन्त कष्टदायक छ र यसको अन्त हुने केही लक्षण छैन । यस्तो घिनलाग्दो अवस्थामा पुगेको मैले यस रोगको निराकरण गर्ने कुनै उपाय जान्न सकेको छैन। जति उपाय गरें, ती सारा व्यर्थ भए । यस बेला हजुरजस्ता तपस्वी र सिद्धपुरुषको उपदेश नै मेरा निमित्त अमोघ उपाय हुनेछ । मेरो यही आकाङ्क्षा छ । हजुरको पवित्र आश्रममा रहेका जन्मजात द्वेष हुने प्राणीहरू पनि द्वेष छाडेर परस्परमा आनन्दका साथ क्रीडा गरिरहेका छन् । यस्तो पवित्र स्थानमा मेरो पनि रोगनिवारण हुनेछ भन्ने विश्वासका साथ म हजुरको शरणमा परेको छु ।।४३-४५।।

**सूतजीले भन्नुभयो** - राजाका यी कुरा सुनेर दयालु भृगु ऋषिले ध्यानपूर्वक सोमकान्तको विषयमा विचार गरी हे सुव्रत ! मेरो कुरा सुन्नुहोस् भन्दै आफ्ना कुरा राख्नुभयो ।।४६।।

**भृगुले भन्नुभयो** - हे राजा ! म तपाईंको रोगनिवारणका लागि उपाय बताउँछु । तपाईंले कुनै प्रकारको चिन्ता लिनुपर्दैन। मेरो आश्रममा आएका प्राणीहरूले दुःखको अनुभव गर्दैनन् । हे राजा ! जन्मान्तरमा गरेको जुन पापले आज तपाईं यस्तो डरलाग्दो र घिनलाग्दो अवस्थामा पुग्नुभएको छ त्यस पापको विषयमा पनि म बताउने छु । तपाईंहरू धेरै दिनसम्मको भोकले पीडित हुनुहुन्छ । एउटा वनबाट अर्को वनमा भौंतारिदा तपाईंहरू धेरै थाक्नुभएको छ र ओइलाउनुभएको छ । त्यस कारण सर्वप्रथम भोजन गर्नुहोस् ।।४७-४९।।

**सूतजीले भन्नुभयो** - भृगु ऋषिले यस्ता कुरा गर्नुभएपछि आफ्ना आश्रमका मानिसहरूद्वारा राजालाई उत्तम तेलले मालिश गराएर स्नान गर्न लगाउनुभयो । त्यसपछि छ प्रकारका रसले परिपूर्ण अनेक थरि मिष्टान्न र भोजन खुवाउनुभयो।

बुभुजुस्तेऽपि विश्रान्ता भृगोरमिततेजसः ।
आज्ञया मुनिवर्यस्य सुस्नाताः सुष्ठ्वलङ्कृताः ।।५१।।

सुषुपुर्मृदुशय्यायां हित्वा चिन्तां दुरत्ययाम् ।
मुनिना कल्पितायां ते स्वराज्यङ्गमिता इव ।।५२।।

तिनीहरूले पनि आराम गरी अत्यन्त तेजस्वी भृगु ऋषिको आज्ञाअनुसार राम्रोसँग स्नान गरेर राम्रा लुगा-गहनाहरू धारण गरेपछि भोजन गरे । भविष्यको पीडादायक चिन्तालाई छाडेर आनन्दपूर्वक भृगु ऋषिद्वारा आराम गर्न प्रदान गरिएको शय्यामा शयन गरे । त्यस बेला तिनीहरूले आफूले राज्य प्राप्त गरेसरह महान् सुखको अनुभव गरिरहेका थिए ।।५०-५२।।

ॐ

इतिश्रीगणेशपुराणान्तर्गते श्रीगणेशमाहात्म्ये सूत-शौनकादिसंवादे द्वितीयोऽध्यायः

सनौशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोरकनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराणमाहात्म्यको दोस्रो अध्याय पूर्ण भयो ।।२।।

ॐ

## तृतीयोऽध्यायः

ऋषय ऊचुः

तत्र गत्वा किमकरोत् सोमकान्तो नृपस्तदा ।
उपायः कथितः को वा भृगुणा सर्ववेदिना ।।१।।

कथयस्व कथामेतां शृण्वतां नो द्विजोत्तम ।
न तृप्तिमधिगच्छामः पीत्वा त्वद्वचनामृतम् ।।२।।

सूत उवाच

सम्यक् पृष्टं महाभागा यूयं तु ज्ञानसागराः ।
शृण्वन्तु कथयिष्यामि सोमकान्तकथामतः ।।३।।

तस्यां रात्र्यां व्यतीतायां दिननाथे तथोदिते ।
स्नानं सन्ध्यां जपं होमं कृत्वा स भृगुसत्तमः ।।४।।

स्नाताय कृतजप्याय पत्नीप्रकृतिसंयुजे ।
पूर्वजन्मकथां तस्मै राज्ञे कथितुमारभत् ।।५।।

भृगुरुवाच

कोल्हारनगरे रम्ये विन्ध्याचलसमीपतः ।
चिद्रूप इति विख्यातो वैश्यो बहुधनोऽभवत् ।।६।।

तस्य भार्या तु सुभगा नाम्ना ख्याता सुलोचना ।
सुशीला दानशीला च पतिवाक्यपरा सती ।।७।।

तस्यास्त्वं पुत्रतां यातो भवे पूर्वे नृपोत्तम ।
कामन्द इति ते नाम चक्रतुस्तौ द्विजेरितौ ।।८।।

अतिस्नेहं दिवारात्रावतिलालनमेकके ।
वार्धक्यकालजे तौ तु पितरौ त्वयि चक्रतुः ।।९।।

विवाहं चक्रतुस्तौ तु धनकौतुकमङ्गलैः ।
मृगाक्षी सुकुमाराङ्गी नाम्ना ख्याता कुटुम्बिनी ।।१०।।

अनुरक्ता त्वयि सदा द्विजदेवाऽतिथिप्रिया ।
बभूव योषिद् योषित्सु रत्नभूताऽतिसुन्दरी ।।११।।

कुटुम्बिनीति स्वं नाम विदधे सार्थकं तु सा ।
सप्तपुत्रा पञ्चकन्या पञ्चबाणप्रिया नु किम् ।।१२।।

## { ३ अध्याय }

**ऋषिहरूले भने** - हे सूतज्यू ! भृगु ऋषिको आश्रममा गएपछि सोमकान्त राजाले के गरे ? र सर्वज्ञ ऋषि भृगुले कस्तो उपाय बताए ? ।।१।। हे सूतज्यू! हामी श्रद्धालु स्रोताहरूलाई अरू कथा सुनाउनुहोस् । हजुरको मुखबाट उपदेशामृत पान गरेर हामी कहिल्यै पनि अघाउँदैनौं ।।२।।

**सूतजीले भन्नुभयो**– हे भाग्यशाली ऋषिहरू ! तपाईँहरू त स्वयं ज्ञानका सागर हुनुहुन्छ । तपाईँहरूको जिज्ञासालाई आत्मसात् गरेर म राजा सोमकान्तको कथा बताउँदैछु । तपाईँहरू आदरपूर्वक त्यो कथा सुन्नुहोस् ।।३।। त्यो रात बितेपछि अर्को दिन सूर्यनारायणको उदय भयो र भृगु ऋषिले स्नान, सन्ध्या, जप र होम सम्पन्न गरेपछि स्नान गरी मन्त्र जप गरेर आफ्नी पत्नी र अमात्यहरूका साथ रहेका राजा सोमकान्तलाई तिनकै पूर्वजन्मको कथा सुनाउन आरम्भ गर्नुभयो ।।४-५।।

**भृगुले भन्नुभयो** – विन्ध्याचल नजिकै रमणीय कोल्हार नगरमा अत्यन्त धनी चिद्रूप नामक वैश्य बस्दथे । तिनकी पत्नी सुभगा अत्यन्त राम्री, सुशीला र परोपकारपरायण नारी थिइन् । तिनले आफ्ना पतिको आज्ञा कहिल्यै पनि उल्लङ्घन गर्दैनथिन् । हे राजा सोमकान्त ! तपाईँ पूर्वजन्ममा तिनै सुभगाका छोरा भएर जन्मनुभएको थियो । ती वैश्यदम्पतीले ब्राह्मणबाट जुराएर तपाईँको नाम कामन्द राखेका थिए ।।६-८।। वृद्धावस्थामा जन्मनुभएका एउटा मात्र छोरा हुनुभएका कारण तपाईँका मातापिताले तपाईँप्रति अत्यन्त गहिरो स्नेह गर्दथे ।।९।। युवावस्थामा पुगेपछि तपाईँका बाबु-आमा वैश्य दम्पतीले प्रशस्त धन खर्च गरेर ठूलो उत्सवका साथ मङ्गल गर्दै विवाह गरिदिए । मृगका जस्ता आँखा भएकी एउटी कुटुम्बिनी नामक कोमलाङ्गी नारी तपाईँकी पत्नी भएर आइन् ।।१०।। ती कुटुम्बिनी तपाईँप्रति अत्यन्त अनुरक्त थिइन् । तिनले श्रद्धा र प्रेमका साथ ब्राह्मण, देवता र अभ्यागतको सेवा -सत्कार गर्दथिन् । वास्तवमा ती संसारका नारीरत्नहरूमा पनि उत्तम नारीरत्न थिइन् ।।११।। तिनले सबैप्रति कुटुम्बको जस्तो व्यवहार गरेर आफ्नो कुटुम्बिनी भन्ने नामलाई सार्थक तुल्याएकी थिइन् । कामदेवकी पियारी रतिजस्ती राम्री ती कुटुम्बिनीले सात भाइ छोरा र पाँच बहिनी छोरी जन्माइन्।।१२।। छोरा-छोरी जन्मेका धेरै दिनपछि तपाईँका

ततो बहुतिथे काले पञ्चत्वमगमत् पिता ।
माता तव सती तेन सह दग्धा दिवं गता ।।१३।।

ततस्त्वं सखिवर्गैस्तद् द्रव्यं नाशितवान् बहु ।
नीतं नष्टं भक्षितं च विनाशमगमद् धनम् ।।१४।।

चिन्तया धर्मपत्नी त्वां निराकृतवती भृशम् ।
न गृहीतं तु तद्वाक्यं ततो विक्रीतवान् गृहम् ।।१५।।

गता सा बालकैः सार्धमनुज्ञाता पितुर्गृहम् ।
अपत्यपोषणकृते ऋते त्वां वंशकण्टकम् ।।१६।।

तत उद्वृत्ततां यात उन्मत्त इव मद्यपः ।
अन्यायकारी नगरे जातो मत्त इव द्विपः ।।१७।।

परस्वहारो वनितासु जारो
ग्रामेषु चोरो जनतापकारः ।
द्यूतेषु वीरो वृजिनौघसारो
हिंसाविहारो बलहीनशूरः ।।१८।।

ये ये जनास्ते सुखसङ्गतृप्ता-
स्तेभ्यो गृहीत्वा बहुवित्तमादः ।
निक्षेपतः पितृकृतात्सुहृद्भ्यो
मिषात्कुतश्चिन्नगरस्थितेभ्यः ।।१९।।

शपथाननृतांश्चकर्थ नून-
मनृतानां प्रमदाजनेषु साक्ष्यम् ।
इति सर्वजनाः सुभीतिमापु-
रुरगात् सद्मगतादिवोग्रवीर्यात् ।।२०।।

पिता दिवङ्गत भए । तपाइँकी आमा सुभगा पनि पतिव्रता नारी भएका कारण आफ्ना पतिको चितामा जलेर दिवङ्गत भइन् ।।१३।। माता-पिताको मृत्युपछि तपाइँ आफ्ना मित्रहरूका साथमा लागेर दुर्व्यसनमा फस्नुभयो । तपाइँले आफ्ना पिताको ठूलो सम्पत्ति र धनको नाश गर्नुभयो। तपाइँको धन चोरले हरे, श्रीसम्पत्ति नष्ट-भ्रष्ट भयो र तपाइँ आफैले पनि दुरुपयोग गर्नुभयो। यसरी तपाइँका पिताले आर्जेको असङ्ख्य धनराशि समाप्त भयो ।।१४।। तपाइँकी धर्मपत्नी कुटुम्बिनीले चिन्तित भएर तपाइँलाई पटक-पटक त्यसो नगर्न अनुरोध गरिन् । परन्तु तपाइँले तिनका कुरा कहिले पनि सुन्नुभएन । बरु आफ्ना पिताको घर नै बेँचिदिनुभयो । बालक-बालिकाका साथमा रहेकी बिचरा ती कुटुम्बिनी अनाथ भइन् । के खानू ? कहाँ जानू ? कहाँ बस्नू ? यस्ता प्रश्नहरू उनका सामु थिए । अन्तमा उपाय नभएर तपाइँसँग आज्ञा मागीकन तिनी आफ्ना लालाबाला साथमा लिएर पिताको घरतर्फ लागिन् । बालबच्चाको पालनपोषणका लागि तपाइँजस्तो कुलकण्टकलाई छाडेर तिनले माइतीको शरण लिनुभ्यो ।।१५-१६।। कुटम्बिनीले छाडेपछि तपाइँ चरित्रहीन र मदिरापान गर्ने मानिसझैं उन्मत्त हुनुभयो। मत्ता हात्तीझैं व्यवहार गरेर तपाइँले जनतालाई तर्साउनु भयो र अन्यायकारी दुर्जनका रूपमा प्रसिद्ध हुनुभयो ।।१७।। तपाइँले परधनको अपहरण गर्नुभयो, परस्त्री एवं परपुत्रीहरूको धर्म लुट्नु भयो र गाउँ-गाउँमा चोरी एवं डकैती गराएर त्राहि-त्राहि मचाउनुभयो । तपाइँले जनताको कति अपकार गर्नुभयो त्यसको ठेगान रहेन । जूवा खेल्ने काममा आफूलाई वीर ठान्ने तपाइँ पापको पुञ्ज नै बन्नुभयो । हिंसासँग विहार गर्दै तपाइँले निर्बलसँग शूरता देखाउनुभयो ।।१८।। जुन मानिस तपाइँको सङ्गत पाएर रमाउँथे तिनीहरूबाट धेरै धनसम्पत्ति लिएर तपाइँले खाने-पिउने काम गर्नुभयो । तपाइँले केही ठाउँबाट पैतृक सम्पत्ति धितो राखेर पैसा ल्याई चलन गर्नुभयो । कतिपय आफ्ना मित्रहरूसँग गई अनेक निहुँ बनाएर पैसा ल्याउनुभयो। फेरि नगरका ठूला-बडा मानिसहरूकहाँ गएर पनि उधारो धन ल्याई त्यसको दुरुपयोग गर्नुभयो ।।१९।। तपाइँले झूटो शपथ खाने काम गर्नुहुन्थ्यो । असत्य भाषण गरेर सुन्दर युवतीहरूका नजिकमा गई झुट्टा मानिसहरूलाई साक्षी राखेर तिनीहरूसँग आहार-विहार र भोग गर्नुहुन्थ्यो । तपाइँको यस चरित्रबाट कोल्हार नगरका सबै मानिसहरू घरभित्र रहेको प्रचण्ड सर्पसँग डराएझैं

असह्यतां तेन जनस्य यातो
गोक्षूरकः पायसगो यथैव ।
राज्ञो गृहीत्वाऽनुमतिं जनास्ते
निर्वापयामासुरतो पुरात् त्वाम् ।।२१।।
वने स्थितस्त्वं बहुजन्तुघाती
स्त्रीबालवृद्धान् विनिहंसि नित्यम् ।
महाजनं वीक्ष्य पलायसे च
सिंहं निरीक्ष्येव वृको मृगो वा ।।२२।।
मत्स्यान् बकान् सारसकुक्कुटांश्च
वृकान् मृगान् वानरकोकिलांश्च ।
हत्वाऽस्ति खड्गान् शशकांश्च गोधा
मुधा स्वदेहं वृजिनादपोषः ।।२३।।
त्वं च मार्गे जनान् दीनान् हत्वा हत्वा गुहाङ्गतः ।
चोरैः सबालयोषिद्भिर्भासि राजेव तद्रतः ।।२४।।
कदाचिद् ब्राह्मणो विद्वान् विख्यातो गुणवर्धनः ।
मध्याह्ने मार्गमध्ये तु त्वया दृष्टः स एककः ।।२५।।
गृहीत्वा दक्षिणं पाणिं तं विप्रं धृतवानसि ।
स वेपमानस्त्वद्बुद्धिं जानन् धर्षणया तया ।।२६।।
ऊचे त्वां स्वान्तकं मत्वा मूर्च्छितो जीवितेच्छया ।
अत्यन्तं करुणावाक्यैर्बोधयँस्त्वां सहेतुकैः ।।२७।।

गुणवर्धन उवाच

धनवान् सुभगो भूत्वा कथं मां हन्तुमिच्छसि ।
द्विजं नवोढाभर्तारं शान्तं चानपराधिनम् ।।२८।।

चोर उवाच

क्वेयं मम मतिर्मूढ ! क्वोपदेशस्तवाप्ययम् ।
तत्त्वचिन्तेव मधुपे साम्प्रतं मे न रोचते ।।२९।।
अन्तिके त्वं निसृष्टोऽसि व्यापाररहितस्य मे ।
विधात्रा दैवयोगेन न त्वां मुञ्चामि कर्हिचित् ।।३०।।

भृगुरुवाच

इत्युक्त्वा निशितं खड्गं हस्त आदाय दक्षिणे ।
चकर्ताऽथ शिरस्तस्य विडाल इव मौषकम् ।।३१।।

डराउँथे ।।२०।। खीरमा गाईको खुर परेजस्तै तपाईँ पनि अरूका निमित्त असह्य हुनुभयो । त्यसपछि त्यहाँका जनताले राजासँग अनुमति लिएर तपाईँलाई कोह्लारपुरबाट टाढा भगाए ।।२१।। भागेर वनमा पुगेका तपाईँले अनेक जीवजन्तुहरूको हत्या गर्नुका साथै बाटोमा हिँड्ने स्त्री, पुरुष, बालक र वृद्धहरूको पनि हत्या गर्नुभयो। त्यस बेला बाघलाई देखेर ब्वाँसो र मृग भागेजस्तै तपाईँ पनि बलिया मानिस देखेपछि डरले भाग्नुहुन्थ्यो ।।२२।। वनमा भौँतारिने क्रममा माछा, बकुल्ला, सारस, कुखुरा, ब्वाँसो, मृग, बाँदर, कोइली, गैँडा, खरायो, गोहोरोजस्ता प्राणीहरूको पनि हत्या गरेर तपाईँले पापकर्मबाट शरीरको पोषण गर्नुभयो ।।२३।।

तपाईँ बाटोमा हिँड्ने बटोहीहरूलाई लुटेर, मारेर गुफामा गएर लुक्नु हुन्थ्यो । स्त्री र बच्चाहरूका साथमा रहेका कतिपय चोरहरू तपाईँसँग रहने गर्दथे। तपाईँ भने तिनकै राजासरह जीवन बिताइरहनु भएको थियो ।।२४।। कुनै दिन मध्याह्नमा एक जना विद्वान् ब्राह्मण गुणवर्धन बाटामा हिँडिरहेका थिए । ती एक्लै थिए । तिनलाई देखेर तपाईँले आक्रमण गर्नुभयो । तिनको दायाँ हात समातेर बाँध्नुभयो। विचरा काँपिरहेका ती ब्राह्मणले तपाईँको व्यवहार देखेर डराई तपाईँलाई यमराज ठाने । तिनले अब मेरो अन्त हुन्छ भन्ने कुरा जानेर केही बेर मूर्च्छित भई होशमा आएपछि जीवनदानका लागि प्रार्थना गरे। अत्यन्त करुणामय वाक्यको उच्चारण गरेर तपाईँलाई उद्बोधन गर्दै भने ।।२५-२७।।

**गुणवर्धनले भने -** हे सज्जन ! तपाईँ धनवान् र सुन्दर हुनुहुन्छ । म वृद्ध ब्राह्मण हुँ र भर्खर विवाह भएकी युवती पत्नीको पति पनि हुँ । म शान्त स्वभावको छु र मैले केही अपराध गरेको छैन । मलाई किन मार्दै हुनुहुन्छ ? ।।२८।।

**चोरले भन्यो-** म जस्तो कठोर मानिसको बुद्धि कहाँ ? तपाईँको यो उपदेश कहाँ ? यिनको तुलना नै हुन सक्दैन । बस कारण मलाई तपाईँको यो उपदेश मन परेको छैन ।।२९।। उद्योगधन्दा केही नभएको, चोरी गरेर पेट पाल्ने मेरासामु विधाताले तपाईँलाई पठाएका छन् । दैवयोगबाट प्राप्त हुनुभएका तपाईँलाई मैले कुनै हालतमा पनि छाड्न सक्दिनँ ।।३०।।

**भृगुले भन्नुभयो -** हे राजन् ! यसरी उत्तर दिएर चोरका रूपमा रहनुभएका तपाईँले दायाँ हातमा तीखो धार भएको तरबार लिएर बिरालाले मुसाको टाउको चोइटयाएझैँ ती ब्राह्मणको शिर

एवं ते ब्रह्महत्यानां सङ्ख्यां कर्तुं न शक्यते ।
स्त्रीबालवृद्धजन्तूनां हत्यानाञ्च विशेषतः ।।३२।।

सङ्ख्याता परपापानां विभागी जायते यतः ।
ततो बहुतिथे काले गते कामन्द ! ते जरा ।।३३।।

आगताऽथ कफो ग्लानिः स्वेदो हिक्काऽथ वेपथुः ।
अभूत् तन्द्री चोपविष्टे प्रसुप्ते न च साऽभवत् ।।३४।।

अनादरञ्च चक्रुस्ते पुत्रा दास्योऽथ सेवकाः ।
सुहृदश्च सुताश्चापि नप्तारोऽथापि मित्रकाः ।।३५।।

ततोऽनुतापो मनसि जातः कामन्द ! ते भृशम् ।
आमयात् स्वजनैस्त्यागाद् ब्राह्मणैः परिवर्जनात् ।।३६।।

जीर्णदेवालयोद्धारेऽभवत् ते मतिरूर्जिता ।
धनं स्वं विपुलं वीक्ष्य कुप्यरत्नादिसंयुतम् ।।३७।।

ततोऽनादिः परामूर्तिर्गणेशस्य वने शुभा ।
जीर्णदेवालये क्षुद्रे स्थिता ते कथिता द्विजैः ।।३८।।

ततोऽतिविस्तृतं दीर्घं चतुस्तोरणसंयुतम् ।
चतुर्द्वारं सुरुचिरं चतुःशिखरशोभितम् ।।३९।।

नानास्तम्भचितं नानावेदिभिः परिवारितम् ।
मुक्ताप्रवालरत्नाद्यैः खचितं रुचिराङ्गणम् ।।४०।।

नानापुष्पद्रुमयुतं नानाफलद्रुमैश्चितम् ।
चतुर्दिक्षु चारुवारिमयवापीविराजितम् ।।४१।।

प्रासादं निर्मितवतस्तद् द्रव्यं ते व्ययं गतम् ।
किञ्चित् स्त्रिया च पुत्रैश्च सुहृद्भिर्बन्धुभिर्हृतम् ।।४२।।

ततो नातिचिरे काले पञ्चत्वञ्च गतो भवान् ।
याम्यदूतैः कशाघातैर्बद्धः सन्ताडितो भृशम् ।।४३।।

टुक्र्याउनु भयो ।।३१।। यसरी हेर्दा तपाईंले पूर्वजन्ममा गरेका ब्रह्महत्याहरूको गणना गर्न सकिँदैन । खास गरी स्त्रीहत्या, बालहत्या र जीवहत्याको गणना गर्न त झनै सकिँदैन ।।३२।। अरूले गरेका पापकर्मको चर्चा अथवा गणना गर्ने मानिसले त्यस पापको फलभोगमा भागीदार हुनुपर्छ भन्ने शास्त्रीय मान्यता रहेको छ । त्यस कारण पनि तपाईंले गरेका पापकर्मको म चर्चा गर्न चाहन्नँ। हे तत्कालीन कामन्द र अहिलेका सोमकान्त! तपाईँलाई त्यसपछि वृद्धावस्थाले आक्रमण गर्‍यो । कफ, ग्लानि, पसिना, बाडुली र कम्पनजस्ता वृद्धावस्थामा हुने दोषहरू तपाईंमा आइलागे । बसेको बेला ऊँघ लाग्ने र सुतेका बेला ऊँघ नलाग्ने स्थिति भयो । तपाईंका छोरा-छोरी, दास-दासी, नाति-नातिनी, मित्र र शुभचिन्तकहरूले पनि तपाईंको अनादर गर्न थाले ।।।३३-३५।। हे सोमकान्त ! अथवा पूर्वजन्मका कामन्द ! त्यो घटनापछि वृद्धावस्थाजनित रोगबाट पीडित हुनाले, आफन्तहरूले छोडिदिनाले र तपस्वी ब्राह्मणहरूले पतितका हातबाट गरिएको दान लिँदैनौं भनी तिरस्कारपूर्वक वर्जना गर्नाले तपाईँलाई मनमा साह्रै पछुतो लाग्यो र तीव्र वेदनाको अनुभव पनि गर्नुभयो।।३६।। त्यसपछि आफूसँग धातु, उपधातु, रत्न आदि सहित धेरै धन भएको जानेर तपाईँको बुद्धि जीर्ण मन्दिरको उद्धारकार्यमा प्रवृत्त भयो ।।३७।। केही ब्राह्मणहरूले तपाईँलाई वनमा रहेको सानो र जीर्ण मन्दिरमा श्रीगणेश भगवान्को प्राचीन मङ्गलमय उच्चकोटिको मूर्ति रहेको समाचार सुनाए।।३८।। त्यो कुरा सुनेर तपाईँले त्यहाँ गई मन्दिरमा रहेको श्रीगणेशको मूर्ति देखेपछि लम्बाइ र चौडाइ दुवै दृष्टिबाट फैलिएको, विशाल, चार तोरण भएको, चार ढोका भएको, चार बुर्जा भएको, अनेक स्तम्भहरूले खचित, अनेक मण्डपहरूले शोभायमान, मोती-मुगा आदिबाट सुसज्जित, सुन्दर प्राङ्गण भएको, अनेक फूलका वृक्षले घेरिएको, अनेक फलका वृक्षले शोभायमान र चारै दिशामा सुन्दर सङ्लो पानी भएका पोखरीले सुहाएको भव्य श्रीगणेशको मन्दिर बनाउनुभयो। उक्त मन्दिरको निर्माण गर्दा तपाईँसँग रहेको सम्पूर्ण धन खर्च भयो । त्योभन्दा पहिले तपाईँको धेरै धन वेश्या, मित्र र बन्धुहरूले अनेक निहुँमा खर्च गरिसकेका थिए।।३९-४२।। मन्दिर निर्माणपछि तुरुन्तै तपाईँको देहावसान भयो। तपाईँलाई यमदूतहरूले बाँधी धेरै कालसम्म दण्डप्रहार गरे, काँडाको घारीमा फ्याँकिर अङ्ग-प्रत्यङ्गमा घाउ

कण्टकैर्विद्धसर्वाङ्गः शिलायां पोथितोऽपि च ।
मज्जितो नरके घोरे पूयशोणितकर्दमे ।।४४।।

एवं नीतस्तु तैर्दूतैश्चित्रगुप्तयमान्तिके ।
यमेन पृष्टः किं पुण्यमुत भोक्ष्यसि पातकम् ।।४५।।

त्वमवोचः पुण्यमहं पूर्वं भोक्ष्यामि सूर्यज !
ततः सौराष्ट्रदेशे त्वं राजत्वेन विनिर्मितः ।।४६।।

इति ते कथितं पूर्वजन्म पापकरं मया ।
शरणागतकारुण्यात् तपोबलसमाश्रयात् ।।४७।।

कान्तप्रासादकरणात् सोमकान्तोऽभवो नृपः ।
कान्तया कान्ततरया भासि कान्त्या शशी यथा ।।४८।।

सूत उवाच

भृगुणाऽभिहितं श्रुत्वा सोमकान्तो नृपाधमः ।
तद्वाक्ये संशयापन्न आसीदश्मेव निष्क्रियः ।।४९।।

वेदशास्त्रार्थविदुषो भूतभाविभवद्विदः ।
तपस्विनो भृगोर्वाक्ये यतः स संशयं दधौ ।।५०।।

निरगन् क्षणमात्रेण तस्याङ्गात् पक्षिणो भृशम् ।
नानावर्णाकृतिधरा बभक्षुर्नृपतिं तदा ।।५१।।

उड्डीयोड्डीयचञ्च्वग्रैर्ददंशुर्नृपशुं दृढैः ।
उत्कृत्योत्कृत्य मांसानि जक्षुस्ते मुनिसन्निधौ ।।५२।।

ततोऽतिदुःखिततनुः शरणं पुनरागतः ।
अवदद् दीनया वाचा भृगुं ज्ञानतपोनिधिम् ।।५३।।

राजोवाच

त्वद्वने जातिवैराणां परस्परभयं न हि ।
त्वत्समक्षं कथमिमे मृतं मां मारयन्ति च ।।५४।।

बनाए, ढुङ्गामाथि तपाईँलाई पछारे र पीप र रगतको हिलोले भरिएको नरकमा लगेर डुबाए। यमदूतहरूले यस्ता धेरै किसिमका यातना दिएपछि तपाईँलाई चित्रगुप्त र यमको नजिकमा पुऱ्याए। त्यस बेला यमराजले पहिले पुण्यको फल भोग्न चाहन्छौ अथवा पापको फल भनी सोधेका थिए।।४३-४५।। यमराजले त्यसरी सोधेपछि तपाईँले भन्नुभयो - हे धर्मराज ! म सर्वप्रथम पुण्यको फल भोग्न चाहन्छु । त्यसपछि तपाईँ सौराष्ट्र देशको राजा सोमकान्तको रूपमा पैदा हुनुभयो ।।४६।। शरणमा आएका तपाईँमाथि दया लागेर मैले आफ्नो तपस्याको सामर्थ्यबाट तपाईँको पापमय पूर्वजन्मको बयान गरेँ । श्रीगणेशको अत्यन्त सुन्दर एवं भव्य मन्दिर बनाएका कारण तपाईँको नाम सोमकान्त रह्यो । त्यस पुण्यका कारण तपाईँले अत्यन्त सुन्दरी महारानी सुधर्माद्वारा शोभायमान हुने अवसर पनि पाउनुभयो ।।४७-४८।।

**सूतजीले भन्नुभयो-** भृगुले बताएका कुरा सुनेर अधम राजा सोमकान्तलाई ती कुराहरूमा सन्देह भयो र उनी ढुंगाझैं निश्चल अवस्थामा रहे ।।४९।। वेद र शास्त्रका अर्थ जान्ने वर्तमान: भूत एवं भविष्यका घटनालाई आँखाले देखेझैं बताउने तपस्वी भृगु ऋषिका कुरामा राजा सोमकान्तले सन्देह प्रकट गरेका कारण तत्काल तिनका अङ्ग-प्रत्यङ्गबाट अनेक वर्ण र आकारका चराहरू निस्कन थाले । यसरी निस्किएका ती चराहरूले नरपशु राजाको शरीरलाई लुछ्न र खान लागे ।।५०-५१।। उड्दै-उड्दै आएर झम्टिने ती चराहरूले आफ्ना बलिया ठूँडको चुच्चाबाट टोक्न थाले र शरीरबाट मासु चोक्ट्याएर भृगु मुनिका सामु खान थाले ।।५२।। सर्वाङ्गमा भएको वेदनाले आत्तिएका ती राजा सोमकान्त त्यसपछि ज्ञान र तपका सागर भृगुका चरणमा शरणागत भएर दीनवचनद्वारा निवेदन गर्न लागे ।।५३।।

**राजाले भने -** हे महामुनि! हजुरको यो आश्रम र यसको सेरोफेरोमा रहेका वनमा जन्मजात वैरी प्राणीहरू पनि परस्पर मिलेर रहेका छन् । तिनीहरूमा कोही कसैसँग डराउँदैन । यी चराहरूले भने हजुरकै सामु म कुकर्मले गर्दा ज्यूँदै मरेको मानिसलाई किन मारिरहेका छन् ? हे मुनिवर ! म हजुरको पाउमा परेको छु, दीन-हीन छु, कुष्ठरोगले गलेको छु र अहिले आत्मरक्षाका लागि हजुरका शरणमा आएको छु । सबै प्राणीहरूको

त्वत्पादप्रवणं दीनं सकुष्ठं शरणागतम् ।
इदानीं मोचय मुने सर्वसत्त्वाभयङ्कर ।।५५।।

सूत उवाच

इत्युक्तः पुनरप्याह भृगुस्तं दीनवत्सलः ।
मद्वाक्यसंशयादित्थमनुभूतं नृप ! त्वया ।।५६।।

प्रतीकारं वदिष्यामि स्वस्थो भव क्षणं नृप ।
मम हुङ्कारमात्रेण गमिष्यन्ति द्विजा इमे ।।५७।।

सूत उवाच

द्विजस्य हुङ्कृतिं श्रुत्वा द्विजाश्चान्तर्हितास्तदा ।
तुतोष नृपतिश्चापि पत्न्यमात्यसमन्वितः ।।५८।।
ततो भृगुः क्षणं ध्यात्वा पुनस्तं प्राह भूपतिम् ।
अत्यन्तविह्वलो दुःखं वीक्ष्य तत्पूर्वकर्मजम् ।।५९।।
क्व पापनिकरास्ते तु क्वोपायाः कथिता मया ।
तथाप्येकं ब्रवीमि त्वामुपायमघनाशनम् ।।६०।।
गणेशस्य पुराणं त्वं श्रोष्यसे यदि सत्वरम् ।
तदैव मोक्ष्यसे दुःखसागरान् नात्र संशयः ।।६१।।
इत्युक्त्वा तं गणेशस्य नामाष्टशतमुत्तमम् ।
जप्त्वा जलं मन्त्रयित्वा सिषेच नृपतिं तदा ।।६२।।
सिक्तमात्रे जले तेन तन्नासारन्ध्रतो लघुः ।
कृष्णास्यः प्राप तद्भूमौ ववृधे तत्क्षणादसौ ।।६३।।
सप्ततालप्रमाणोऽभूद् व्यादितास्यो भयङ्करः ।
करालजिह्वो रक्ताक्षो दीर्घबाहुर्जटाधरः ।।६४।।
मुखादुरुवमन् रग्निं क्षणाच्च पूयशोणिते ।
नेत्राणामन्धतां कुर्वन्नन्धकार इवापरः ।।६५।।
आलोक्य दुद्रुवुः सर्वे तदाश्रमनिवासिनः ।
दंष्ट्रारावैर्दशदिशः पूरयन्तं तमद्भुतम् ।।६६।।
अपृच्छत् तं द्विजवरस्तत्समक्षं तु पूरुषम् ।
विद्वानपीति कोसि त्वं नाम ते किं वदस्व मे ।।६७।।
प्रत्युवाच मुनिं तं तु परिपृष्टो द्विजेन सः ।
प्राणिमात्रशरीरस्थो नाम्नाऽहं पापपूरुषः ।।६८।।

कल्याण गर्ने र डर-त्रासबाट रक्षा गर्ने स्वभाव भएका हे मुनिवर ! अहिले यस भयङ्कर आक्रमणबाट मेरो रक्षा गर्नुहोस् ।।५४-५५।।

**सूतजीले भन्नुभयो-** रक्षाका लागि आर्तपुकार गरिरहेका राजा सोमकान्तको प्रार्थनापछि दीनवत्सल महर्षि भृगुले भन्नुभयो- हे राजा ! मेरो वाक्यमा सन्देह गरेका कारण तपाईंले यसरी पक्षीहरूको आक्रमण भोग्नुपर्‍यो । म यिनबाट मुक्त हुने उपाय बताउँछु । तपाईं निश्चिन्त हुनुहोस् । मेरो हुँकारबाट यी सबै चराहरू यहाँबाट भाग्ने छन् ।।५६-५७।।

**सूतजीले भन्नुभयो -** भृगु ऋषिले हुँकार गरेपछि त्यो सुनेर ती चराहरू अलप भए । पत्नी र मन्त्रीहरूका साथमा रहेका ती राजा सोमकान्त पनि सन्तुष्ट भए ।।५८।। त्यसपछि राजा सोमकान्तको जन्मान्तरजनित पापबाट उत्पन्न भएको दुःख देखेर व्याकुल भृगु ऋषिले केही बेर ध्यान गरी सोमकान्तप्रति भन्नुभयो - हे राजा ! तपाईंबाट गरिएका ती भयङ्कर पाप कहाँ ? मैले बताएका उपाय कहाँ ? तापनि तपाईंको पाप नाश गर्ने एउटा उपाय बताउँछु ।।५९-६०।। छिटै श्रीगणेशपुराणको श्रवण गर्नुभयो भने तपाईं तत्काल दुःखको समुद्रबाट मुक्त हुनुहुनेछ । यस कुरामा सन्देह छैन ।।६१।। यसो भनेर भृगु ऋषिले श्रीगणेशका १०८ नाम जपी जललाई अभिमन्त्रित गरेर सोमकान्तको शरीरमा सेचन गर्नुभयो ।।६२।। भृगुले सोमकान्तको शरीरमा जलसेचन गरिसकेपछि सोमकान्तको नाकको प्वालबाट सानो आकारको कालो अनुहार भएको एउटा प्राणी पैदा भयो र तुरुन्तै त्यसको शरीर बढ्न थाल्यो ।।६३।। शरीर बढ्दै जाँदा त्यो प्राणी सातवटा ताडीवृक्षसमान अग्लो भयो । फैलिएको मुख, डरलाग्दो जिब्रो, राता आँखा, लामा हात र शिरमा डरलाग्दो जटा यस्तो आकार-प्रकार भएको, मुखबाट अग्निको ज्वाला, पीप र रगत वमन गर्दै दर्शकका आँखालाई अन्धकारमा पुर्‍याउने त्यो कालो वर्णको प्राणीलाई देखेर आश्रमवासी सबै मानिसहरू डराई यताउति भाग्न थाले । विद्या र तपस्याको बलबाट सबै कुरा जाने तापनि नजानेझैं गरी विद्वान् भृगुले घोर दाह्रा बजाएर भयङ्कर आवाजले दशै दिशा भर्ने त्यस अद्‌भुत प्राणीसँग तिमी को हौ ? तिम्रो नाम के हो ? मलाई भन भनी सोधे ।।६४-६७।। भृगुद्वारा सोधिएको त्यस प्राणीले भन्यो - हे ऋषि ! प्राणीमात्रको शरीरमा रहने म पापपुरुषका नामबाट चिनिन्छु । तपाईंले श्रीगणेशका मन्त्रले

त्वन्मन्त्रजलपातेन निःसृतो राजदेहतः ।
क्षुधातुरो भक्ष्यमीहे देहि मह्यं न चेत् तदा ।।६९।।
भक्षयिष्ये मुने ! लोकान् सोमकान्तं तवाग्रतः ।
वद मे वसतिं रम्यामितो निःसारितस्य च ।।७०।।
ततस्तु बहिरभ्येत्य तमुवाच मुनिः पुनः ।
अस्मिन् रसाले सरले विरसे वस कोटरे ।।७१।।
गलितानि च पत्राणि भक्षयस्व ममाज्ञया ।
नोचेत् त्वां भस्मसात् कुर्यां नानृतं मे वचोऽधम ।।७२।।

सूत उवाच

इति तन्मुनिवाक्यान्ते शुष्कं स वृक्षमस्पृशत् ।
भस्मसादभवद् वृक्षो द्विजास्तत्स्पर्शमात्रतः ।।७३।।
मुनेः सन्दर्शनाद्भीतस्तस्मिन् भस्मन्यलीयत ।
तस्मिन् विलीने स मुनिः सोमकान्तं पुनर्जगौ ।।७४।।

भृगुरुवाच

पुराणश्रवणाद् यत् ते जातं पुण्यं नृपोत्तम ।
अयं यावच्चूततरुरत्र चोत्तिष्ठते पुनः ।।७५।।
तावत्संपादयास्मिंस्तद्भस्मन्येव दिने दिने ।
विवृद्धेऽस्मिंस्तरौ राजन्निष्पापस्त्वं भविष्यसि ।।७६।।

राजोवाच

गणेशस्य पुराणं यन्नदृष्टं न च वै श्रुतम् ।
कुत्र तल्लभ्यते ब्रह्मन् ! व्याकर्ता तस्य वा मुने ।।७७।।

मुनिरुवाच

ब्रह्मणा कथितं पूर्वं वेदव्यासाय धीमते ।
व्यासाच्च विदितं मह्यं पुराणं पापनाशनम् ।।७८।।
अहं ते च प्रवक्ष्यामि तीर्थे स्नानं समाचर ।
श्रोष्ये पुराणमिति च सङ्कल्पं कुरु सुव्रत ।।७९।।

सूत उवाच

भृगुणा नोदितः स्नात्वा भृगुतीर्थेति विश्रुते ।
सोमकान्तो मुदा युक्तस्ततः सङ्कल्पमाचरत् ।।८०।।

अभिमन्त्रित गरेर जलले सेचन गरेपछि राजा सोमकान्तको शरीरबाट म बाहिर आएको छु । मलाई भोक लागेको छ, केही खानेकुरा दिनुहोस् । अन्यथा मैले भर्खरै यी सबै मानिस र यो सोमकान्तलाई तपाईंकै सामु खानेछु। तपाईंले बाहिर निकाल्नुभयो । अब मलाई बस्ने ठाउँको खाँचो छ। त्यो ठाउँ पनि बताउनुहोस् ।।६८-७०।।

त्यो कुरा सुनेपछि बाहिर आएर भृगुले पापपुरुषलाई भन्नुभयो – यो सुक्न लागेको आँपको रूख छ, यसको टोड्कामा तिमी बस र रूखबाट भुइँमा झरेका सुकेका पात खाएर निर्वाह गर । यो मेरो आज्ञा हो। अन्यथा मैले तिमीलाई तपोबलबाट खरानी बनाउने छु । हे अधम पुरुष! मेरो वचन मिथ्या हुँदैन ।।७१-७२।।

**सूतजीले भन्नुभयो-** हे मुनिजन! भृगुऋषिले भन्नुभएको वचन सुनेर पापपुरुषले सुकेको आँपको रूखलाई स्पर्श गर्‍यो। स्पर्श गर्नासाथ त्यो रूख खरानी भयो । त्यो पापपुरुष पनि भृगु ऋषिसँग डराएर त्यही खरानीमा लीन भयो। पापपुरुष खरानीमा लीन भएपछि भृगुले सोमकान्तलाई भन्नुभयो ।।७३-७४।।

**भृगुले भन्नुभयो -** हे राजन् ! तपाईंले श्रीगणेशको पुराण सुनेपछि त्यसबाट जुन पुण्य पैदा हुन्छ त्यो पुण्य जबसम्म भुइँमा खरानीका रूपमा रहेको रूख जस्ताको तस्तै हुँदैन तबसम्म दिनदिनै समर्पण गरिरहनु पर्दछ। यो वृक्ष बढेर फलफूलले भरिभराउ भएपछि तपाईं पापबाट मुक्त हुनुहुनेछ ।।७५-७६।।

**राजाले भने -** हे मुनिराज ! मैले श्रीगणेशपुराणको नाम सुनेको थिइनँ, देख्ने कुरै भएन। त्यो पुराण र त्यसलाई राम्ररी व्याख्या गरी सुनाउने विद्वान्को प्राप्ति कहाँ हुनसक्छ ?।।७७।।

**भृगुले भन्नुभयो-** सर्वप्रथम ब्रह्माले बुद्धिमान् र विद्वान् आफ्ना छोरा व्यासलाई श्रीगणेशपुराण सुनाउनुभएको थियो । मैले पापनाश गर्नमा अमोघ उपाय मानिएको श्रीगणेशपुराण व्यासबाट सुनेको हुँ। म तपाईंलाई श्रीगणेशपुराण सुनाउने छु। भृगुतीर्थमा गएर स्नान गर्नुहोस् र आजदेखि श्रीगणेशपुराण सुन्नेछु भन्ने सङ्कल्प पनि गर्नुहोस् ।।७८-७९।।

**सूतजीले भन्नुभयो -** भृगुद्वारा अभिप्रेरित एवं प्रसन्न राजा सोमकान्तले भृगुतीर्थमा नुहाएर म आजदेखि दिनदिनै श्रीगणेशपुराण सुन्नेछु भन्ने सङ्कल्प गरे । सङ्कल्पमात्र गर्नाले रगत नभएका ती राजा कृमिहीन एवं घाउ-खटिरा र कीराले

गणेशस्य पुराणं यत् तच्छ्रोष्येऽद्य प्रभृत्यहम् ।
सङ्कल्पमात्रे तु कृते बभौ राजा निरामयः ।।८१।।
भृगुप्रसादान्नीरक्तः कृमिक्षतविसर्जितः ।
गृहीत्वा तं भृगुरगाद्विस्मितं हर्षितं नृपम् ।।८२।।
उपविश्यासने स्वीयेऽदापयत् तस्य चासनम् ।
उपविष्टो बभाषे तं दिव्यकान्तिर्नृपोत्तमः ।।८३।।

राजोवाच

भवत्प्रसादात्सकला गरिष्ठा
सङ्कल्पमात्रेण गता व्यथा मे ।
आश्चर्यभूतं सकलं वदस्व
पुराणमेतद् द्विरदाननस्य ।।८४।।

भृगुरुवाच

शृणुष्वावहितो भूत्वा तत्पुराणं वदाम्यहम् ।
अनन्तपुण्यनिचयैर्यस्य श्रवणगोचरा ।।८५।।
मतिरुत्पद्यते पुंसां नान्यथा पापकारिणाम् ।
यस्याकर्णनमात्रेण सप्तजन्मार्जितान्यपि ।।८६।।
लघुशुष्कार्द्रस्थूलानि पापानि च महान्त्यपि ।
तत्क्षणाद् विलयं यान्ति गणेशस्य प्रसादतः ।।८७।।
अव्ययस्याऽप्रमेयस्य निर्गुणस्य निराकृतेः ।
मनोवागनिरूप्यस्य केवलानन्दरूपिणः ।।८८।।
यस्य स्वरूपं न विदुर्ब्रह्मेशानादयः सुराः ।
सहस्रवदनो यस्य महिमानं न च क्षमः ।।८९।।
यावद्विशेषविदपि प्रवक्तुं राजसत्तम !
मया यथा श्रुतं पूर्वं तत्पुराणं सुपुण्यदम् ।।९०।।
अतीन्द्रियज्ञानवतो व्यासाच्चाऽमिततेजसः ।
यज्ञविध्वंसशोकार्तो दक्षः शुश्राव मुद्गलात् ।।९१।।
यस्य भक्तिर्दृढा राजन् ! गणेशे सर्वसिद्धिदे ।
स एतच्छृणुयान्नित्यं न वाच्यं तादृशेतरे ।।९२।।

परिपूर्ण शरीरको सट्टा सफा सुन्दर शरीरले शोभायमान पनि भए। त्यसपछि चकित र हर्षित भएका राजालाई साथ लिएर भृगु ऋषि पूजामण्डपमा गए । तिनले आफू व्यासासनमा बसेपछि राजा सोमकान्तलाई पनि बस्ने आसन दिए । भृगु नजिकै आसनमा बसेका दिव्यकान्तिले शोभायमान राजा सोमकान्तले भने ।।८०-८३।।

राजाले भने – हे महर्षि भृगु ! तपाईँको कृपामय प्रेरणाबाट श्रीगणेशपुराणको श्रवण गर्नेछु भन्ने सङ्कल्प गर्नासाथ मेरो सम्पूर्ण शरीरमा व्याप्त गुरुतर वेदना हराएको छ । यस्तो आश्चर्यमय श्रीगणेशपुराण मलाई राम्ररी सुनाउनुहोस् ।।८४।।

**भृगुले भन्नुभयो** – हे राजा ! तपाईँ सावधान भई श्रीगणेशपुराण सुन्नुहोस् । म सुनाउँछु । अनन्त पुण्यको राशि भएपछि मात्र मानिसका हृदयमा श्रीगणेशपुराण सुन्ने बुद्धि पैदा हुन्छ । पापी मानिसका हृदयमा त्यस्तो बुद्धि पैदा हुँदैन । श्रीगणेशपुराणको श्रवणमात्रले श्रीगणेशका कृपाबाट सात जन्मसम्म गरेका साना–ठूला, पुराना र ताजा सबै प्रकारका पापहरू तत्काल समाप्त हुन्छन् ।।८५-८६।। हे राजन् ! अव्यय, अप्रमेय, निर्गुण, निराकार, मन एवं वाणीद्वारा अगम्य, केवलानन्दस्वरूप जुन श्रीगणेश भगवान् हुनुहुन्छ उहाँको वास्तविक स्वरूपलाई ब्रह्मा, शिव आदि देवताहरू पनि जान्नु हुन्न । श्रीगणेशका सम्पूर्ण विशेषता र महिमा जान्ने इन्द्र महाराजले पनि श्रीगणेशको पूर्ण महिमा बताउन सक्नु हुन्न । मैले अतीन्द्रिय-ज्ञानसम्पन्न, अतितेजस्वी भगवान् वेदव्यासका मुखारविन्दबाट पहिले जुन रूपमा पुण्यदायक श्रीगणेशपुराण सुनेको थिएँ त्यसै रूपमा तपाईँलाई पनि सुनाउने छु । यज्ञविध्वंस भएपछि शोक-सन्तप्त दक्षप्रजापतिले पनि यो श्रीगणेशपुराण मुद्गल ऋषिबाट सुनेका थिए ।।८७-९१।। हे राजन् ! सबै प्रकारका सिद्धि प्रदान गर्ने भगवान् श्रीगणेशमा जुन मानिसको दृढ भक्ति हुन्छ त्यसले मात्र यो पुराण सुन्ने अवसर पाउँछ । त्यस्ता मानिसलाई मात्र वक्ताले सुनाउनु पर्दछ । विपरीत स्वभाव भएका नास्तिक मानिसहरूलाई यो पुराण सुनाउनु हुँदैन ।।९२।। यदि सबै मानिसले

यदि सर्वेऽपि कुर्वीरन् विघ्नराजस्य सेवनम् ।
क्व तदा विघ्ननिचया विहरेयुर्यथासुखम् ।।९३।।

दुखान्यनुभवेयुः के नानाविरहजान्युत ।
चकारेदं पुरा व्यासो भूतभव्यभविष्यवित् ।।९४।।

वेदार्थज्ञानरहितान् वेदाध्ययनवर्जितान् ।
वर्णाश्रमाचारशून्यान् जातिसङ्करकारिणः ।।९५।।

कलौ विलोक्य तु जनान् कुटिलान् पापकारिणः ।
अष्टादशपुराणानि कृतवान् धर्मगुप्तये ।।९६।।

तावन्त्युपपुराणानि ततोऽर्थान् बुबुधुर्जनाः ।
तत एव गणेशस्य रूपं जानन्त्यमी जनाः ।।९७।।

सूत उवाच

इत्युक्त्वा भृगुणा सम्यक् पुराणं श्रीगणेशितुः ।
खण्डद्वययुतं तस्मै सोमकान्ताय सादरम् ।।९८।।

श्रावितं सोमकान्तोऽपि श्रुतवान् भक्तिपूर्वकम् ।
वेदव्यासो यथा पूर्वं शुश्राव ब्रह्मणो मुखात् ।।९९।।

विघ्नविनाशक श्रीगणेशको सेवा गर्दछन् भने विघ्नहरू संसारमा कसरी रहन सक्छन् ? फेरि कसले अनेक थरि वियोगबाट उत्पन्न दुःखको अनुभव गर्नु पर्छ ? भूत, वर्तमान र भविष्य जान्ने भगवान् वेदव्यासले यस पुराणको रचना गर्नुभएको हो । भगवान् वेदव्यासले वेदार्थ नजान्ने, वेदको अध्ययन नगर्ने, वर्ण र आश्रमका आचार र विचारको पालन नगर्ने, जातिसङ्कर मानिसहरूको सङ्ख्या बढाउने र कुटिल एवं पापी कलिकालिक मानिसहरूलाई देखेर धर्मको रक्षाका निमित्त १८ महापुराणको रचना गर्नुभयो । त्यस्तै उहाँले १८ उपपुराण पनि बनाउनुभयो । ती महापुराण र उपपुराणहरूबाट मानिसहरूले मानवजीवनको प्रयोजन र कर्तव्यको विषयमा बुझ्ने अवसर प्राप्त गरे । ती सबै पुराण र श्रीगणेशपुराणबाट धेरै मानिसहरूले भगवान् श्रीगणेशको स्वरूप र महिमा बुझ्ने अवसर पनि पाए ।।९३-९७।।

**सूतजीले भन्नुभयो** – यसरी राजालाई बताएपछि भृगु ऋषिले भगवान् श्रीगणेशको नाममा रचिएको श्रीगणेशपुराण उपासनाखण्ड र क्रीडाखण्डसमेत आदरपूर्वक सोमकान्तराजालाई उपदेश गर्नुभयो ।।९८।। सोमकान्तले पनि पूर्वकालमा वेदव्यासले ब्रह्माको मुखबाट सुनेझैं भृगुद्वारा सुनाइएको श्रीगणेशपुराण भक्तिपूर्वक सुने ।।९९।।

ॐ

**इतिश्रीगणेशपुराणान्तर्गते श्रीगणेशमाहात्म्ये भृगु-सोमकान्तसंवादे तृतीयोऽध्यायः**

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोखरनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराणमाहात्म्यको तेस्रो अध्याय पूर्ण भयो ।।३।।

ॐ

## चतुर्थोऽध्यायः

## { ४ अध्याय }

सूत उवाच

एवं श्रुत्वा कथां नित्यं सोमकान्तो मुनीश्वरात् ।
शुष्काम्रमूले तत्पुण्यं न्यक्षिपज्जलतो नृप : ।।१।।

गते संवत्सरे चूतपल्लवैः कुसुमैः फलैः ।
शुशुभेऽतीवरुचिरः पुराणश्रुतिपुण्यतः ।।२।।

सोमकान्तो दिव्यकान्तिस्त्यक्त्वा कुष्ठभवां रुजम् ।
अक्षतश्चाभवत् पूतिगन्धं त्यक्त्वा सुगन्धवान् ।।३।।

निःखेदः सुरभेर्गन्धाद् दशदिक्षु प्रसारिणः ।
दिव्यदेहं सूर्यकान्तिं कोटिचन्द्रनिभं नृपम् ।।४।।

दृष्ट्वा विसिस्मिरे लोकाः कथमीदृक् च तादृशः ।
गणेशाख्यपुराणस्य महिम्ना दोषहारिणा ।।५।।

भृगुरुवाच

सिद्धिस्ते नृपशार्दूल ! पुराणश्रवणादभूत् ।
व्रजेदानी निजं पुत्रं सामात्यं जनमेव च ।।६।।

चिरोत्कण्ठं वर्षमध्ये दृष्ट्वा हर्षमवाप्स्यसि ।

सूत उवाच

एवमाकर्ण्य तद्वाक्यं पादयोर्न्यपतन्मुनेः ।।७।।

आनन्दार्णवमग्नः स सोमकान्तोऽवदद् भृगुम् ।

राजोवाच

अद्भुतस्तपसस्तेऽद्य महिमैक्षि मया मुने ।।८।।

पुराणश्रवणस्यापि येनाहं पतितोऽपि च ।
गलत्कुष्ठी दिव्यदेहो जातो माता पिता मम ।।९।।

**सूतजीले भन्नुभयो** – हे शौनक आदि ऋषिसमूह ! यसरी दिनदिनै भृगु मुनिबाट पवित्र कथा सुनेर प्रसन्न भएका सोमकान्तले सुकेको आँपको फेदमा जल चढाउँदै आफूले कमाएको पुण्य समर्पण गरे।।१।। एक वर्ष बितेपछि त्यो आँपको वृक्ष पालुवा, फूल र फलले अत्यन्त रमणीय देखियो । राजा सोमकान्तले श्रीगणेशपुराण श्रवण गरेको पुण्यबाट सुकेको वृक्ष त्यसबेला अत्यन्त रमणीय रूपमा सबैका दृष्टिपथमा चमत्कार-जनक बनेर सुहाएको थियो।।२।। त्यस पुण्यका कारण सोमकान्त पनि कुष्ठरोगलाई निराकरण गरी दिव्य कान्तिद्वारा शोभायमान भए । तिनका शरीरबाट प्रवाहित हुने दुर्गन्ध हरायो र सुगन्धको प्रसार हुनथाल्यो ।।३।। तिनको शरीरबाट प्रवाहित र दशै दिशामा प्रसारित सुगन्धबाट मानिस र प्राणीहरू आनन्दित भए । त्यस्ता रोगी, दुर्गन्धित एवं घृणित राजा सोमकान्तलाई करोडौं चन्द्रसमान सुन्दर र सूर्यसमान तेजस्वी एवं दिव्य देहले सम्पन्न देखेर मानिसहरू अचम्म परे र श्रीगणेश पुराणको पापनाशक महिमाकै प्रतापबाट आज सोमकान्त राजा यति भव्य र दिव्य देखिएका हुन् भन्ने अनुमान गरे ।।४-५।।

**भृगुले भन्नुभयो** – हे सोमकान्त ! हे उत्तम राजा ! तपाईंले श्रीगणेश पुराणश्रवण गरेका कारण सिद्धि प्राप्त गर्नुभएको छ । अब तपाईं आफ्ना मन्त्रीहरू र पारिवारिक मानिसहरूका साथ रहेका छोरासमु जानुहोस् ।।६।। ती छोरा तपाईंको दर्शनका लागि अत्यन्त उत्कण्ठित छन् । तिनको दर्शन गरेर तपाईंले पनि हर्ष र आनन्द प्राप्त गर्नुहुनेछ ।

**सूतजीले भन्नुभयो** – सोमकान्तले राजा भृगु ऋषिका उक्त वचन सुनेर अत्यन्त हर्षित भई आनन्दको सागरमा गोता लगाउँदै मुनिको पाउमा प्रणाम गरी हात जोडेर कृतज्ञता व्यक्त गरे ।

**सोमकान्तले भने** – हे ऋषिवर ! आज मैले हजुरको तपस्याको अद्भुत महिमा देख्ने अवसर पाएँ ।।७-८।। मैले श्रीगणेशपुराणको विचित्र महिमा पनि अनुभव गरें । मजस्तो पतितको पनि पुराण श्रवणबाट उद्धार भएको छ । मेरो शरीरमा

अस्य देहस्य निर्माता त्वमेव मुनिसत्तम ।
नीरसश्चूतवृक्षोऽपि फलपुष्पयुतोऽभवत् ।।१०।।

त्यक्तुं नेच्छाम्यतोऽहं त्वां किं मे पुत्रजनैर्भवेत् ।
एवं निशम्य तद्वाक्यं भृगुः पुनरथाऽब्रवीत् ।।११।।

भृगुरुवाच

जन्मान्तरीयपुण्येन पुराणश्रवणं तव ।
सञ्जातं मन्मुखाद् धन्यं दुरितं येन तेऽनशत् ।।१२।।

गणेशस्य पुराणस्य महिमा केन वर्ण्यते ।
न मां विस्मर गच्छ त्वं जनेश ! नगरं निजम् ।।१३।।

एवं तयोः संवदतोस्तेजसा ज्वलदद्भुतम् ।
विमानं ददृशे ताभ्यां सूर्यकोटिनिभं महत् ।।१४।।

भृगुरुवाच

त्वदर्थं यानमायातमिदं नृप ! महाद्भुतम् ।
इदमारुह्य गच्छ त्वं गणनाथस्य सन्निधिम् ।।१५।।

न प्राप्नुवन्त्यनुष्ठानाद् विमानं यन्मुनीश्वराः ।
तत्पुराणश्रवाद् राजँस्त्वया प्राप्तं गणेश्वरात् ।।१६।।

विमानं वदतोरेवं भूमण्डलमगात् क्षणात् ।
विनायकगणैर्युक्तं चतुर्बाहुविराजितैः ।।१७।।

मुकुटाङ्गदहारादिभूषणैरुपशोभितैः ।
दिव्यचन्दनवस्त्रादिपद्मपरशुशोभिभिः ।।१८।।

नृत्यत्किन्नरकन्याभिर्मृदङ्गतालपाणिभिः ।
किन्नरैर्गायनैर्युक्तं दृष्ट्वा राजाऽब्रवीत्पुनः ।।१९।।

राजोवाच

श्रुतासीद् बहुधा वार्ता विमानानां मुनीश्वर !
तद् दृष्टं पुरतो ब्रह्मन् ! तपोवीर्यबलात् तव ।।२०।।

कुष्ठरोग थियो, म दुर्गन्धित थिएँ । आज म दिव्य शरीरले शोभायमान भएको छु । हजुर नै आज मेरा लागि माता-पिता हुनुभएको छ । किनकि यस दिव्य शरीरको निर्माता हजुर नै हुनुहुन्छ । हजुरको कृपाबाट श्रीगणेशपुराण श्रवण गरी पुण्यदान गर्दा आज सुकेको आँपको रूख हरियो भएको छ । त्यसमा सुन्दर पालुवा, फूल र फल लागेका छन् । मलाई नरकबाट उद्धार गरी यस रूपमा ल्याउनुहुने हजुरलाई छोडेर म कहाँ जाऊँ ? म हजुरको पाउको आश्रय छोड्न चाहन्न । मेरा छोरा, मित्र र सेवकबाट मैले के पाउन सक्छु र ? राजाका यी कुरा सुनेर मुनि भृगुले संझाउनुभयो ।।९-११।।

**भृगुले भन्नुभयो** - हे राजन् ! जन्म-जन्मान्तरका पुण्यले गर्दा तपाईँले आज मेरा मुखबाट श्रीगणेशपुराण श्रवणको अवसर पाउनुभएको हो । श्रीगणेशपुराण धन्य छ र तपाईँ पनि धन्य हुनुभएको छ । किनभने पुराणश्रवणबाट तपाईँका पापराशि डढेर खरानी भएका छन् ।।१२।। श्रीगणेशको महिमा र श्रीगणेशपुराणको महिमा कसले बयान गरेर सक्छ ? हे राजा ! तपाईँले मलाई बिर्सनु हुनेछैन । तपाईँ त अरूको कल्याणका लागि आफ्नो नगरमा जानुपर्छ । यसरी भृगु ऋषि र सोमकान्तको बीचमा संवाद भइरहेको बेला ती दुवैले एउटा तेजोमय करोडौँ सूर्यको कान्ति भएको विमान आइरहेको देखे ।।१३-१४।।

**भृगुले भन्नुभयो** - हे राजा ! तपाईँका लागि अद्भुत विमान आइसकेको छ । तपाईँ त्यसमा सवार भएर भगवान् श्रीगणेशको धाममा जानुहोस् । ठूला-ठूला ऋषिमुनिहरूले हजारौँ वर्षसम्म तपस्या गरेर पनि जुन विमानको दर्शन पाउँदैनन्, त्यसको दर्शन तपाईँले श्रीगणेशपुराणको श्रवणको पुण्यबाट पाउनुभएको छ । यसरी कुरा गरिरहेकै समयमा ती दुवैका सामु विमान आई भुइँमा ओर्लियो । चतुर्बाहु, मुकुट, केयूर आदि अलङ्कारद्वारा अलङ्कृत, दिव्य चन्दन, वस्त्र, कमल आदि सुन्दर पदार्थहरूद्वारा सुशोभित; हातमा मादल एवं ताल धारण गर्ने, सुन्दरीहरूको नृत्यले आह्लादक; किन्नरहरूको गायनद्वारा मनोहर; श्रीगणेशका गणहरूद्वारा सञ्चालित विमानलाई देखेर सोमकान्तले जिज्ञासा व्यक्त गरे ।।१५-१९।।

**सोमकान्तले भने**- हे मुनिश्रेष्ठ ! विमानहरूका विषयमा धेरै पटक कुरा सुनेको थिएँ । अहिले तपाईँको तपस्याको शक्तिबाट आफ्नै सामु विमान हेर्न पाएँ । धेरैपटक धेरैका

महिमा श्रूयते कर्णैर्बहुधा बहुवक्त्रतः ।
अनुभूतो मया सोऽपि पुराणश्रवणात् तव ।।२१।।

एवं ब्रुवति भूपे तु दूता उत्तीर्य यानतः ।
प्रणिपत्याखिलाः प्रोचुः सोमकान्तं नृपं तदा ।।२२।।

परात्परेण देवेन तव पुण्यात् स्मृतिः कृता ।
गजाननेन शुद्धात्मन् ! पुराणश्रवणादिना ।।२३।।

वयं दूता आज्ञयाऽस्य विमानेन समागताः ।
नेतुं त्वां पुण्यकीर्तिञ्च याहि लोकमनुत्तमम् ।।२४।।

तद्दर्शनाज्जन्ममृतेर्मुक्तस्तत्सन्निधिं गतः ।
सुखमात्यन्तिकं तत्र प्राप्स्यसे तत्प्रसादतः ।।२५।।

निशम्य दूतवाक्यं तद् देहातीत इवाभवत् ।
रोमाञ्चाञ्चितसर्वाङ्गः प्राह गद्गदया गिरा ।।२६।।

परात्परेण देवेन चराचरकृताऽमुना ।
निर्गुणेन गुणक्षोभकारिणा विश्वयोनिना ।।२७।।

दीननाथेन भो दूताः स्मृतोऽहं कृपयाऽनघाः ।
ब्रह्माद्या न विदुर्यं हि ध्यात्वा च सनकादयः ।।२८।।

अनन्तगुणपूर्णः सोऽप्रेषयद् यानमुत्तमम् ।
नानावतारवान् नानारूपी परममायिकः ।।२९।।

तेन मे स्मरणं कस्मात् कृतमाश्चर्यकारकम् ।
एवमुक्त्वा नमस्कृत्य भृगुं तं प्राह भूमिपः ।।३०।।

आज्ञया ते गमिष्यामि दूतैः सह विमानगः ।
प्रमादात् ते च देवस्य न मां विस्मर्तुमर्हसि ।।३१।।

मुखबाट विमानको महिमा सुनिन्छ । तपाइँका मुखबाट पुराण सुनेपछि मैले भगवान् श्रीगणेश, उहाँका गण र ती गणद्वारा सञ्चालित विमानलाई प्रत्यक्ष अनुभव गर्न पाएँ ।।२०-२१।। यसरी राजाले भनिरहेकै समयमा दूतहरू विमानबाट ओर्लेर तिनीहरू भएको ठाउँमा आई नमस्कार गरेर सोमकान्त राजालाई भने- हे राजा! परब्रह्मस्वरूप भगवान् श्रीगणेशले तपाईंले गरेको पुण्यका कारण तपाईंलाई संझनु भएको छ किनकि तपाइँले श्रीगणेशपुराणको विधिपूर्वक श्रवण गर्नुभएको छ । हामी त भगवान् श्रीगणेशका दूत हौं। उहाँको आज्ञाले विमान लिएर तपाइँका समीपमा आएका छौं । हाम्रो आगमनको उद्देश्य पुण्यकीर्ति बन्नुभएका तपाइँलाई विमानमा सवार गराई श्रीगणेशधाममा पुऱ्याउनु हो । अब हिँड्नुहोस् र विमानमा सवार हुनुहोस्।।२२-२४।। त्यहाँबाट तपाइँ पवित्र श्रीगणेशधाममा पुग्नुहुनेछ । भगवान् श्रीगणेशको दर्शन पाएपछि तपाइँ जन्म र मृत्युको चक्रबाट मुक्त हुनुहुनेछ । उहाँको नित्य दर्शन र कृपाका कारण तपाईंले संसारमा कहीं नपाइने अत्यन्त उत्तम आत्माको सुख पाउनुहुनेछ ।।२५।। दूतहरूका ती कुरा सुनेर सम्पूर्ण शरीरमा रोमाञ्च अनुभव गर्ने राजा भावावेशमा पुगे र आफैलाई बिर्सेजस्ता भए । प्रसन्नताले सीमा नाघ्यो । केही होशमा आएर उनले गद्गद् वाणीबाट भने - हे निष्पाप दूत हो! सम्पूर्ण चराचरका सृष्टिकर्ता, निर्गुण, गुणहरूमा क्षोभ उत्पन्न गर्ने, विश्वयोनि, दीन-दुःखीहरूका स्वामी, परब्रह्मस्वरूप भगवान् श्रीगणेशले आज मलाई संझनुभयो । ब्रह्मा आदि देवता र सनक आदि महर्षिहरूले दीर्घकालसम्म ध्यान गर्दा पनि जसको दर्शन पाउन सक्दैनन्, त्यस्ता अनन्त गुणका खानी भगवान् श्रीगणेशले आज मेरा लागि उत्तम यान पठाउनुभयो । भगवान् श्रीगणेश अनेक अवतार लिन सक्नुहुन्छ, अनेकथरि रूप धारण गर्नुहुन्छ, मायालाई वशमा राख्ने ठूला मायावी हुनुहुन्छ । त्यस्ता देवताले पनि मजस्तो साधारण मानिसलाई कसरी संझिनुभयो? मलाई अचम्म लागिरहेको छ। यसरी आफ्ना मनका भावनाहरू पोखेर भृगु ऋषिलाई प्रणाम गर्दै राजा सोमकान्तले निवेदन गरे- हे गुरुदेव! हजुरले आज्ञा दिनुहोस् म अब दूतहरूका साथमा विमानमा सवार भई श्रीगणेशधाम जानेछु। यसो हुनुमा हजुरको र भगवान् श्रीगणेशको समान रूपमा कृपा र आशीर्वाद भएको छ। हे गुरुदेव! मलाई हजुरले बिर्सनु हुनेछैन ।।२६-३१।।

सूत उवाच

निशम्य गदितं तस्य भृगुः सम्भ्रमविह्वलः ।
आनन्दाश्रुः सरोमाञ्चः कण्ठे धृत्वा नृपस्य सः ।।३२।।

प्राहाहं नृपते ! विप्रो भाग्यवाँस्त्वं महाफलः ।
गणेशपुरगो भूत्वा न मां विस्मर कर्हिचित् ।।३३।।

एवमुक्त्वा बहिर्यातौ धृत्वा हस्तावुभावपि ।
नमस्कृत्य विमानं तन्नृपो मुनिवरञ्च तम् ।।३४।।

आरुहत् परमप्रीतो दूतवाक्यात् त्वरान्वितः ।
द्वावमात्यौ सुधर्मा च रुरुहुर्यानमुत्तमम् ।।३५।।

ततो दूताश्च वाद्यानां घोषैर्व्याप्तं दिगन्तरम् ।
विमानशोभां वीक्ष्यैव सोमकान्तो ननन्द ह ।।३६।।

जन्मान्तरीयपुण्येन प्राप्तमेतदमन्यत ।
ततोऽस्मिन् पश्यति भृगौ विमानं यातमम्बरे ।।३७।।

सर्वोत्तमपदं प्राप्तं मर्त्यदेहेन वीक्ष्य च ।
विस्मयं परमं प्राप नत्वा दूतान् ययौ पदम् ।।३८।।

**सूतजीले भन्नुभयो** - राजा सोमकान्तले भनेको सुनेर भृगु ऋषिलाई कस्तो कस्तो लाग्यो । विरहको क्षण संझिँदा विह्वल हुनुभयो । एउटा मानिसको उद्धार गर्ने पाउँदा हर्ष पनि भयो। हर्षका आँसु बगे, शरीरमा रोमाञ्च छुट्यो । राजालाई अङ्कमाल गर्दै उहाँले भन्नुभयो - हे राजा ! आज मैले आफूलाई भाग्यशाली ब्राह्मणको रूपमा पाएको छु । तपाईंले पनि ठूलो फल प्राप्त गर्नुभएको छ । श्रीगणेशको धाममा पुगेपछि कहिल्यै पनि मलाई नबिर्सनुहोला । यसरी आपसमा कुरा गर्दै ती दुवै आश्रमदेखि बाहिर आए । दुवैले एक-अर्काका हातमा समातेर रहे । त्यसपछि राजा सोमकान्तले विमानलाई र मुनिलाई पनि प्रणाम गरे । श्रीगणेशका दूतहरूको आज्ञा पाएर सोमकान्त प्रसन्न भई शीघ्रतापूर्वक विमानमा सवार भए । सोमकान्तका साथमा उनका दुई मन्त्री र उनकी पत्नी सुधर्मासमेत विमानमा सवार भए ।।३२-३५।। त्यसपछि श्रीगणेशका दूतहरू पनि सवार भए । त्यस बेला वाद्यघोष भयो। त्यसले चारै दिशा ढाक्यो । विमानको शोभा विचित्र थियो । त्यो देखेर सोमकान्त अत्यन्त खुसी भए। मैले जन्मजन्मान्तरका पुण्यबाट यो विमानमा आरोहण गर्ने अवसर प्राप्त गरेँ भन्ने विचार गरे । त्यसपछि भृगु ऋषिले हेर्दाहेर्दै त्यो विमान आकाशमा उड्न थाल्यो ।।३६-३७।। मानिसकै शरीरबाट पनि यसरी श्रीगणेशको कृपा भई विमानमा आरोहण गरेर श्रीगणेशधाम जानसकिंदो रहेछ भन्ने कुरा प्रत्यक्ष दर्शन गर्नका पाउनुभएका भृगुले ठूलो आश्चर्य मान्नुभयो । त्यसपछि भृगु ऋषि ती दूतहरूलाई नमस्कार गरी आफ्नो आश्रमभित्र प्रवेश गर्नुभयो ।।३८।।

ॐ

इतिश्रीगणेशपुराणान्तर्गते श्रीगणेशमाहात्म्ये सूत-शौनकादिसंवादे चतुर्थोऽध्यायः

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोखरनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराणमाहात्म्यको चौथो अध्याय पूर्ण भयो ।।

ॐ

## पञ्चमोऽध्यायः

**सूत उवाच**

जन्ममृती न च स्यातां पुराणस्यास्य संश्रयात् ।
एकशो बहुशश्चेत् स्याद् यद्यस्य श्रवणं द्विजाः ।।१।।
न शक्नुतामलं वक्तुं शेषपद्मासनावपि ।
यो ददाति कुरुक्षेत्रे सोमसूर्यग्रहे नरः ।।२।।
हेमभारसहस्राणि विप्रेभ्यो भक्तिभावतः ।
तदस्य श्रवणात् पुण्यं प्राप्नुयाद् भक्तिमान् नरः ।।३।।
यज्ञानां साङ्गजातानां सर्वेषां दक्षिणावताम् ।
फलं कस्तुलयामास पुराणश्रवणस्य च ।।४।।
पुराणश्रवणस्यास्य पुण्यं तस्माद् विशेषवत् ।
व्रतानां जलदानानां तत्र का गणना मता ।।५।।
कोटिकन्याप्रदानानां गोदानानां सहस्रशः ।
तत्पुण्यं कोटिगुणितं श्रवणादस्य जायते ।।६।।
चतुर्णामपि वेदानां साङ्गानां पठनात् सदा ।
शास्त्राणां व्याकृतेर्वापि सदा सत्सेवनादपि ।।७।।
तत्पुण्यं कोटिगुणितं तदस्य श्रवणाद् भवेत् ।
भारतस्य पुराणस्य सम्पूर्णस्य श्रवादपि ।
यत् पुण्यं कोटिगुणितं तदस्य श्रवणाद् भवेत् ।।८।।
यस्य गेहे गणेशस्य पुराणं लिखितं भवेत् ।
न तत्र राक्षसा भूताः प्रेताश्च पूतनादयः ।।९।।
ग्रहा बालग्रहा नैव पीडां कुर्वन्ति कर्हिचित् ।
तद् गृहं हि गणेशेन रक्ष्यते सर्वदा स्वयम् ।।१०।।
इदं पुराणं शृणुयात् पूजयेद् वा समाहितः ।
तस्य दर्शनतः पूता भवन्ति पतिता नराः ।।११।।
ब्रह्मादीनां मुनीनां स मान्यो भवति मानवः ।
क्रुद्धो दहेत् स भुवनं तुष्टो दद्यान्महत् पदम् ।।१२।।

## { ५ अध्याय }

सूतजीले भन्नुभयो - हे शौनक आदि ऋषिवृन्द ! श्रीगणेशपुराणको आश्रय लिने साधकको फेरि जन्म र मृत्यु हुँदैन । एक पटक र अनेक पटक श्रीगणेशपुराणको श्रवण गर्ने साधकको महिमा बताउन शेषनाग र ब्रह्मा पनि समर्थ हुँदैनन् । जसले कुरुक्षेत्रमा गई चन्द्रग्रहण र सूर्यग्रहणका अवसरमा ब्राह्मणहरूलाई भक्ति-पूर्वक एक हजार भारी सुनदान गर्दछ, त्यसले प्राप्त गर्ने पुण्य श्रीगणेशपुराणको श्रवणबाट साधकले प्राप्त गर्न सक्दछ ।।१-३।। दक्षिणा आदिसहित साङ्गोपाङ्ग यज्ञ सम्पन्न गर्दा प्राप्त हुने फल र श्रीगणेशपुराणको श्रवणबाट प्राप्त हुने फलसँगै राखेर एक दिन ब्रह्माले तुलामा जोख्ने काम गर्नुभयो । त्यस बेला श्रीगणेशपुराण सुनेको फल भारी भएको थियो । व्रतसम्पादन र जलदानबाट प्राप्त हुने फलको श्रीगणेशपुराणको श्रवणको फलसँग दाँजिने सम्भावना नै छैन अर्थात् तिनको कुनै गणना नै हुँदैन। कोटि-कन्यादान गरेको जुन फल र हजार गाई दान गरेको जुन फल हुन्छ, त्यसको कोटिगुना फल श्रीगणेशपुराणको श्रवण गर्दा प्राप्त हुन्छ ।।४-६।। अङ्गसहित चारै वेदको निरन्तर पाठ, अध्ययन र व्याख्याको फल एवं सदा सत्सङ्ग गर्दा प्राप्त हुने फलभन्दा पनि करोडौं गुना धेरै फल श्रीगणेशपुराणको श्रवणबाट प्राप्त हुन्छ। महाभारत र सम्पूर्ण पुराणहरूको श्रवण गर्नाले जुन पुण्य प्राप्त हुन्छ त्योभन्दा करोडौं गुना धेरै फल श्रीगणेशपुराणको श्रवणबाट प्राप्त हुन्छ ।।७-८।। जसका घरमा श्रीगणेशपुराणका पाण्डुलिपि अथवा पुस्तक रहेका हुन्छन् त्यहाँ राक्षस, भूत, प्रेत, पूतना आदि बालघाती राक्षस एवं राक्षसी, ग्रह र बालग्रहले कुनै समयमा पनि पीडा दिँदैनन् । वास्तवमा श्रीगणेशले त्यस घरको स्वयं रक्षा गर्नुहुन्छ। सावधान, धीर, संयमित र अचल भएर जसले श्रीगणेशपुराणको श्रवण गर्दछ, त्यस मानिसको दर्शनबाट पतित मानिसहरू पनि पवित्र हुन आउँछन् ।।९-११।। श्रीगणेशपुराणको श्रवण गर्ने श्रोता, ब्रह्मा आदि देवता र मुनिहरूको पनि आदरणीय पुरुष बन्दछ । श्रीगणेशपुराणको पुण्यवान् श्रोता रिसाएमा त्यसले सम्पूर्ण भुवनहरूमा आगो लगाउन सक्छ । त्यो प्रसन्न भयो भने इन्द्र आदि पद पनि प्रदान गर्नसक्छ।।१२।। मानिसले दिनदिनै

अष्टसिद्धीः समाप्नोति श्रवणात् प्रत्यहं नरः ।
न दारिद्र्यं समाप्नोति न सङ्कष्टं नरः क्वचित् ।।१३।।

ईप्सितं समवाप्नोति पद्मादींश्च निधीनपि ।
कल्पद्रुमः कामधेनुर्निधिश्चिन्तामणिस्तथा ।।१४।।

तस्य वश्यत्वमभ्येति सोऽपि वन्द्यो भवत्यपि ।
जारणं मारणं स्तम्भ उच्चाटनमथापि च ।।१५।।

अस्य स्मरणमात्रेण निरस्तं स्यात् क्षणेन ह ।
गणेशनिकटे स्थित्वा पुराणं शृणुयान् नरः ।।१६।।

महापापाद् विनिर्मुक्तः स्त्रीबालहत्ययापि च ।
सान्निध्यमाप्नुयादन्ते गणेशस्य न संशयः ।।१७।।

शूद्रोऽपि मध्ये संस्थाप्य ब्राह्मणान् शृणुयादिदम् ।
क्रमेण लभते वर्णान् वैश्यक्षत्रद्विजाह्वयान् ।।१८।।

नित्यनैमित्तकर्मभ्यश्च्युतो यः शृणुयादिदम् ।
कर्मसाद्गुण्यमाप्नोति गणेशस्य प्रसादतः ।।१९।।

भाद्रशुक्लचतुर्थ्यां यः कृत्वा मूर्तिं महीमयीम् ।
मण्डपे तोरणे रम्ये सम्पूज्य परमादरात् ।।२०।।

पुराणं शृणुयात् सद्यस्तस्य तुष्टो विनायकः ।
ददाति निखिलान् कामानन्ते मोक्षञ्च विघ्नपः ।।२१।।

स्तोत्राण्यत्र च यावन्ति तावन्ति प्रत्यहं नरः ।
पठते यदि यो भक्त्या स सिद्धः स्यान्न संशयः ।।२२।।

असाध्यमपि यत् किञ्चित् तेषां पाठाल्लभेन्नरः ।
अनुष्ठानविधानेन मासमात्रं जपेत् तु यः ।।२३।।

ब्राह्मणान् भोजयेद् भक्त्या सोऽपि तन्मयतामियात्।

श्रद्धापूर्वक श्रीगणेशपुराणको श्रवण गर्दछ भने त्यसले अणिमा, महिमा, गरिमा आदि आठ प्रकारका सिद्धि प्राप्त गर्न सक्छ । त्यस मानिसले दरिद्रता भोग्नुपर्दैन र कहीं पनि त्यसले सङ्कट व्यहोर्नु पर्दैन ।।१३।। त्यसले मनले चिताएको विषयभोग र पद्म आदि निधि पनि प्राप्त गर्दछ । कल्पवृक्ष, कामधेनु र चिन्तामणिजस्ता चिताएका फल दिने र पुऱ्याउने विषय त्यसका वशमा आउँछन् र त्यो आफै पनि सबैको वन्दनीय बन्दछ । श्रीगणेशपुराणको श्रवण गर्नाले अग्निदाह, मृत्यु, स्तम्भन, उच्चाटन-जस्ता विपत्तिहरू एक क्षणमा नाश भएर जान्छन् । भगवान् श्रीगणेशको मन्दिर र प्रतिमाको नजिकै रहेर श्रीगणेशपुराण श्रवण गर्ने मानिस महापाप, स्त्रीहत्या एवं बालहत्याको पापबाट पनि मुक्त हुन्छ । अन्तमा त्यसले भगवान् श्रीगणेशको सान्निध्यमा बस्ने सौभाग्य प्राप्त गर्दछ । यसमा कुनै सन्देह छैन ।।१४-१७।। शूद्र जातिको मानिसले पनि माझमा ब्राह्मणलाई राखी श्रीगणेश-पुराणको श्रवण गरोस्। यसो गर्दा त्यसले क्रमैसँग वैश्य, क्षत्रिय एवं ब्राह्मणवर्णमा जन्म लिने सौभाग्य प्राप्त गर्दछ। नित्य कर्म र नैमित्तिक कर्मबाट चुकेको मानिसले यदि श्रीगणेशपुराण श्रवण गर्दछ भने त्यसले श्रीगणेशको कृपाद्वारा उत्तम फलभोग गर्न पाउँछ र कर्मच्युतिबाट भएको दोषलाई पन्छाउँछ।।१८-१९।। भाद्र महिनाको शुक्लपक्षको चतुर्थी तिथिमा जसले भगवान् श्रीगणेशको पार्थिव प्रतिमा तयार गरी मण्डपमा र रमणीय द्वारमा समेत परम आदरका साथ पूजा गरी पुराण श्रवण गर्दछ भने भगवान् श्रीगणेश त्यसमाथि तुरुन्तै प्रसन्न हुनुहुन्छ। प्रसन्न हुनुभएका भगवान् श्रीगणेशले त्यस भक्तका सम्पूर्ण इच्छाहरू परिपूर्ण तुल्याइदिनुहुन्छ । अन्तमा भगवान् श्रीगणेशले त्यसलाई मोक्षको धाम पनि प्रदान गर्नुहुन्छ । श्रीगणेशपुराणभित्र जति स्तोत्रहरू छन्, ती सबैको दिनदिनै पाठ गर्ने साधक सिद्धपुरुष बन्दछ । यसमा कुनै सन्देह छैन ।।२०-२२।। संसारमा असाध्य मानिएको जुनसुकै विषय भए पनि त्यो श्रीगणेशका स्तोत्रहरूको पाठबाट प्राप्त हुन्छ । अनुष्ठानविधि अँगालेर जसले एक महिनासम्म श्रीगणेशका स्तोत्रहरूको पाठ एवं श्रीगणेशका मन्त्रहरूको जप गर्दछन् र भक्तिपूर्वक ब्रह्मभोजन गराउँछन्, ती साधकहरू पनि श्रीगणेशमा तन्मय हुन्छन् अर्थात् श्रीगणेशमय बन्दछन् ।

ऋषय ऊचुः

**कथमस्य श्रवात् पुण्यं केन प्राप्तं पुराऽनघ ।।२४।।**

**तन्नः शंस महाभाग ! पृच्छतां सूतनन्दन !**

सूत उवाच

**शृण्वन्तु मुनयः पूर्वं कश्चिन्मूकोऽभवन्मुनिः ।।२५।।**

**ब्रह्मलोकं गतोऽकस्माल्लोमशोऽपि यदृच्छया ।**
**नमस्कृत्य च लोकेशमुपविष्टस्तदाज्ञया ।।२६।।**

**पूजितः परया भक्त्या लोमशोऽथाऽब्रवीद् विधिम् ।**

लोमश उवाच

**व्यासाय कथितं देव ! पुराणं पुण्यवर्द्धनम् ।।२७।।**
**गणेशस्य महाभाग ! तन्मे वक्तुमिहार्हसि ।**

ब्रह्मोवाच

**शृणु लोमश ! यत्नेन सर्वपापहरं शुभम् ।।२८।।**

**पुराणं हि गणेशस्य काममोक्षप्रदं नृणाम् ।**

सूत उवाच

**ततः स कथयामास ब्रह्मा स्वीयेन यामतः ।।२९।।**

**लोमशाय गणेशस्य पुराणं काममोक्षदम् ।**
**मूकेन नादलुब्धेन श्रुतं भक्त्याऽखिलं तु तत् ।।३०।।**

**ततः स वागीश्वरवत् प्रोवाच भारतीं मुनिः ।**
**अधीत्य पाठतः कृत्वा श्रावयामास चेतरान् ।।३१।।**

**भुक्त्वा भोगान् यथाकामान् पुत्रान् पौत्रानवाप्य च।**
**अन्ते जगाम परमं धाम गाणेश्वरं शुभम् ।।३२।।**

**पुनः शृण्वन्तु मुनय इतिहासं पुरातनम् ।**
**इक्ष्वाकुकुलसम्भूतो राजा शुद्धात्मकः शुचिः ।।३३।।**

**यज्वा दानप्रदो नित्यं स्वाध्यायपरमोऽरिहा ।**
**आख्याता सर्वधर्माणां प्रजानां पालने रतः ।**
**षष्ठांशभागी लोकानां मान्यः प्रियतरोऽपि च ।।३४।।**

**शौनक आदि ऋषिहरूले भने** – हे निष्पाप महाभाग! श्रीगणेशपुराणको श्रवणबाट के कस्तो पुण्य प्राप्त हुन्छन् र ती पुण्य क-कसले प्राप्त गरे ? हाम्रा प्रश्नहरूको उत्तर दिनुहोस्? हामी श्रद्धापूर्वक श्रवण गरिरहेका छौं ।

**सूतजीले भन्नुभयो**- हे शौनक आदि ऋषिवृन्द ! प्राचीन समयमा कुनै एक मूकनामक लाटा मुनि थिए ।।२३-२५।। एक दिन ती अकस्मात् ब्रह्माको दर्शन गर्न ब्रह्मलोकमा पुगेका थिए। ती त्यहाँ गएको बेला घुम्दैघुम्दै लोमश ऋषि पनि ब्रह्माको धाममा आइपुगे । लोमश ऋषिले ब्रह्मालाई प्रणाम गरेपछि ब्रह्माको आज्ञाअनुसार ती ब्रह्माका सामु आसनमा बसे ।।२६।। ब्रह्माले भक्तिका साथ लोमशको सम्मान गर्नुभयो। लोमशले ब्रह्मासँग निवेदन गरे ।

**लोमशले भने**- हे पितामह ! हजुरले महामुनि व्यासलाई जुन श्रीगणेशपुराण सुनाउनुभयो त्यो पुराण कृपया मलाई पनि सुनाउनुहोस् ।

**ब्रह्माजीले भन्नुभयो** – हे लोमश ! सम्पूर्ण पापनाशक, मङ्गलदायक, काम र मोक्ष प्रदान गर्ने श्रीगणेशपुराण प्रयत्नपूर्वक तिमीले श्रवण गर ।

**सूतजीले भन्नुभयो** - त्यसपछि ब्रह्माले आफ्नो प्रहरार्धमा लोमश ऋषिलाई काम र मोक्ष प्रदान गर्ने श्रीगणेशपुराण सुनाउनुभयो । त्यस बेला त्यहीं बसिरहेका लाटा मुनि मूकले पुराणको कथा नबुझे पनि श्लोक उच्चारण गरेको ध्वनि कानमा पर्दा अत्यन्त आनन्दित हुँदै भक्तिपूर्वक श्रीगणेशपुराण श्रवण गरे ।।२७-३०।। श्रीगणेशपुराणको श्रवण गरेको पुण्यले ती लाटा ऋषि बृहस्पतिझैं बोल्नसक्ने वाणीका स्वामी बने । तिनले आफै श्रीगणेशपुराण पढे र कण्ठस्थ गराए । पछिबाट आफूले पढेको र कण्ठस्थ गराएको श्रीगणेशपुराणलाई आँखा चिम्लेर जस्ताको तस्तै अरूलाई सुनाउन सक्ने पनि भए ।।३१।। त्यसपछि आफ्नो इच्छाअनुसार संसारका सुख भोगेर छोरा एवं नाति प्राप्त गरी अन्तमा ती मूक ऋषि श्रीगणेशको मङ्गलमय धाममा प्राप्त भए ।।३२।। हे ऋषिहरू ! यस सम्बन्धमा अर्को पनि प्रसिद्ध इतिहास छ, त्यो सुन्नुहोस् ! इक्ष्वाकुकुलमा उत्पन्न, पवित्र, शुद्धात्मा, यज्ञशील, दानपरायण, नित्यस्वाध्यायसम्पन्न, शत्रुहन्ता, सबै धर्मका व्याख्याता, प्रजापालनमा तत्पर, जनताबाट आम्दानीको ६

विख्यातस्त्रिषु लोकेषु गोप्ता संवरणाभिधः ।
अनपत्यः स पुत्रार्थे पुत्रीयामिष्टिमाहरत् ।।३५।।

साङ्गां सदक्षिणामन्नदानैः सुविहितां ततः ।
न लेभे सन्ततिं राजा हरिवंशमथाशृणोत् ।।३६।।

पूजयित्वा द्विजानन्ते वाचकं परितोष्य च ।
वस्त्रधेनुहिरण्याद्यै रत्नमूलफलादिभिः ।।३७।।

ततोऽपि नाभवत् पुत्रो दैवान्मूकस्तु तद्गृहम् ।
समायातस्तु विख्यातो गणेशाख्यपुराणवित् ।।३८।।

स्थापितः प्रार्थयित्वा च राज्ञा संवरणेन सः ।
श्रुत्वा पुराणं तद्वक्त्राद् गणेशाख्यं मुदा नृपः ।।३९।।

तदन्ते तोषयामास मूकं तं द्विजपुङ्गवम् ।
रत्नमुक्ताफलैर्वस्त्रैर्भूषणैर्हेमनिर्मितैः ।।४०।।

लेभे ततः कुमारं स गणेशे तत्परोऽभवत् ।
भुक्त्वानेकसुखान् प्राप गाणेशं पदमुत्तमम् ।।४१।।

भगिनी तस्य वन्ध्यासीत् त्रिंशद्वर्षा रजस्वला ।
यथाकालं भवत्येव श्रुत्वा तस्याथ सन्ततिम् ।।४२।।

गणेशाख्यपुराणस्य श्रवाज्जाताञ्च तं मुनिम् ।
आकार्य परिशुश्राव पुराणं तन्मुखाच्छुभम् ।।४३।।

लेभे पुत्रं महाशूरं गणेशभजने रता ।
पुत्रान् पौत्रान् समावाप्य भुक्त्वा भोगान् मनोहरान्।।४४।।

जगाम सा गणेशस्य निजधामावसानतः ।
सगरस्य तु पुत्राणामेकः पङ्गुरभूत् सुतः ।।४५।।

तेनापीदं श्रुतं पुण्यं पुराणं लोमशात् पुरा ।
भक्त्या द्वादशवर्षेण विनीतेनाथ भक्तितः ।।४६।।

प्रतिशत कर लिएर जनताको पालन गर्ने, सबैका मान्य, सबैका प्यारा, तीनै लोकमा विख्यात र सबैका रक्षक संवरण राजा भए। दैवसंयोगले तिनलाई छोरा भएनन् । पुत्रप्राप्तिका लागि तिनले अङ्ग पुऱ्याएर पुत्रेष्टि गरे ।।३३-३५।। त्यसमा दक्षिणाका साथै प्रचुर मात्रामा अन्नदान पनि गरे । त्यसो गर्दा पनि तिनलाई पुत्रप्राप्त भएन । त्यसपछि राजा संवरणले पुत्रप्राप्तिका लागि हरिवंशपुराण श्रवण गरी ब्राह्मणपूजन गरे । वस्त्र, गाई, सुवर्ण, रत्न, कन्दमूल, फल आदि दिएर पुराणको वक्तालाई सन्तुष्ट बनाए । त्यति गर्दा पनि पुत्रलाभ भएन । त्यसपछि कुनै दिन दैवसंयोग श्रीगणेशपुराणका वक्ताका रूपमा संसारमा विख्यात मूकनामक उत्तम ऋषि आइपुगे ।।३६-३८।। राजा संवरणले मूक ब्राह्मणसँग प्रार्थना गरी तिनलाई वाचक बनिदिन प्रार्थना गरी तिनका मुखबाट सहर्ष श्रीगणेशपुराण श्रवण गरे । पुराणको साङ्गताको दिन मूक ब्राह्मणलाई रत्न, वस्त्र, मोती, सुवर्णले बनेका गहना दान गरेर सन्तुष्ट तुल्याए । त्यसपछि तुरुन्तै राजा संवरणले पुत्रलाभ गरेका थिए । त्यसपछि ती राजा श्रीगणेशका परम भक्त भई श्रीगणेशको आराधनामा तत्पर भए । यस संसारका थरिथरि सुखभोग गरी अन्तमा तिनले उत्तम श्रीगणेशधाम प्राप्त गरे ।।३९-४१।। राजा संवरणकी एउटी ३० वर्षकी उमेरमा लागेकी बहिनी थिइन्। समयअनुसार रजस्वला पनि हुने गर्थिन् तर कति उपाय गर्दा पनि तिनलाई सन्तान भएनन् । तिनले आफ्ना दाजु संवरणले श्रीगणेशपुराण सुनेर पुत्र प्राप्त गरेको विषयमा थाहा पाइन्। त्यसपछि तिनले पनि मूक ऋषिलाई बोलाएर तिनका मुखबाट मङ्गलमय श्रीगणेशपुराणको श्रवण गरिन् ।।४२-४३।। श्रीगणेशको आराधनामा निरत ती भक्तिमती नारीले श्रीगणेशपुराणको श्रवण र आराधनाजनित पुण्यबाट पराक्रमी पुत्र प्राप्त गरिन् । त्यसपछि अनेक पुत्र-पौत्र प्राप्त गरी मनोहर र मङ्गलमय संसारका सुख भोगेर अन्तमा श्रीगणेशको धाममा प्राप्त भइन् ।।४४-४५।। सगर राजाका धेरै पुत्रहरूमध्ये एउटा पुत्र लंगडा थिए । तिनले पनि भक्तिपूर्वक लोमश ऋषिका मुखबाट श्रीगणेशपुराणको श्रवण गरे । १२ वर्षसम्म विनम्रता र पवित्रताका साथ अखण्ड रूपमा श्रीगणेशको भक्तिमा डुबेर तिनले श्रीगणेशपुराणको श्रवण गरेका थिए । पुराण श्रवणपछि अनेक द्रव्य अर्पण गरी तिनले लोमश ऋषिलाई सन्तुष्ट बनाए । श्रीगणेशपुराणको

मन्त्रोष्य लोमशं द्रव्यैस्ततोऽङ्घ्रिं समवाप सः ।
विजयं पुष्टिमायुष्यं प्राणान्ते धामतत्परः ।।४७।।

अष्टादशपुराणानां श्रवणे यत् फलं लभेत् ।
तदेकस्य पुराणस्य गणेशस्य श्रुतेर्भवेत् ।।४८।।

काकवन्ध्या बहुसुता श्रवणादस्य जायते ।
स्रवद्गर्भा भवेद् विप्रा दृढगर्भा भवत्यपि ।।४९।।

मूको वागीशतां याति श्रवणान्मुनिपुङ्गवाः ।
वेदाध्ययनसम्पन्नो मान्योऽपि द्विजपुङ्गवः ।।५०।।

शूद्रो वैश्यत्वमाप्नोति वैश्यः क्षत्रियतामियात् ।
क्षत्रियो द्विजतां याति स्मरणादप्यमुष्य हि ।।५१।।

कन्या तु लभते चास्याप्येकाध्यायस्य संश्रवात् ।
गुणवन्तं कुलीनञ्च पतिं साधुं धनान्वितम् ।।५२।।

जात्यन्धो लभते दृष्टिं पुराणस्यास्य संश्रयात् ।
सर्वतीर्थेषु यः स्नायाद् दद्याद् दानानि सर्वशः ।।५३।।

तत्फलं समवाप्नोति भक्त्या यः शृणुयादिदम् ।
पञ्चाग्निसाधनं ग्रीष्मे हेमन्ते जलवासनम् ।।५४।।

वर्षास्वाकाशवासं यः कुरुते बहुवत्सरम् ।
तत् फलं प्राप्नुयान्मर्त्यः संश्रुतेऽध्यायपञ्चके ।।५५।।

अग्निहोत्रं सदा यस्तु सेवते भक्तिमान् नरः ।
तत् फलं हि पुराणस्य श्रवणादस्य जायते ।।५६।।

एकाङ्गुष्ठेन यस्तिष्ठेद् वर्षाणामयुतं नरः ।
दशाध्यायश्रुतेरस्य पुराणस्य तथा फलम् ।।५७।।

पुण्यबाट लंगडा ती सगरपुत्रले खुट्टा प्राप्त गरेका थिए । त्यतिमात्र होइन तिनले विजय, पुष्टि र आयुसमेत प्राप्त गरे । अन्तमा श्रीगणेशको साधनामा तत्पर हुँदै ती पनि श्रीगणेशधाममा गए ।।४६-४७।। अठार महापुराणहरूको श्रवणबाट जुन फल प्राप्त गर्न सकिन्छ त्यो फल एउटै श्रीगणेशपुराणको श्रवणबाट प्राप्त हुन्छ ।।४८।। एक पटकमात्र सन्तान जन्माउने काकवन्ध्या नारीले यो पुराण श्रवण गरेमा ती पनि अनेक पुत्रकी आमा बन्न सक्दछिन् । पटक-पटक गर्भस्रावका कारण दुःखी भएकी नारीले पनि यस पुराणको श्रवणबाट गर्भस्रावको दोषबाट मुक्त भई गर्भरक्षा गर्न समर्थ हुन्छिन् ।।४९।। हे मुनिहरू ! श्रीगणेशपुराणको श्रवणबाट लाटो मानिस पनि बृहस्पतिसमान वाणीको अधिपति हुन्छ । श्रीगणेशपुराणको श्रवण गर्ने ब्राह्मण उत्तम ब्राह्मण बन्दछ, मान्य हुन्छ र वेदाध्ययन सम्पन्न पनि हुन्छ । श्रीगणेशपुराणको श्रवण गर्ने शूद्र वैश्यजातिमा परिणत हुन्छ। यसै गरी श्रीगणेशपुराण श्रवण गर्ने वैश्य क्षत्रिय जातिका रूपमा परिणत हुन्छ । श्रीगणेशपुराणको एउटा अध्यायमात्र श्रवण गर्नाले अविवाहित कन्याले गुणवान्, कुलीन, सज्जन र धनी पति प्राप्त गर्न सक्दछिन् ।।५०-५२।। श्रीगणेशपुराणको श्रवण गर्नाले जन्मान्धहरूले पनि दृष्टिशक्ति प्राप्त गर्दछन् । जसले भक्तिपूर्वक श्रीगणेशपुराणको श्रवण गर्दछ त्यसले सबै तीर्थमा स्नान र दान गरेको पुण्य प्राप्त गर्दछ । ग्रीष्म (जेठ, असार)मा पञ्चाग्निसाधना, हेमन्त (मंसिर, पुष)मा पानीमा बसी जलसाधना, वर्षा (श्रावण, भदौ)मा खुला जमिनमा बसी वर्षासाधना जसले गर्दछ त्यसले गरेका ती सम्पूर्ण तपस्याको फल श्रीगणेशपुराणका पाँच अध्यायमात्र भक्तिपूर्वक पाठ र श्रवण गर्ने भक्तले प्राप्त गर्दछ ।।५३-५५।। जुन भक्तिमान् मानिसले दिनदिनै अग्निहोत्र गर्दछ, त्यसले प्राप्त गर्ने पुण्य भक्ति-पूर्वक श्रीगणेशपुराण श्रवण गर्ने मानिसले पनि प्राप्त गर्दछ ।।५६।। कुनै मानिसले खुट्टाको बूढी औंलाले टेकेर उभिई दश हजार वर्षसम्म तपस्या गरी जुन फल प्राप्त गर्दछ, त्यो फल श्रीगणेश-पुराणको श्रद्धापूर्वक दश अध्यायमात्र श्रवण गर्ने मानिसले प्राप्त गर्न सक्दछ । यस कुरामा कुनै सन्देह छैन ।।५७।। मानिसले

लभते मानवो भक्त्या निश्चितं नात्र संशयः ।
आजन्ममरणान्नित्यं शृणुयान्मानवो भुवि ।।५८।।

पुराणन्तु गणेशस्य चक्रवर्ती भवेत् तु सः ।
आजन्ममरणाद् यस्तु काशीवासं करोति च ।।५९।।

तत्पुण्यं लभते मर्त्यो गणेशस्य पुराणतः ।
सहस्रं माघमासान् यः प्रयागे स्नाति मानवः ।।६०।।

तत्फलं लभते मर्त्यः पुराणस्यास्य संश्रवात् ।
गोमतीसङ्गमे तद्वत् स्नानं भक्त्या करोति यः ।।६१।।

तत्फलं कोटिगुणितं लभते चास्य संश्रवात् ।
गणेशस्य पुराणं यः शृणुयाद् भक्तिमान् नरः ।।६२।।

न भयं तस्य शूलात् तु वज्राच्च चक्रिचक्रतः ।
इदं वः कथितं सर्वं पुराणञ्च सविस्तरम् ।।६३।।

सम्पूर्णो महिमा वक्तुं न शक्यो वर्षकोटिभिः ।
ब्रह्मणा षण्मुखेनापि शेषेणापि मुनीश्वराः ।।६४।।

युष्माभिः परिपृष्टं यत् सर्वपापप्रणाशनम् ।
सर्वकामप्रदं भुक्तिमुक्तिदं पुण्यवर्धनम् ।।६५।।

गणेशस्य परेशस्य नानालीलाधरस्य च ।
वक्तृश्रोत्रोरघहरं सर्वमाङ्गल्यदायकम् ।।६६।।

जन्मदेखि मृत्युसम्म नित्य श्रीगणेशपुराणको श्रवण गर्नुपर्दछ। जसले त्यसो गर्दछ, त्यो मानिस चक्रवर्ती राजा हुन्छ । जन्मदेखि मरणसम्म जुन मानिसले काशीवास गरी पुण्य आर्जन गर्दछ, त्यसले प्राप्त गर्ने पुण्य श्रीगणेशपुराणको श्रवण गर्ने मानिसले पनि प्राप्त गर्दछ । कुनै मानिसले प्रयाग तीर्थमा रहेर एक हजार वर्षका माघ महिनाहरूमा नुहाउँदा जुन फल प्राप्त गर्छ, त्यो फल श्रीगणेशपुराण श्रवण गर्ने मानिसले पनि प्राप्त गर्छ। गङ्गा र गोमती नदीको सङ्गममा नुहाएर जुन फल प्राप्त हुन्छ, त्यो फलभन्दा करोडौं गुना धेरै फल श्रीगणेशपुराणको श्रवणबाट प्राप्त हुन्छ । जुन भक्तिमान् मानिसले श्रीगणेशपुराणको श्रवण गर्दछ, त्यसलाई शिवजीको त्रिशूल, इन्द्रको वज्र र नारायणको चक्रबाट पनि भय हुँदैन । हे ऋषिवृन्द ! मैले तपाईंहरूलाई विस्तारपूर्वक यस्तो अपूर्व महिमा भएको भगवान् श्रीगणेशको प्यारो श्रीगणेशपुराण सुनाएँ ।।५८-६३।। हे मुनिहरू! श्रीगणेश-पुराणको श्रवणको सम्पूर्ण महिमा ब्रह्मा, स्कन्द र शेषनागले करोडौं वर्ष लगाएर पनि वर्णन गर्न सक्दैनन् । हे मुनिहरू ! तपाईंहरूले सबै पापलाई नाश गर्ने, सम्पूर्ण कामना परिपूर्ण गराउने, भुक्ति र मुक्ति दिने, पुण्यको वृद्धि गराउने परमात्मा अनेक लीलाधारी भगवान् श्रीगणेशको विषयमा सोध्नुभएअनुसार मैले तपाईंहरूलाई वक्ता र श्रोता दुबैका पापहरूको विनाश गर्ने र सम्पूर्ण मङ्गल प्रदान गर्ने श्रीगणेशपुराण सुनाएँ ।।६४-६६।। जय श्रीगणेश!

ॐ

इतिश्रीगणेशपुराणान्तर्गते श्रीगणेशमाहात्म्ये सूत-शौनकादिसंवादे पञ्चमोऽध्यायः

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोरकनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराणमाहात्म्यको पहिलो अध्याय पूर्ण भयो ।।

ॐ

गजाननं भूतगणादिसेवितं कपित्थजम्बूफलचारुभक्षणम् ।
उमासुतं शोकविनाशकारकं नमामि विघ्नेश्वरपादपङ्कजम् ।।

ॐ

# श्रीमद्गणेशपुराणपाठविधिः

**विधिनिर्देशः**

कर्ताले प्रातःकालमा स्नान गरी पवित्र भएर प्राणायाम गरेपछि तीन पटक आचमन गरेर मङ्गलपाठ गर्दै भगवान् गजाननलाई नमस्कार गर्नुपर्दछ । त्यसपछि षोडशोपचार, पञ्चोपचार अथवा मानसोपचारले भगवान् गणेश, व्यास, ब्रह्मा, नारद, भृगु, सूत एवं श्रीगणेशपुराण ग्रन्थको भक्तिपूर्वक पूजा गर्नुपर्दछ । पाठ आरम्भ गर्नुभन्दा पहिले **ॐ गं गणपतये नमः** अथवा **ॐ वक्रतुण्डाय हुम्** मन्त्रको १०८ अथवा २१ पटक जप गरेपछि तल बताइएअनुसार विनियोग गर्नुपर्दछ। विनियोगपछि ऋषिन्यास, हृदयादिन्यास, करन्यास र ध्यान गर्नुपर्दछ ।

प्रयोगः

स्नातः शुचिर्भूत्वा प्राणानायम्य त्रिराचान्तो मङ्गलपाठपूर्वकं भगवन्तं गजाननं नमस्कुर्यात् । ततः षोडशोपचारैर्मानसोपचारैर्वा गजाननं व्यासं ब्रह्माणं नारदं भृगुं सूतं श्रीमद्गणेशपुराणग्रन्थञ्च सभक्तिभावं पूजयेत् । ततः पाठारम्भात् पूर्वं **ॐ गं गणपतये नमः** इत्यष्टाक्षरमन्त्रम्, **ॐ वक्रतुण्डाय हुम्** इति षडक्षरमन्त्रं वाष्टोत्तरशतशतमथवैक-विंशतिवारं जपेत् । ततो विनियोगं कुर्यात् ।

**विनियोगः**

अस्य श्रीमद्गणेशपुराणाख्यस्तोत्रमन्त्रस्य **श्रीमहागणपतिः** ऋषिः, **स्वानन्ददेशो ब्रह्मणस्पतिर्देवता, नानाविधानि** छन्दांसि, हुम् इति बीजम्, तुंगमिति शक्तिः, **स्वाहाशक्तिरिति** कीलकम्, मम **श्रीगजाननप्रसाद**-सिद्ध्यर्थं श्रीमद्गणेशपुराणपाठे विनियोगः ।

**ऋष्यादिन्यासः**

ॐ **महागणपतये नमः** इति शिरसि, **नानाविधछन्दोभ्यो नमः** इति मुखे, **स्वानन्दभुवनवासिने ब्रह्मणस्पतये नमः** इति हृदि, **हुम् इति बीजाय नमः** इति गुह्ये, **गम् इति शक्तये नमः** इति पादयोः, **स्वाहाशक्तिकीलकय नमः** इति नाभौ, **श्रीमद्गजाननप्रसादसिद्ध्यर्थकपाठाय** नमः इति सर्वाङ्गे ।

**हृदयादिन्यासः**

ॐ गां हृदयाय नमः, **ॐ गीं शिरसे स्वाह, ॐ गूं शिखायै वषट्, ॐ गैं कवचाय हुम्, ॐ गौं नेत्रत्रयाय** वौषट्, ॐ गः अस्त्राय फट् ।

**करन्यासः**

**ॐ गां अङ्गुष्ठाभ्यां नमः, ॐ गीं तर्जनीभ्यां स्वाहा, ॐ गूं मध्यमाभ्यां वषट्, ॐ गैं अनामिकाभ्यां हुम्, ॐ गौं कनिष्ठिकाभ्यां वौषट्, ॐ गः करतलपृष्ठाभ्यां फट् ।**

**ध्यानम्**

परं धाम परं ब्रह्म परेशं परमीश्वरम् । विघ्ननिघ्नकरं शान्तं पुष्टं कान्तः मनन्तकम् ।।
सुरासुरेन्द्रैः सिद्धेन्द्रैः स्तुतं स्तौमि परात्परम् । सुरपद्मदिनेशञ्च गणेशं मङ्गलायनम् ।।

# पाठारम्भपुष्पाञ्जलिः

अजन्निर्विकल्पं निराकारमेकं निरानन्दमद्वैतमानन्दपूर्णम् ।
परं निर्गुणं निर्विशेषं निरीहं परब्रह्मरूपं गणेशं भजेम ।।

गुणातीतमाद्यं चिदानन्दरूपं चिदाभासकं सर्वगं ज्ञानगम्यम् ।
मुनिध्येयमाकाशरूपं परेशं परब्रह्मरूपं गणेशं भजेम ।।

जगत्कारणं कारणज्ञानरूपं सुरादिं सुखादिं युगादिं गणेशम् ।
जगद्व्यापिनं विश्ववन्द्यं सुरेशं परब्रह्मरूपं गणेशं भजेम ।।

रजोयोगतो ब्रह्मरूपं श्रुतिज्ञं सदा कार्यसक्तं हृदा चिन्त्यरूपम् ।
जगत्कारकं सर्वविद्यानिधानं परब्रह्मरूपं गणेशं नताः स्मः ।।

सदा सत्त्वयोगं मुदा क्रीडमानं सुरारीन् हरन्तं जगत् पालयन्तम् ।
अनेकावतारं निजाज्ञानहारं सदा विष्णुरूपं गणेशं नमामः ।।

तमोयोगिनं रुद्ररूपं त्रिनेत्रं जगद्धारकं तारकं ज्ञानहेतुम् ।
अनेकागमैः स्वं जनं बोधयन्तं सदा शर्वरूपं गणेशं नमामः ।।

तमस्तोमहारं जनाज्ञानहारं त्रयीवेदसारं परब्रह्मपारम् ।
मुनिज्ञानकारं विदूरे विकारं सदा ब्रह्मरूपं गणेशं नमामः ।।

निजैरोषधीस्तर्पयन्तं करौघैः सुरौघान् कलाभिः सुधास्राविणीभिः ।
दिनेशांशुसन्तापहारं द्विजेशं शशाङ्कस्वरूपं गणेशं नमामः ।।

प्रकाशस्वरूपं नभोवायुरूपं विकारादिहेतुं कलाकालभूतम् ।
अनेकक्रियाऽनेकशक्तिस्वरूपं सदा शक्तिरूपं गणेशं नमामः ।।

प्रधानस्वरूपं महत्तत्त्वरूपं धरावारिरूपं दिगीशादिरूपम् ।
असत्सत्स्वरूपं जगद्धेतुभूतं सदा विश्वरूपं गणेशं नताः स्मः ।।

त्वदीये मनः स्थापयेदङ्घ्रियुग्मे जनो विघ्नसङ्घान्न पीडां लभेत ।
लसत्सूर्यबिम्बे विशाले स्थितोऽयं जनो ध्वान्तबाधां कथं वा लभेत ।।

# शुभारम्भमङ्गलम्

ॐ

सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः ।
लम्बोदरश्च विकटो विघ्ननाशो गणाधिपः ।।

धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः ।
द्वादशैतानि नामानि यः पठेच्छृणुयादपि ।।

विद्यारम्भे विवाहे च प्रवेशे निर्गमे तथा ।
सङ्ग्रामे सङ्कटे चैव विघ्नस्तस्य न जायते ।।

शुक्लाम्बरधरं देवं शशिवर्णं चतुर्भुजम् ।
प्रसन्नवदनं ध्यायेत् सर्वविघ्नोपशान्तये ।।३९।।

ॐ

ॐ

## उपासनाखण्डसार:

श्रीविघ्नेशपुराणसारमुदितं व्यासाय धात्रा पुरा
तत्खण्डं प्रथमं महागणपतेश्चोपासनाख्यं यथा ।
संहर्तुं त्रिपुरं शिवेन गणपस्यादौ कृतं पूजनं
कर्तुं सृष्टिमिमां स्तुतः स विधिना व्यासेन बुद्ध्याप्तये ।।१।।

सङ्कष्ट्याश्च विनायकस्य च मनोः स्थानस्य तीर्थस्य वै
दूर्वाणां महिमेति भक्तिचरितं तत्पार्थिवस्यार्चनम् ।
तेभ्यो यैर्यदभीप्सितं गणपतिस्तत्तत्प्रतुष्टो ददौ
ताः सर्वा न समर्थ एव कथितुं ब्रह्मा कुतो मानवः ।।२।।

**अर्थ** – प्राचीन समयमा ब्रह्माले वेदव्यासलाई गणेशपुराणको सार बताउनुभएको थियो । गणेशपुराणका दुई खण्डमध्ये पहिलो खण्ड उपासनाखण्ड हो । यसमा वर्णन गरिएअनुसार सदाशिवले त्रिपुरको संहारका लागि सर्वप्रथम श्रीगणेशको आराधना गर्नुभयो । त्यसपछि ब्रह्माले सृष्टिको रचना गर्न विधिपूर्वक श्रीगणेशको स्तुति गर्नुभयो । वेदव्यासले बुद्धिप्राप्त गर्न श्रीगणेशको स्तवन गर्नुभयो । भक्तिमय चरित्रको प्रस्तुति गर्ने क्रममा सङ्कष्टी देवी, श्रीगणेश, श्रीगणेशका मन्त्र, श्रीगणेशको धाम, श्रीगणेशका तीर्थ र दूर्वाङ्कुरको महिमा पनि यस खण्डमा बताइएको छ । यसमा भक्तिचर्याको उत्तम दृष्टान्तको रूपमा पार्थिव पूजाविधि प्रस्तुत गरिएको छ । श्रीगणेशमा भक्ति गर्ने साधकहरूमध्ये जसले जुन पदार्थ प्राप्त गर्ने इच्छा व्यक्त गरेका थिए ती सबैलाई श्रीगणेशले दर्शन दिएर कृतार्थ तुल्याउनुभएको थियो । भगवान् श्रीगणेशको अपूर्व करुणा र दानको विषयमा ब्रह्मा पनि पूरापुर बताउन समर्थ हुनुहुन्न भने सामान्य मानिसले कसरी बताउन सक्छन् ?

ॐ

ॐ

# श्रीगणेशपुराणम्

ॐ

## उपासनाखण्डः

ॐ

### प्रथमोऽध्यायः

卐

卐 श्रीगणेशाय नमः 卐

★ श्रीसरस्वत्यै नमः ★ ★ श्रीगुरुभ्यो नमः ★

卐

नमस्तस्मै गणेशाय ब्रह्मविद्याप्रदायिने ।
यस्यागस्त्यायते नाम विघ्नसागरशोषणे ।।

ऋषय ऊचुः

सूत सूत महाप्राज्ञ वेदशास्त्रविशारद ।
सर्वविद्यानिधे त्वत्तो वक्ताऽन्यो नोपलभ्यते ।।१।।

जन्मजन्मान्तरीयं नः स्थितं पुण्यं महत्तरम् ।
तेन सन्दर्शनं जातं सर्वज्ञस्य सतस्तव ।।२।।

वयं धन्यतमा लोके जीवितं नः सुजीवितम् ।
पितरो वेदशास्त्राणि तपांस्याश्रम एव च ।।३।।

अष्टादशपुराणानि विस्तराच्छ्रावितानि नः ।
अन्यान्यपि हि नः श्रोतुमिच्छा नो वद सत्तम ।।४।।

शौनकेये महासत्रे सक्ता द्वादशवार्षिके ।
त्वत्कथामृतपानान्नो नान्यद्विश्रामकारणम् ।।५।।

सूत उवाच

साधु पृष्टं महाभागा भवद्भिः पुण्यकर्मभिः ।
साधूनां समचित्तानां मतिर्लोकोपकारिणी ।।६।।

### { १ अध्याय }

**श्रीगणेशलाई नमस्कार गर्दछु । श्रीसरस्वतीलाई नमस्कार गर्दछु । श्रीगुरुदेवहरूका चरणकमलमा प्रणाम गर्दछु ।**

विघ्नका सागरहरू सुकाउन अगस्त्य ऋषिसमान प्रभावशाली पवित्र नामले सम्पन्न, विघ्नविनाशक एवं ब्रह्मविद्याका उपदेशक भगवान् श्रीगणेशका चरणकमलमा प्रणाम गर्दछु ।

**ऋषिहरूले प्रश्न गरे** – अत्यन्त समुन्नत प्रज्ञाद्वारा सुहाएका वेद र शास्त्रका विशेषज्ञ, सबै विद्याका निधि हे सूतज्यू! शास्त्र र विद्याका विषयमा हजुरभन्दा विशेषज्ञ अर्को वक्ता कुनै छैन ।।१।। जन्म-जन्मान्तरको महान् पुण्यका प्रतापबाट आज हामीले हजुरजस्ता सर्वज्ञ, सज्जन र विद्वान्को दर्शन गर्ने उत्तम प्राप्त गर्यौं ।।२।। आज संसारमा हामी धन्य छौं, हाम्रो जीवन उत्तम जीवनका रूपमा परिणत भएको छ । हाम्रा पितापुर्खा, वेद एवं शास्त्र, तप र आश्रम व्यवस्था पनि धन्य भएका छन् । हजुरले हामीहरूलाई विस्तारपूर्वक अठार महापुराण सुनाउनुभएको छ । हे महापुरुष ! यसैगरी अरू पुराणहरूको विषयमा पनि हाम्रो जिज्ञासा रहेको छ । ती पुराणहरूमा आधारित प्रवचन दिएर कल्याण गर्नुहुन हामी हजुरसँग अनुरोध गर्दछौं ।।३-४।। शौनक ऋषिको बाह्र वर्षसम्म चल्ने महायागमा हामी दीक्षित भएका छौँ । तपाईंको कथामृतपानभन्दा अर्को कुनै विश्रामको उपाय छैन ।।५।।

**सूतजीले भन्नुभयो** – उत्तम भाग्य भएका हे ऋषिहरू! पुण्यकर्ममा प्रवृत्त हुनुभएका तपाईंहरूले उत्तम जिज्ञासा व्यक्त गर्नुभयो । सर्वत्र समान दृष्टि भएका सज्जनहरूको बुद्धि निरन्तर लोकोपकारमा प्रवृत्त हुने गर्दछ ।।६।। हे ब्राह्मण

ममापि परितोषोऽस्ति कथानां कथने द्विजाः ।
अतोऽहं साधुवृत्तेभ्यः कथयिष्ये विशेषतः ।।७।।

अन्यान्युपपुराणानि वर्तन्तेऽष्टादशैव च ।
गणेशं नारदीयं च नृसिंहादीन्यथापि च ।।८।।
गणेशस्य पुराणं यत्तत्रादौ कथयाम्यहम् ।
दुर्लभं श्रवणं यस्य मर्त्यलोके विशेषतः ।।९।।

यस्य स्मरणमात्रेण कृतकृत्यो भवेन्नरः ।
प्रभावमस्य गदितुं नेशः शेषश्चतुर्मुखः ।।१०।।

सङ्क्षेपतो ब्रवीम्येतत् तथापि भवदाज्ञया ।
बहुजन्मार्जितैः पुण्यैरस्य तु श्रवणं भवेत् ।।११।।

पाखण्डिनां नास्तिकानां न भवेत् पापकर्मिणाम् ।।
नित्यत्वान्निर्गुणत्वाच्च अनादित्वाच्च तत्त्वतः ।।१२।।

गणेशस्य स्वरूपं न वक्तुं केनापि शक्यते ।
तथाप्युपासनासक्तैर्निर्गुणं तन्निरूप्यते ।।१३।।

ॐकाररूपी भगवान् यो वेदादौ प्रतिष्ठितः ।
यं सदा मुनयो देवाः स्मरन्तीन्द्रादयो हृदि ।।१४।।

यं पूजयन्ति सततं ब्रह्मेशानेन्द्रविष्णवः ।।
यो हेतुः सर्वजगतां सर्वकारणकारणम् ।।१५।।

यदाज्ञया कः सृजतेऽथ विष्णु-
र्यदाज्ञया पालनमातनोति ।।
यदाज्ञया संहरते हरोऽपि
यदाज्ञया सञ्चरते दिनेशः ।।१६।।

यदाज्ञया वाति समीरणोऽपि
यदाज्ञयापः प्रवहन्ति दिक्षु ।
यदाज्ञया भानि पतन्ति भूमौ
यदाज्ञयाग्निर्ज्वलति त्रिलोके ।।१७।।

देवताहरू! मलाई पनि उत्तम कथाहरूको वक्ता भएर आदर्शको उपस्थापन गर्न पाउँदा ज्यादै सन्तोष लागेको छ । तसर्थ उत्तम चरित्रले सुहाएका तपाईंहरूजस्ता विद्वान् श्रोताहरूका सामु मैले विशेषरूपमा शास्त्र र विद्याको विषयमा आधारित कथाहरूको प्रकाशन गर्नेछु ।।७।। श्रीगणेशपुराण, नारदीयपुराण र नृसिंहपुराण आदि सबै पुराणहरूको गणना गर्दा अठार महापुराणहरूभन्दा भिन्दै अठार उपपुराण पनि रहेका छन् ।।८।।

सर्वप्रथम म तपाईंहरूसमक्ष श्रीगणेशपुराणको विषयवस्तु प्रकाशित गर्दछु । मर्त्यलोकमा श्रीगणेशपुराणको श्रवण अत्यन्त दुर्लभ मानिएको छ ।।९।। भगवान् श्रीगणेशको नाम-स्मरणबाट मात्र मानिस कृतकृत्य हुन्छ । श्रीगणेशको प्रभुताको विषयमा सम्पूर्णतया बताउन शेषनाग र ब्रह्माजी पनि समर्थ हुनुहुन्न ।।१०।। वस्तुतथ्य यस्तो भए तापनि म तपाईंहरूको आज्ञालाई शिरोपर गरेर सङ्क्षेपमा आफ्नो ज्ञानअनुसार श्रीगणेशपुराणको वर्णन गर्दछु। अनेक जन्ममा अर्जित पुण्यले मात्र श्रीगणेशपुराण सुन्न पाइन्छ।।११।। पाखण्डी, नास्तिक र पापीहरू अनेक प्रयास गर्दा पनि श्रीगणेशपुराण सुन्ने सौभाग्यबाट वञ्चित हुन्छन् । वस्तुतः श्रीगणेश नित्य, निर्गुण र अनादिस्वरूप हुनुहुन्छ ।।१२।। त्यस कारण श्रीगणेशको वास्तविक स्वरूप कसैले पनि बताएर सक्दैन। तथापि उपासनामा निरन्तर लाग्ने मानिसहरूले उहाँको स्वरूपलाई जान्न इच्छा गर्दछन्। त्यस कारण म सर्वप्रथम श्रीगणेशको निर्गुण स्वरूपको विषयमा प्रवचन गर्दछु ।।१३।। श्रीगणेश ॐकाररूप भगवान् हुनुहुन्छ। उहाँ वेद आदि शास्त्रहरूमा ॐकारकै रूपमा विराजमान हुनुहुन्छ। श्रीगणेशलाई मुनिगण र इन्द्र आदि देवताहरूले हृदयमा स्मरण गर्दछन् ।।१४।। ब्रह्मा, शिव, विष्णु र इन्द्रले जसको निरन्तर आराधना गर्दछन्, जो सम्पूर्ण संसारका कारण हुनुहुन्छ ती श्रीगणेश सबै कारणका पनि कारणतत्त्व हुनुहुन्छ।।१५।। जसको आज्ञा प्राप्त गरेर ब्रह्माजीले जगत्को सृष्टि गर्नुहुन्छ, विष्णुले पालन गर्नुहुन्छ र शिवजीले संहार गर्नुहुन्छ । जुन श्रीगणेशको आज्ञाका वशवर्ती भएर सूर्यनारायण निरन्तर आकाशमण्डलमा भ्रमण गर्नुहुन्छ ।।१६।। जसको आज्ञा पाएर पवन सर्वत्र विचरण गर्दछन् । जसको आज्ञाअनुसार जलतत्त्व सम्पूर्ण विश्वमा फैलिएर रहन्छ । जुन श्रीगणेशको आज्ञाबाट ग्रह-नक्षत्रहरूले आफ्ना किरण संसारमा फैलाउँछन्, जुन श्रीगणेशको आज्ञाबाट अग्निदेवता स्वर्ग, मर्त्य

तस्य यच्चरितं गुप्तं कस्यापि न निवेदितम् ।
तदहं वः प्रवक्ष्यामि सादरं श्रूयतां द्विजाः ।।१८।।

ब्रह्मणा कथितं पूर्वं व्यासायामिततेजसे ।
भृगवे कथितं तेन सोमकान्ताय तेन च ।।१९।।

व्रतैर्यज्ञैस्तपोभिश्च दानैस्तीर्थैश्च कोटयः ।
भवन्ति येषां पुण्यानां तेषां बुद्धिः प्रजायते ।।२०।।

गणेशाख्यपुराणस्य श्रवणे द्विजसत्तमाः ।
माया येषां न संसारे न दारापत्यभूमिषु ।।२१।।

मयूरेशकथायां ते सादरा मुनिसत्तमाः ।
श्रूयतामस्य महिमा सोमकान्तप्रसङ्गतः ।।२२।।

सौराष्ट्रे देवनगरे सोमकान्तोऽभवन्नृपः ।
वेदशास्त्रार्थतत्त्वज्ञो धर्मशास्त्रार्थतत्परः ।।२३।।

दशनागसहस्राणि हयानां द्विगुणानि च ।
रथिनां षट्सहस्राणि प्रयान्तमनुयान्ति च ।।२४।।

पदातयोऽप्यसङ्ख्याता अग्निशस्त्रधरास्तथा ।
कोदण्डधारिणश्चान्ये निषङ्गद्वयधारिणः ।।२५।।

बुद्ध्या बृहस्पतिं जिग्ये सम्पदा धनदञ्च यः ।
क्षमया पृथिवीं जिग्ये गाम्भीर्येण महोदधिम् ।।२६।।

सूर्याचन्द्रमसौ जिग्ये भासा कान्त्या च यो नृपः ।
प्रतापेनानलं जिग्ये सौन्दर्येण मनोभवम् ।।२७।।

यस्यामात्याः प्रबलिनः पञ्चासन् दृढविक्रमाः ।
नीतिशास्त्रार्थतत्त्वज्ञाः परराष्ट्रविमर्दिनः ।।२८।।

रूपवान् प्रथमस्तत्र विद्याधीशस्तथापरः ।
क्षेमङ्करो ज्ञानगम्यः सुबलः पञ्चमः स्मृतः ।।२९।।

एवं पातालमा जाज्वल्यमान बन्दछन् ।।१७।। त्यसता ती परमेश्वर श्रीगणेशको गुप्त र गहन चरित्रलाई आजसम्म कसैका सामु प्रकाशित गरिएको छैन । म आज तपाईंहरूसामु आदरपूर्वक त्यो चरित्र प्रकाशित गर्दछु । हे ब्राह्मणहरू ! श्रीगणेशको त्यो पावन चरित्र तपाईंहरूले आदरपूर्वक सुन्नुहोस् ।।१८।। सर्वप्रथम ब्रह्माजीले आफ्ना अत्यन्त तेजस्वी शिष्य वेदव्यासलाई त्यो चरित्र बताउनुभएको थियो । वेदव्यासले भृगुऋषिलाई बताउनुभयो र भृगुऋषिले पनि त्यो पावन चरित्र आफ्ना शिष्य सोमकान्तलाई उपदेश गर्नुभएको थियो ।।१९।।

व्रत, यज्ञ, तप, दान, तीर्थाटनद्वारा जसले कोटि-कोटि पुण्य अर्जित गरेका छन्, ती भाग्यशाली साधकहरूका बुद्धिमा मात्र श्रीगणेशको चरित्र र श्रीगणेशपुराणको श्रवणमा जिज्ञासा पैदा हुन्छ।।२०।। हे उत्तम ब्राह्मणहरू! संसारको ऐश्वर्य, पत्नी, पुत्र र भूसम्पत्तिमा जसको आसक्ति हुँदैन, ती पुण्यवान् मानिसहरूमात्र मयूरेशका नामबाट प्रसिद्ध हुनुभएका श्रीगणेशको पुराणामृत पान गर्न आदरपूर्वक लालायित हुन्छन्। हे मुनिजन! सोमकान्त-नामक प्राचीन राजाको कथाप्रसङ्गबाट म तपाईंहरूलाई मयूरेश प्रभुको महिमा बताउँछु, तपाईंहरू सुन्नुहोस् ।।२१-२२।। कुनै समयमा सौराष्ट्रको देवनगरमा सोमकान्त नामक राजा थिए। ती वेद र शास्त्रका तत्त्वज्ञाता थिए र धर्मशास्त्रको अर्थबोध एवं प्रयोगमा नित्य तत्पर थिए।।२३।। ती राजा कतै जाँदा दश हजार हात्ती, बीस हजार घोडा र छ हजार रथ सेना तिनका अनुयायी बन्दथे ।।२४।। ती सेनाहरूका पछि आग्नेयास्त्रले सजिएका असङ्ख्य पैदल सैनिक रहन्थे । धनु एवं ठोक्रा धारण गर्ने र तलवारहरूले सुसज्जित वीरहरू पनि तिनका अनुयायी बन्दथे ।।२५।। राजा सोमकान्तले आफ्नो बुद्धिद्वारा बृहस्पति, सम्पत्तिद्वारा कुबेर, सहनशीलताद्वारा पृथिवी, गाम्भीर्यद्वारा महासागर, आभा र कान्तिद्वारा सूर्य एवं चन्द्रमा, प्रतापद्वारा अग्निलाई र सौन्दर्यद्वारा कामदेवलाई परास्त गरेका थिए ।।२६-२७।। राजा सोमकान्तका बलवान्, दृढचरित्र, पुरुषार्थी, नीतिशास्त्रका विशेषज्ञ, शत्रुराष्ट्रलाई शौर्य र वीर्यले छिन्न-भिन्न तुल्याउन समर्थ र गुणवान्‌का रूपमा संसारमा प्रख्यात पाँच महामात्य थिए ।।२८।। ती पाँच जना महामात्यमा पहिला महामात्य रूपवान्, दोस्रा महामात्य विद्याधीश, तेस्रा महामात्य क्षेमङ्कर, चौथा महामात्य ज्ञानगम्य र पाँचौं महामात्य सुबलका

राजकार्यकरा नित्यं राज्ञ:प्रियतमा भृशम् ।
एतैर्नानाविधा देशा आक्रान्ताः स्वपराक्रमात् ।।३०।।

एतेऽतिसुन्दरा नानाभूषावस्त्रैरलङ्कृताः ।
तस्य राज्ञोऽभवद्भार्या सुधर्मा गुणशालिनी ।।३१।।

यद्रूपमवलोक्यैव रतिरम्भातिलोत्तमाः ।
लज्जिता न सुखं क्वापि लेभिरे न च मेनिरे ।।३२।।

अनेकरत्नखचिते ताटङ्के काञ्चने शुभे ।
बिभ्रती कर्णयोः कण्ठे निष्कं मुक्ताफलानि च ।।३३।।

कटौ रत्नमयीं काञ्चीं तादृशे नूपुरेऽङ्घ्रिगे ।
अङ्गुलीयान्युत्तमानि करपादाङ्गुलीषु च ।।३४।।

वासांस्यनेकवर्णानि महार्हाणि सहस्रशः ।
भगवद्भजने सक्ता तथा चातिथिपूजने ।।३५।।

सेवनेऽहर्निशं भर्तुर्वचने च रता सदा ।
हेमकण्ठ इति ख्यात:पुत्रोऽभूदनयोः शुभः ।।३६।।

गजायुतबलो धीमान् विक्रमी शत्रुतापनः ।
एवमासीत् सोमकान्तः पृथिव्यां राजसत्तमः ।।३७।।

सर्वान् राज्ञो वशे कृत्वा चक्रे राज्यं धरातले ।
नित्यं धर्मरतो यज्वा दाता त्यागी द्विजोत्तमाः ।।३८।।

नामबाट प्रसिद्ध थिए ।।२९।। ती सबै महामात्यहरू राजाका आज्ञापालक र प्रीतिपात्र पनि थिए। ती महामात्यहरूले आफ्नो पुरुषार्थ र पराक्रमबाट अनेक देशहरूमा आक्रमण गरी राजालाई विजयश्री दिलाउन सहयोग गरेका थिए ।।३०।। ती महामात्यहरू बहुमूल्य एवं सुन्दर गहना र वस्त्रहरूबाट अलङ्कृत थिए । राजा सोमकान्तकी सुधर्मा नामक रानी अत्यन्त गुणवती र रूपवती पनि थिइन् ।।३१।। सुधर्माको रूपसौन्दर्य देखेर रति, रम्भा र तिलोत्तमाजस्ता अप्सराहरू पनि लज्जित हुन्थे। ईर्ष्याग्रस्त ती अप्सराहरूले कहीं पनि सुख पाउन सकेनन् र प्राप्त सुखलाई पनि सुखका रूपमा अनुभव गर्न सकेनन् ।।३२।। अनेक रत्नहरूले तयार गरिएको मङ्गलमय स्वर्णनिर्मित माड्वारी कानमा लगाएकी, कण्ठमा मोतीको हार र सुनको तिलहरी धारण गरिरहेकी, कटिमा रत्नमय काञ्ची धारण गरी सुहाएकी, पाउहरूमा अत्यन्त उत्तम नूपुर लगाएकी, हात र पाउका औंलाहरूमा सुन्दर औंठी बेरेकी र बहुमूल्य वस्त्रालङ्कारद्वारा सुहाएकी महारानी सुधर्मा विलक्षण सौन्दर्यकी खानी थिइन् । ती निरन्तर भगवान्को भजनमा लागिरहन्थिन्। तिनले सधैं अतिथि-अभ्यागतको स्वागत – सेवा गर्दथिन्। ती पतिको सेवा र आज्ञापालनमा निरन्तर जागरूक थिइन् । सोमकान्त राजा र सुधर्मा रानीका हेमकण्ठ नामबाट संसारमा विख्यात सुपुत्र थिए ।।३३-३६।। हेमकण्ठले एक लाख हात्तीको बल आफूमा धारण गरेका थिए । ती बुद्धिमान् र पराक्रमी पनि थिए । हेमकण्ठको नाम सुनेर शत्रुहरूको मुटु थर्थर काँप्थ्यो । उत्तम अमात्य, उत्तम पत्नी र उत्तम पुत्रद्वारा सम्पन्न ती सोमकान्त राजा पृथिवीमा उत्तम राजाका रूपमा प्रख्यात थिए ।।३७।। हे मुनिहरू ! सोमकान्तले सबै राजाहरूलाई वशवर्ती तुल्याएर पृथिवीमा राज्य गरे । ती राजा नित्य धर्माचरणमा तत्पर, यज्ञशील, दानी र त्यागीका रूपमा संसारमा प्रसिद्ध भए ।।३८।।

ॐ

इतिश्रीगणेशपुराणे उपासनाखण्डे सोमकान्तवर्णनं नाम प्रथमोऽध्यायः

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोरकनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सोमकान्तवर्णन' शीर्षकान्वित पहिलो अध्याय पूर्ण भयो ।।

ॐ

## द्वितीयोऽध्याय: { २ अध्याय }

सूत उवाच

श्रूयतामृषय: सर्वे सोमकान्तस्य दुष्कृतम् ।
अकस्मादभवत्तस्य गलत्कुष्ठोऽतिदु:खद: ।।१।।

धर्मशीलस्य राज्ञोऽथ पूर्वकर्मविपाकत: ।
शुभं वाप्यशुभं कर्म न मुञ्चति नरं क्वचित् ।।२।।

यस्यां यस्यामवस्थायां कृतं भवति कर्म यत् ।
तस्यां तस्यामवस्थायां भुज्यते प्राणिभिर्ध्रुवम् ।।३।।

दु:खसागरमग्नोऽभूदप्लवो जलधौ यथा ।
वेदनामलभद् बह्वीं भुजङ्गेनेव दंशित: ।।४।।

नानाक्षतसमाकीर्ण: स्त्रवद्रक्त इतस्तत: ।
पूयशोणितवान् राजा कृमिभिर्विह्वलीकृत: ।
अस्थिशेषोऽभवद्राजा यक्ष्मणेव समावृत: ।।५।।

चिन्तया व्याकुलीभूत: सर्वेन्द्रियरुजान्वित: ।
ततोऽमात्याञ्जगौ राजा मन: संरुद्ध्य यत्नत: ।।६।।

राजोवाच

धिङ् मे राज्यञ्च रूपञ्च धिग्बलं जीवितं धनम् ।
केनेदं कर्मबीजेन व्यसनं समुपस्थितम् ।।७।।

कान्त्या सोमो जितो येन सोमकान्तस्ततोऽभवम् ।
येन मे साधवो दीना: श्रोत्रिया आश्रमा अपि ।।८।।

पालिता: पुत्रवज्जानपदा लोकास्तथा परे ।
येन मे निर्जिता बाणै: शत्रवो घोररूपिण: ।।९।।

येन मे सकला पृथ्वी कृता स्ववशवर्तिनी ।
सम्यगाराधितो देव: परमात्मा सदाशिव: ।।१०।।

दुष्टसङ्गमहीनेन चित्तनिग्रहकारिणा ।
येन मे वपुषा पूर्वमिष्टगन्धा निषेविता: ।।११।।

**सूतजीले भन्नुभयो** - हे ऋषिहरू ! राजा सोमकान्तको पाप र त्यसका परिणामका विषयमा म भन्दछु तपाइँहरू सुन्नुहोस्। एक दिन अचानक उनको शरीरमा अत्यन्त दु:खदायक पीपै पीपले भरिएको कुष्ठरोग देखियो, जुन रोग लाग्दा मानिसका नङ, औंला अथवा नाक गलेर झर्ने गर्दछन् ।।१।। पूर्वजन्ममा गरेका पापको परिणामबाट धर्मात्मा ती राजाले त्यो रोग व्यहोर्नु पर्‍यो । वास्तवमा शुभ अथवा अशुभ कर्मले कहीँ पनि मानिसलाई छाड्दैन ।।२।। जुन जुन अवस्थामा मानिसद्वारा जस्तो कर्म गरिन्छ, ती ती अवस्थामा त्यसको फल तिनले अवश्य भोग्नुपर्दछ ।।३।। यसरी गलत्कुष्ठरोगले ग्रस्त राजा सोमकान्त गहन समुद्रको माझमा डुँगा डुबेझैं दु:खका सागरमा डुबे । तिनले सर्पले डसेको प्राणीले झैं धेरै वेदना भोग्नु पर्‍यो ।।४।। अनेक घाउका खोपिल्टाले जेलिएका, शरीरबाट चारैतर्फ रगत चुहाइरहेका र पीपै पीप एवं रगतै रगतले मुछिएका ती राजालाई घाउका कीराले अत्यन्त व्याकुल बनाए । क्षयरोगले जीर्ण-शीर्ण भएसरह तिनको शरीरमा हाडमात्र बाँकी थियो ।।५।। सम्पूर्ण इन्द्रियमा रोग लागेका र चिन्ताले व्याकुल राजा सोमकान्तले ठूलो प्रयासबाट मनलाई बाँधेर आफ्ना महामात्यहरूसँग भने ।।६।।

**राजाले भने** - मेरो राज्य र रूपलाई धिक्कार छ, मेरो सामर्थ्य, जीवन र धनसम्पत्तिलाई धिक्कार छ । कुन कर्मबीजका कारण मेरा सामु यो विपत्ति आइलाग्यो ? मलाई थाहा छैन ।।७।। आफ्नो कान्तिद्वारा सोम अर्थात् चन्द्रमालाई परास्त गरेका कारण म सोमकान्त नामबाट चिनिन्छु । मैले सज्जन, दीन-दु:खी, श्रोत्रिय विद्वान्, ब्रह्मचर्य-गृहस्थ आदि आश्रम, देशका नागरिक र अरूको पनि संरक्षण एवं परिपालन गरें । मैले आफ्ना बाणद्वारा भयङ्कर शत्रुहरूलाई संग्राममा जितें । मैले आफ्नो पुरुषार्थबाट सम्पूर्ण पृथिवीलाई आफ्नो अधिकारमा ल्याएँ । दुष्टसङ्गति वर्जना र चित्तको निग्रहमा अभ्यस्त रहने मैले परमात्मा सदाशिवजीको राम्ररी आराधना गरें । मैले आफ्नो जीवनका बितेका दिनहरूमा शरीरद्वारा अत्यन्त अभीष्ट, मीठा र सुगन्धित पदार्थहरूको सेवन गरें, उपभोग गरें । आज मलाई त्यसै शरीरमा उत्पन्न कुष्ठरोगको दुर्गन्ध भोग्नु-परिरहेको छ । त्यस कारण मेरो जीवन व्यर्थ

तदिदानीं पूतिगन्धमतो मे जीवितं वृथा ।
अतोऽहङ्काननं यास्ये सर्वेषामभ्यनुज्ञया ।।१२।।

हेमकण्ठं सुतं सर्वे बुद्धिविक्रमसंयुतम् ।
सिञ्चन्तु राज्यहेतोर्मे पालयन्तु पराक्रमैः ।।१३।।

इदानीं न प्रदर्शिष्ये मुखं लोके कथञ्चन ।
न मे राज्यैर्नदारैर्वा जीवितेन श्रियाऽपि वा ।।१४।।

प्रयोजनं महामात्याः करिष्ये स्वहितं वने ।

सूत उवाच

इत्युक्त्वा निपपातोर्व्यान्तरुर्वातहतो यथा ।।१५।।

पूयशोणितघर्मौघैर्व्याप्तोऽसौ द्विजसत्तमाः ।
कोलाहलो महानासीदमात्यानाञ्च योषिताम् ।।१६।।

हाहाकारश्च लोकानां क्षणमासीत् सुदारुणः ।
वस्त्रप्रोञ्छनवाताद्यैरौषधैः क्षिप्रकारिभिः ।।१७।।

मणिमन्त्रप्रयोगैस्तं सचेतनमकारयन् ।
स्वस्थे जाते नृपे तस्मिन्नमात्याः प्राब्रुवन्निदम् ।।१८।।

अमात्या ऊचुः

तव प्रसादादमरेन्द्रतुल्यं
भुक्तं सुखं सर्वजनेष्वसिद्धम् ।
कथं त्विदानीं त्वदृते वसामः
कथञ्च जीवेम पशुघ्नतुल्याः ।।१९।।

करोतु राज्यं तवसूनुरेकः
प्रभूतकोशो बलवान् रिपुघ्नः ।
विहाय सर्वं सुखमद्य राजन् !
सहैव यामस्तु वनाय गन्तुम् ।।२०।।

सूत उवाच

ततः सुधर्मा वचनं जगाद
वने नृपं सेवितुमेकवीरा ।
व्रजे सहानेन प्रधानवर्याः
प्रशिष्ट राज्यं सह मे सुतेन ।।२१।।

छ । त्यसैले अब म छिट्टै सबैसँग बिदावारी भई वनतर्फ लाग्दछु ।।८-१२।। यसपछि सबै भाइभारदार र जनता मिलेर बुद्धि र पराक्रम दुवै गुणले सम्पन्न मेरा छोरा हेमकण्ठको राज्याभिषेक गरून् र ती सबैले आफ्नो पराक्रमद्वारा राजा हेमकण्ठको रक्षा गरून् ।।१३।। अहिले म कुनै रूपमा पनि सबैका सामु आफ्नो मुख देखाउन सक्दिनँ । मलाई अब राज्य, रानीहरू, राज्यलक्ष्मी र जीवनको पनि कुनै प्रयोजन रहेन । हे महामात्यहरू ! अब म वन गई आफ्नो हितका लागि परमार्थसाधना गर्न चाहन्छु ।

**सूतजीले भन्नुभयो-** यसरी आफ्ना मनका कुरा भनेर राजा सोमकान्त हावाले ढलेको रूख झैं भुइँमा ढले।।१४-१५।। हे विद्वान् मुनिजन ! त्यसपछि पीप, रगत र पसिनाका धाराले चुर्लुम्म भिजेका राजा सोमकान्तको मूर्च्छित अवस्था देखेर अमात्य र नारीहरूले ठूलो कोलाहल गरे।।१६।। त्यस बेला अत्यन्त दुःखित भएका जनता दारुण चीत्कार गरिरहेका थिए। केही बेरपछि सेवकहरूले कपडाका टुक्राले रगत, पीप र पसिना पुछ्ने: ताजा हावाको प्रसार गराउने, छिटो प्रभाव पार्ने औषधि खुवाउने र मन्त्रवेत्ताका मन्त्रहरूको प्रयोग गराउनेजस्ता उपायहरूबाट राजालाई होशमा ल्याए । राजा सोमकान्त केही स्वस्थ देखिएपछि तिनलाई लक्षित गर्दै अमात्यहरूले आ-आफ्ना भाव यसरी व्यक्त गरे।।१७-१८।।

**अमात्यहरूले भने -** हे महाराज ! हजुरको कृपाबाट सर्वसाधारणले भोग्न नपाउने र देवराज इन्द्रजस्ता देवताहरूले भोग्ने सुखको हामीले भोग गर्‍यौं । अहिले वनतर्फ लाग्नुभयो भने हजुरविना हामी कसरी बस्ने छौं ? हजुरलाई यस्तो हालतमा वनमा पठाएर व्याधासरि निष्ठुर भई हामी यहाँ कसरी बस्न सक्छौं ? ।।१९।। हजुरका सुपुत्र हेमकण्ठ ऐश्वर्यशाली, बलवान् र शत्रुहन्ता हुनुहुन्छ । उहाँ एक्लै राज्यसञ्चालन गर्न समर्थ हुनुहुन्छ र हामीविना पनि उहाँले राज्य गर्नुहुनेछ । हामी सबै यो राज्यसुख त्याग गरी अहिले हजुरका साथ लागेर वन जान चाहन्छौं ।।२०।।

**सूतजीले भन्नुभयो-** त्यसपछि रानी सुधर्माले भनिन्- हे मन्त्रीहरू! म वीरपुत्रकी आमा र वीर राजाकी पटरानी हुँ। तसर्थ म मेरा पतिको पछि लागेर उहाँको सेवा गर्ने उद्देश्यले वन जान चाहन्छु। तसर्थ तपाईंहरूले मेरा छोराका साथ रही राज्य शासनको सञ्चालनमा सहयोग गर्नुपर्दछ ।।२१।। प्राणीले

दुःखस्य भोक्ता न परोऽस्ति नैव
सुखस्य वा पूर्वकृतस्य जन्तोः ।
यथा यथा कर्मफलं प्रसक्तं
तदेव भोग्यं स्वयमेव तादृक् ।।२२।।
मयापि नानाविधभोगवत्या
सुखेन राज्यं परिभुक्तमस्य ।
स्त्रीणां हि भर्त्रा गमनं सहैव
परत्र लोके मुनिभिः प्रदिष्टम् ।।२३।।
ततः पुत्रो हेमकण्ठो विनीतः शोकसङ्कुलः ।
उवाच तस्मिन् समये सोमकान्तमिदं वचः ।।२४।।

हेमकण्ठ उवाच

न मे राज्येन दारैश्च प्राणैर्धनचयैरपि ।
त्वां विना नृपशार्दूल! कृत्यं नैवास्ति यत् क्वचित्।।२५।।
यथा स्नेहं विना दीपो विना प्राणं यथा तनुः ।
वृथा राज्यं तथा राजँस्त्वां विना धर्मपालक ! ।।२६।।

सूत उवाच

श्रुत्वा हृष्टमना राजा पुत्रं प्रोवाच धर्मतः ।
अमात्यानां सुधर्मायाः पुत्रस्य वचनामृतम् ।।२७।।

राजोवाच

पितुर्वाक्यरतो नित्यं श्रद्धया श्राद्धकृत्तथा ।
पिण्डदो यो गयायान्तु स पुत्रः पुत्र उच्यते ।।२८।।
अतो नीत्या समायुक्तः कुरु राज्यं ममाज्ञया ।
अमात्ययुक्तः शाधि त्वं पुत्रवच्चाखिलाः प्रजाः ।।२९।।
धर्मशास्त्रार्थतत्त्वज्ञो नीतिज्ञोऽखिलतोषकृत् ।
पितॄनुद्धरते यस्तु स पुत्रः पुत्र उच्यते ।।३०।।
अहं वनं गमिष्यामि गलत्कुष्ठोऽतिगर्हितः ।
पत्न्या सुधर्मया सार्धमनुजानीहि सुव्रत ।।३१।।

गरेका पूर्वकर्मको फल दुःख अथवा सुखको भोग अरूले गर्दैन, त्यसको भोक्ता ऊ आफूमात्र हुन्छ । जसले जस्तो कर्मफल भोग्नुपर्ने हुन्छ त्यसले त्यो फल आफैले भोग्नुपर्दछ ।।२२।। अनेक थरि विषयसुखको भोग गरिसकेकी मैले मेरा पतिकी पटरानीका रूपमा राज्यसुख पनि भोगिसकेकी छु । प्राचीन मुनिहरूले लोक र परलोक दुबैमा नारीहरूले पतिको अनुगमन गर्नुपर्दछ भनेका छन् । तसर्थ म पनि मेरा पतिका साथ वन जान्छु ।।२३।। माता-पिताको कुरा सुनेपछि शोकले सन्तप्त भएका विनीत राजपुत्र हेमकण्ठले आफ्ना पिता सोमकान्तलाई सम्बोधन गर्दै भने ।।२४।।

**हेमकण्ठले भने**– हे राजसिंह, मेरा पूज्य पिताश्री ! हजुरको अभावमा मलाई राज्य, रानी, धन-सम्पत्ति र जीवन पनि चाहिँदैन। हजुरको सेवा गर्नुबाहेक मेरो अरू कुनै कर्तव्य छैन ।।२५।। धर्मपालक हे महाराज ! विना तेलको बत्ती जसरी व्यर्थ हुन्छ त्यसै गरी विना प्राणको शरीर पनि व्यर्थ हुन्छ र अहिले मलाई हजुरविनाको यो राज्यभोग पनि व्यर्थ हुनेछ ।।२६।।

**सूतजीले भन्नुभयो** - हे मुनिजन ! अमात्य, महारानी सुधर्मा र छोरा हेमकण्ठका अमृतमय वचन सुनेर प्रसन्न भएका राजा सोमकान्तले आफ्ना छोरालाई सम्बोधन गर्दै भने ।।२७।।

**सोमकान्तले भने**– पिता जीवित हुँदा उनको आज्ञापालन गर्ने, पिता दिवङ्गत भएपछि तिथिका दिन श्रद्धापूर्वक श्राद्ध गर्ने र गयातीर्थमा गएर पिता एवं पुर्खाका लागि पिण्डदान गर्ने पुत्र नै उत्तम पुत्र मानिन्छ ।।२८।। हे छोरा ! त्यस कारण तिमीले नीतिनिष्ठ भएर मेरो आज्ञाअनुसार राज्य गर। अमात्यहरूलाई साथ लिएर तिमीले सम्पूर्ण प्रजाको पुत्रवत् पालन गर ।।२९।। जुन पुत्रले धर्मशास्त्रको रहस्य जान्दछ, सबैलाई आफ्नो व्यवहारबाट सन्तुष्ट तुल्याउँछ, नीतिशास्त्र जान्दछ र पितृहरूको उद्धारकार्यमा दत्तचित्त हुन्छ त्यस पुत्रलाई नै उत्तम पुत्र भनिन्छ।।३०।। हे सुव्रत पुत्र ! शरीरका अङ्ग-प्रत्यङ्गलाई सडाउने प्रकृति भएको यो कुष्ठरोग लागेकाले अत्यन्त घृणित रूप भएको म आफ्नी सती पत्नी सुधर्माका साथ वन जानेछु । तिमीले मलाई वन जान अनुमति प्रदान गर ।।३१।।

ॐ

इतिश्रीगणेशपुराणे उपासनाखण्डे तपोवनगमननिश्चयो नाम द्वितीयोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सोमकान्तको तपोवन जाने निश्चय' शीर्षकान्वित दोस्रो अध्याय पूर्ण भयो ।।२।।

ॐ

## तृतीयोऽध्यायः　{ ३ अध्याय }

सूत उवाच

तत उत्थाय राजा स गृहीत्वा दक्षिणे करे ।
पुत्रं विवेश हर्म्याग्रं यत्र मन्त्रयते सदा ।।१।।

यत्र सिंहासनं दिव्यं काञ्चनं बहुरत्नयुक् ।
मुक्ताप्रवालखचितं भाति शक्रपदं यथा ।।२।।

तत्रासतुः पितापुत्रौ भातो द्वावप्यनेकधा ।
प्रतिरत्नं गतौ यस्मात् समुदायवृताविव ।।३।।

आचारं प्रथमं प्राह नीतिं नानाविधां नृपः ।
पुत्राय करुणायुक्तो यशसे स्वकुलस्य च ।।४।।

सोमकान्त उवाच

याममात्रावशिष्टायां निशायां जागृतः पुमान् ।
त्यक्त्वा शय्यां शुचिस्थाने उपविश्य गुरुं स्मरेत् ।।५।।

देवतां चिन्तयित्वेष्टां प्रणमेत् स्तुतिपूर्वकम् ।
प्रार्थ्य पृथ्वीं क्षमस्वेति पादस्पर्शं जगन्मये ।।६।।

प्रातर्नमामि गणनाथमशेषहेतुं
　　ब्रह्मादिदेववरदं सकलागमाढ्यम् ।
धर्मार्थकामफलदं जनमोक्षहेतुं
　　वाचामगोचरमनादिमनन्तरूपम् ।।७।।

प्रातर्नमामि कमलापतिमुग्रवीर्यं
　　नानावतारनिरतं निजरक्षणाय ।
क्षीराब्धिवासममराधिपबन्धुमीशं
　　पापापहं रिपुहरं भवमुक्तिहेतुम् ।।८।।

**सूतजीले भन्नुभयो-** राजा सोमकान्तले त्यहाँबाट उठी आफ्ना छोराको दायाँ हात समातेर जहाँ सधैं गोप्य मन्त्रणाका लागि प्रयोग गरिने उत्तम राजभवनमा प्रवेश गरे ।।१।। जुन राजभवनमा स्वर्णनिर्मित, रत्नमय र मोती एवं मुँगाले भरिभराउ, इन्द्रको सिंहासनसमान ज्योतिर्मय र दिव्य कान्तिले परिपूर्ण राजसिंहासन थियो ।।२।। त्यस भवनमा प्रवेश गरेपछि ती पिता एवं पुत्र सङ्ख्यामा जम्मा दुई रहे पनि तिनीहरूको बिम्ब प्रत्येक रत्नमा प्रतिबिम्बित भएको हुँदा समुदायसहित रहेजस्तै अनेकरूपमा देखिए।।३।। पुत्रमाथि दयालु बनेका राजा सोमकान्तले आफ्नो कुलको कीर्ति बढाउन सर्वप्रथम आचारशास्त्र र त्यसपछि अनेक नीतिशास्त्रको पनि उपदेश गरे ।।४।।

**सोमकान्तले भने -** हे पुत्र ! साधक मानिस रातको एक प्रहर बाँकी छँदै उठ्नु पर्दछ । जागृत मानिसले शय्यात्याग गरेपछि पवित्र स्थानमा बसेर आफ्ना सद्गुरुको स्मरण गर्नुपर्दछ ।।५।। त्यसपछि इष्टदेवताको चिन्तन गरी स्तुति गरेर प्रणाम गर्नुपर्दछ । अनि - 'हे जगन्मय स्वरूप पृथिवी ! म मेरा पाउले तपाईँलाई टेक्दैछु, मेरो यो अपराध क्षमा गर्नुहोस्' भनी प्रार्थना गर्नुपर्दछ । (त्यस बेला त्यसले श्रीगणेश आदि विभिन्न देवी-देवताहरूको तल लेखिएअनुसार स्तुति गर्नुपर्दछ) ।।६।। म यस पावन प्रात:कालमा सम्पूर्ण ब्रह्माण्डका उत्पत्तिकारण, ब्रह्मा आदि देवतालाई पनि वरदान दिएर कृतार्थ तुल्याउने, सम्पूर्ण शास्त्रका खजाना, धर्म-अर्थ एवं कामनामक पुरुषार्थहरूको फल प्रदान गर्ने, सुपात्र मानिसलाई ज्ञान दिएर मोक्षतर्फ उन्मुख गराउने र वाणीद्वारा अज्ञेय, अनादि-अनन्त स्वरूप भगवान् श्रीगणनाथलाई नमस्कार गर्दछु ।।७।। म यस प्रात:कालमा प्रचण्ड पराक्रमी, आफ्ना भक्तको सुरक्षाका लागि अनेकौं पटक अनेक थरि अवतार लिनुहुने, क्षीरसागरमा रहेको शेषशय्यामा शयन गर्नुहुने, देवराज इन्द्रका भाइ भएका नाताले उपेन्द्रका नामबाट प्रसिद्ध, सबैका स्वामी एवं शास्ता, पापनाशक, शत्रुनाशक र उपासकलाई संसारको बन्धनदेखि मुक्त गराउने कार्यका प्रमुख हेतु कमलापति श्रीनारायणलाई नमस्कार गर्दछु ।।८।।

प्रातर्नमामि गिरिजापतिमिन्दुमौलिं
व्याघ्राजिनावृतमुदस्तदयं मनोजे ।
नारायणेन्द्रवरदं सुरसिद्धजुष्टं
सर्पांस्त्रिशूलडमरून् दधतं पुरारिम् ।।९।।

प्रातर्नमामि दिननाथमघापहारं
गाढान्धकारहरमुत्तमलोकवन्द्यम् ।
वेदत्रयात्मकमुदस्तसुरारिमायं
ज्ञानैकहेतुमुरुशक्तिमुदारभावम् ।।१०।।

प्रातर्नमामि गिरिजां भवभूतिहेतुं
संसारसिन्धुपरपारकरीं त्रिनेत्राम् ।
तत्त्वादिकारणमुदस्तसुरारिमायां
मायामयीं सुरमुनीन्द्रनुतां सुरेशीम् ।।११।।

एवमन्यांश्च संस्मृत्य देवान् मुनिगणाँस्तथा ।
मानसैरुपचारैश्च पूजयित्वा क्षमापयेत् ।।१२।।

ततो गच्छेत् सोदपात्रो ग्रामस्य नैर्ऋतीं दिशम् ।
मृदङ् गृहीत्वा सुश्वेतां ब्राह्मणः क्षत्रियोऽरुणाम् ।।१३।।

वैश्यशूद्रौ तथा श्यामां न नदीतीरतः खनेत् ।।
नोर्वराया न वल्मीकाद् ब्राह्मणागारतः क्वचित् ।।१४।।

तृणादिनाच्छादयित्वा धरां मूत्रपुरीषयोः ।
कृत्वोत्सर्गं दिवारात्रावुदग्दक्षिणदिङ्मुखः ।।१५।।

आदौ गुदं प्रमृज्यैव तृणकाष्ठादिना नरः ।
पञ्चवारं मृदाऽद्भिश्च क्षालयेत् तदनन्तरम् ।।१६।।

दशवारं वामहस्तं सप्तवारमुभौ करौ ।
लिङ्गं तथैकवारं तु वामहस्तं त्रिवारतः ।।१७।।

म यस प्रातःकालमा चन्द्रमालाई मस्तकमा धारण गरेका कारण चन्द्रमौलिका नामबाट प्रसिद्ध, व्याघ्रचर्मद्वारा सुशोभित, कामदेवलाई निर्दयतापूर्वक भस्म तुल्याउनुहुने, नारायण एवं इन्द्रलाई वरदान दिनुहुने, देवता र सिद्धपुरुषहरूद्वारा सेवित, सर्प, त्रिशूल र डमरु धारण गर्नुहुने, त्रिपुरारिका नामबाट प्रसिद्ध गिरिजा अर्थात् पार्वतीका स्वामी श्रीशङ्कर भगवान्लाई नमस्कार गर्दछु ।।९।। म यस प्रातःकालमा पापनाशक, घना अन्धकारका नाशक, उत्तम चरित्र भएका व्यक्तिहरूद्वारा वन्दनीय, ऋग्, यजु र सामस्वरूप, मन्देहनामक दैत्यहरूको मायालाई छिन्न-भिन्न तुल्याउनुहुने, ज्ञानका एकमात्र कारण, प्रचण्ड प्रतापी र उदार स्वभावका श्रीसूर्य नारायणलाई नमस्कार गर्दछु ।।१०।। म यस प्रातःकालमा सांसारिक ऐश्वर्यकी एकमात्र कारण, संसारसागरबाट भक्तहरूलाई पार लगाउनुहुने अमोघ शक्तिका रूपमा विराजमान, तीन नेत्रद्वारा शोभायमान, पृथिवी आदि तत्त्वहरूकी आधारभूमि, महिषासुर आदि दैत्यसमूहकी विनाशिनी, मायामयी, देवता एवं मुनीन्द्रहरूद्वारा सेवित र देवताहरूकी पनि आराध्या भगवती गिरिनन्दिनी पार्वतीलाई नमस्कार गर्दछु ।।११।। यसैगरी साधकले प्रातःकालमा अरू देवता एवं ऋषि-मुनिहरूको पनि संस्मरण गरी मानस उपचारद्वारा पूजा-आराधना गरेर ती सबै देवता एवं ऋषि-मुनिसँग क्षमायाचना गर्नुपर्दछ ।।१२।। त्यसपछि हातमा जलपात्र लिएर मलमूत्रत्यागका निमित्त आफ्नो बस्तीबाट नैर्ऋत्य दिशातर्फ जानुपर्दछ । त्यस बेला ब्राह्मणले सेतो माटो, क्षत्रियले रातो माटो, वैश्य र शूद्रले कालो माटो खनेर साथमा राख्नुपर्दछ । त्यसरी माटो ग्रहण गर्दा नदीका तटको माटो, उर्वर जमिनको माटो, धमिराले उठाएको माटो र ब्राह्मणका घरभित्रको माटो उपयोग गर्नुहुँदैन ।।१३-१४।। शौचका लागि निर्धारित जमिनमा गई दिनको समयमा उत्तरतिर र रातको समयमा दक्षिणतिर फर्केर मलमूत्रत्याग गर्नुपर्दछ ।।१५।। मलमूत्रत्याग गरेपछि तृण आदिद्वारा मलत्याग गर्ने इन्द्रियलाई राम्ररी शोधन गरी पाँच पटकसम्म माटो पानी लगाएर प्रक्षालन गर्नुपर्दछ ।।१६।। बायाँ हातलाई माटो पानीले दश पटक सफा गर्नुपर्दछ । त्यसपछि दुबै हातलाई सात पटक माटो पानीले सफा गर्नुपर्दछ । मूत्रेन्द्रियलाई एक पटक सफा

मूत्रोत्सर्गे क्षालयीत द्वौ करौ च द्विवारतः ।
पादौ सदैकवारं तु गृहस्थस्यैवमीरितम् ।।१८।।

व्रतवान् द्विगुणं कुर्यात् त्रिगुणं वनगोचरः ।
यतिश्चतुर्गुणं कुर्याद् रात्रावर्धन्तु मौनवान् ।।१९।।

अर्धं पादं दिवारात्रौ शौचं स्त्री शूद्र एव च ।
तत आचम्य काष्ठं तु क्षीरकण्टकवृक्षयोः ।।२०।।

गृहीत्वा प्रार्थनापूर्वं दन्ताञ्जिह्वां विशोधयेत् ।
बलमोजो यशस्तेजः पशुबुद्धिधनानि च ।।२१।।

मेधां ब्रह्मधियं चैव त्वं मे देहि वनस्पते ! ।
ततः शीतजलैः स्नानं कृत्वा मलहरं पुरा ।।२२।।

ततो मन्त्रैश्च गृह्योक्तैः सन्ध्योपास्तिं ततश्चरेत् ।
जपं होमञ्च स्वाध्यायं तर्पणं देवपूजनम् ।।२३।।

वैश्वदेवं तथाऽतिथ्यं भोजनं द्विजसाक्षिकम् ।
पुराणश्रवणं दानं परनिन्दाविवर्जनम् ।।२४।।

परोपकारं कुर्याच्च द्रव्यप्राणवचोमृतैः ।
परापकारं नो कुर्यादात्मस्तवनमेव च ।।२५।।

गुरुद्रोहं वेदनिन्दां नास्तिक्यं पापसेवनम् ।
अभक्ष्यभक्षणं चैव परदारनिषेवणम् ।।२६।।

स्वदारवर्जनं चैव कुर्यादृतुगतिं चरेत् ।
मातापितृगुरूणां च गवां शुश्रूषणं सदा ।।२७।।

दीनान्धकृपणेभ्यश्च दद्यादन्नं सवस्त्रकम् ।
प्राणात्ययेऽपि सत्यस्य त्यागं नैव समाचरेत् ।।२८।।

गरेपछि फेरि बायाँ हातलाई तीन पटक चोख्याउनु पर्दछ। मूत्रत्याग गर्दा आफ्ना दुवै हात दुई पटक राम्ररी धुनु पर्दछ र खुट्टा राम्ररी सफा गर्नुपर्दछ । यो सबै विधि गृहस्थहरूका लागि विधान गरिएको छ ।।१७-१८।। कुनै खास व्रतको अनुष्ठानमा लागेका गृहस्थले माथि बताइएका क्रियाहरूको सम्पादन गर्दा निर्धारित संख्याभन्दा दुई गुना बढी गर्नुपर्दछ । संन्यासीले भने चार गुना बढी सङ्ख्यामा उक्त क्रिया सम्पन्न गर्नुपर्दछ । मौनव्रत लिने मानिसले रातको समयमा उक्त क्रिया गर्नुपर्‍यो भने माथि तोकिएको आधा सङ्ख्यामा कर्म सम्पन्न गर्नुपर्दछ ।।१९।। स्त्रीजातिले दिन एवं रात दुवै कालमा निर्धारित सङ्ख्याको आधामात्र क्रियासम्पादन गर्दा हुन्छ भने शूद्रले निर्धारित संख्याको एक चौथाई क्रिया सम्पन्न गर्नुपर्दछ। सबैले यसरी शौचकर्म सम्पन्न गरिसकेपछि आचमन गरी चोप हुने रूख र काँढा हुने रूखमध्ये कुनै एक रूखबाट दतिवन सङ्कलन गरी निम्नअनुसार आफूले दतिवनका लागि ग्रहण गरेका वनस्पतिको प्रार्थना गर्दै दाँत र जिब्रो सफा गर्नुपर्दछ- 'हे वनस्पति ! तिमीले बल, ओज, यश, तेज, पशु, सम्पत्ति, बुद्धि, धन, मेधा र ब्रह्मप्राप्तितर्फ उन्मुख गराउने बुद्धि मलाई प्रदान गर ।' त्यसपछि सर्वप्रथम मलप्रक्षालन गर्ने उद्देश्यले चीसो पानीले नुहाएर आफ्ना गृह्यसूत्रले बताएका मन्त्रद्वारा सन्ध्योपासन गर्नुपर्दछ । सन्ध्योपासनपछि जप, होम, स्वाध्याय, तर्पण, देवपूजन, बलिवैश्वदेव, अतिथि-सत्कारजस्ता कर्म सम्पन्न गरी ब्राह्मणलाई भोजन गराएपछिमात्र आफूले भोजन गर्नुपर्दछ । यसै गरी नित्य पुराणश्रवण गर्दै परनिन्दाबाट जोगिएर धन, प्राण एवं वचनामृतद्वारा परोपकार गर्नुपर्दछ । परन्तु कहिले पनि साधकले आत्मप्रशंसा गर्नु हुँदैन ।।२०-२५।। यसै गरी साधकले गुरुद्रोह, वेदनिन्दा, नास्तिक व्यवहार, पापसेवन, अभक्ष्यभक्षण, परस्त्रीगमन, धर्मपत्नीत्यागजस्ता कार्य गर्न हुँदैन र ऋतुकालमा धर्मपत्नीका साथ ऋतुधर्मको पालन गर्नुपर्दछ । माता-पिता, गुरु र गाईको सेवा गर्नुपर्दछ । दीन-दुःखी र गरीब-निमुखालाई वस्त्र र अन्न दिनुपर्दछ । यसरी उज्ज्वल जीवन बिताउँदै सद्गृहस्थले प्राण जाने अवस्थामा पनि सत्यलाई छोड्नु हुँदैन । जुन सज्जनमा ईश्वरको अनुग्रह

ईश्वरानुग्रहो येषां साधूनां च प्रपालनम् ।
अपराधानुसारेण धर्मशास्त्रं विलोक्य च ।।२९।।

पृष्ट्वा वा पण्डितान् दण्डं कुर्यान्नीतिविशारद: ।
विश्वासो यस्य नैव स्यात् तत्र नो विश्वसेत् क्वचित्।।३०।।

विश्वस्तेऽत्यन्तविश्वासो न कर्तव्यो बुभूषता ।
कृतवैरेऽथ विश्वस्ते कदापि न च विश्वसेत् ।।३१।।

षड्गुणानां प्रयोगेण वर्धयेद् राष्ट्रमात्मन: ।
दानं स्वशक्त्या कुर्वीत क्षीणतामन्यथा व्रजेत् ।।३२।।

परे व्याकुलिते यानमधमं परिचक्षते ।
चारदृष्टिर्दूतवक्त्र उद्यद्दण्डो नृपो भवेत् ।।३३।।

दण्डस्यैव भयाल्लोका: स्वे स्वे धर्मे व्यवस्थिता: ।
अन्यथा नियमो न स्यात् पारक्यं स्वीयमित्यद:।।३४।।

अधमो यदि निन्देत स्तुवीत यदि वा क्वचित् ।
न क्रुद्धेत्र च तुष्येच्च किं तयाऽर्चितयापि च ।।३५।।

पूर्वापकारी यदि च पुनर्वा शरणं व्रजेत् ।
पूर्वं च धनिको य: स्यात् परिपाल्य: सदैव हि ।।३६।।

मन्त्रगुप्ति: सदा कार्या तन्मूलं राज्यमुच्यते ।
कामादिषड्रिपून् हित्वा ततोऽन्यान् विजयीत च।।३७।।

भएको हुन्छ त्यस्ता सज्जनको सुरक्षा र पालन गर्नुपर्दछ । नीतिनिपुण राजाले धर्मशास्त्रको अवलोकन गरेर अथवा धर्मशास्त्रका विद्वान्हरूसँग सोधेर अपराधअनुसार दोषीमाथि दण्डको कारवाही गर्नुपर्दछ । जुन मानिससँग विश्वास गर्न सकिँदैन अथवा जसले आफूमाथि विश्वास गर्दैनन्, तिनमा कहिले पनि विश्वास गर्न हुँदैन । विश्वस्त मानिससँग पनि धेरै विश्वास गर्नुहुँदैन । विश्वस्त मानिस भए पनि भित्रबाट त्यसले आफूसँग द्वेष गर्दछ भने त्यसमाथि कहिल्यै विश्वास गर्न हुँदैन ।।२९-३१।। सन्धि, विग्रह, यान, आसन, द्वैधीभाव र संश्रयजस्ता ६ वटा राजनीतिक गुणहरूको प्रयोग गरी राजाले आफ्नो राज्यलाई समृद्ध र विकसित तुल्याउनुपर्दछ। आफ्नो गच्छेअनुसार दान गर्नुपर्दछ, यसको विपरीत अतिशय दान गरिन्छ भने राजा र राष्ट्र आर्थिक दृष्टिले क्षीण भएर जान्छन् ।।३२।। शत्रु राजा विपत्तिग्रस्त भएको बेला त्यसमाथि जाइलाग्नु हुँदैन, त्यसलाई अधम कर्म मानिन्छ । राजाले गुप्तचरहरूको आँखाबाट राष्ट्रका गतिविधिको निरीक्षण गर्नुपर्दछ । दूतहरूको माध्यमबाट अन्य राजाहरूसँग संवाद गर्नुपर्दछ । दण्डलाई सधैं तरोताजा बनाई न्यायपूर्वक प्रयोग गर्नुपर्दछ ।।३३।। संसारका मानिसहरू दण्डको डरले आ-आफ्नो कर्तव्यको पालनमा लागेका हुन्छन् । संसारमा दण्डको व्यवस्था हुन्नथ्यो भने मानिसहरू अमर्यादित, अराजक हुने थिए र चारैतिर छाडापन छाउने थियो । यो मेरो र यो तेरो भन्ने व्यवस्थामा आघात पर्दा बलिया मानिसमात्र संसारमा रहने थिए ।।३४।। अधम मानिसले निन्दा गर्दछ भने राजाले त्यसमाथि रीस गर्नुहुँदैन। त्यसले स्तुति अथवा प्रशंसा गर्दछ भने सन्तोष गर्न पनि हुँदैन । वास्तवमा अधमले गरेको निन्दाबाट कुनै हानि हुँदैन र त्यसले गरेको प्रशंसाबाट कुनै लाभ पनि हुँदैन ।।३५।। पूर्वापकारी अर्थात् पहिले कुनै बेला आफ्नो अपकार गर्ने मानिस शरणमा आउँछ भने त्यस्ता मानिसको सुरक्षा गर्नुपर्दछ । पहिले सम्पन्न मानिस कारणवश कङ्गाल हुन गई शरणमा आउँछ भने त्यसको पनि सुरक्षा गर्नुपर्दछ ।।३६।। राजाले राज्यको समुन्नति र रक्षाका लागि गरिने मन्त्रणालाई गुप्त राख्नु पर्दछ । मन्त्रणा अथवा राजनीतिक गम्भीर चिन्तनको आधारमा राज्यले गति लिएको

वृत्तिच्छेदं प्रजोच्छेदं देवतोच्छेदमेव च ।
आरामचैत्ययोश्छेदं न कुर्यान्नृपसत्तमः ।।३८।।

पर्वकाले ददेद् दानं यशसे त्यागमेव च ।
न मित्रवञ्चनां कुर्यात् स्त्रीषु गोप्यं वदेन्न च ।।३९।।

ऋणतो ब्राह्मणं चैव पङ्कतो गां समुद्धरेत् ।
अनृतं न वदेत् क्वापि सत्यं क्वापि न हापयेत् ।।४०।।

अमात्यानां प्रजानाञ्च भृत्यानां चित्तहृद् भवेत् ।
ब्राह्मणेभ्यो नमस्कुर्याद् देवताभ्यः सदैव च ।।४१।।

सूत उवाच

इत्यन्यदपि शिक्षाप्य हेमकण्ठं सुतं नृपः ।
आचारं सह धर्मेण नीतिशास्त्रं यथाश्रुतम् ।।४२।।

क्षेमङ्करं रूपवन्तं विद्याधीशं तथैव च ।
आह्वयामास चामात्यान्सुमुहूर्तं विलोक्य च ।।४३।।

सम्भारानुपकल्प्यैव नानास्थानगतान्नृपः ।
ब्राह्मणान् वेदविदुषो यज्ञकर्मसु निष्ठितान् ।।४४।।

राज्ञोऽथ महतो राजपत्नीश्च सुहृदः स्वकान् ।
आह्वयामास नृपतिः श्रेणीमुख्यांश्च नागरान् ।।४५।।

अभिषेकावलोकाय पुत्रस्य रिपुघातिनः ।
गणेशं पूजयित्वेष्टदेवतां च यथाविधि ।।४६।।

वाचयित्वा स्वस्त्ययनं मातृपूजनपूर्वकम् ।
कृत्वाभ्युदयिकं श्राद्धं ब्राह्मणाँस्तर्प्य चान्धसा ।।४७।।

कारयित्वा मन्त्रघोषैरभिषेकं सुतस्य सः ।
उवाच सोमकान्तस्त्रीन् मन्त्रिमुख्यानिदं वचः ।।४८।।

हुन्छ । काम, क्रोध, लोभ, मोह, मद र मात्सर्यजस्ता ६ वटा भित्री शत्रुहरूलाई जितेपछि मात्र राजाले अरू बाहिरी शत्रुहरूमाथि विजय प्राप्त गर्न सक्दछ ।।३७।। कुनै पनि उत्तम राजाले कसैको जीविकाको छेदन, सन्तानको नाश, देवताको छेदन, बगैँचा, धर, यज्ञशाला, मन्दिर आदिको छेदन पनि गर्न हुँदैन ।।३८।। राजाले उत्तम पर्वहरूमा यथाशक्ति दान गर्नुपर्दछ । कीर्ति हुने कामका लागि त्याग देखाउनु पर्दछ । आफ्ना मित्रहरूलाई धोका दिनु हुँदैन र नारीहरूसमक्ष गोप्य कुरा खोल्नु हुँदैन ।।३९।। उत्तम राजाले ऋणमा डुबेका ब्राह्मणको उद्धार गर्नुपर्दछ, हिलोमा डुबेकी गाईको उद्धार गर्नुपर्दछ, कुनै अवस्थामा पनि मिथ्याभाषण गर्नुहुँदैन र कस्तै विपत्तिमा पनि सत्यलाई छोड्नु हुँदैन ।।४०।। राजाले आफ्ना उत्तम व्यवहारबाट मन्त्री, प्रजा र सेवक-कर्मचारीहरूको हृदय जित्नु पर्दछ । तिनले सर्वदा ब्राह्मण र देवताहरूलाई नमस्कार गर्नुपर्दछ ।।४१।।

**सूतजीले भन्नुभयो** - राजा सोमकान्तले आफ्नो अनुभवअनुसार आफ्ना छोरा हेमकण्ठलाई यी र यस्तै अरू पनि धर्म-आचार र नीतिशास्त्रसम्बन्धी शिक्षा दिए ।।४२।। त्यसपछि क्षेमङ्कर, रूपवान् र विद्याधीश नामक तीन जना महामात्यहरूलाई आफूसामु बोलाएर मुहूर्त हेराई राजाले विभिन्न ठाउँमा छरिएका राज्याभिषेकका सामग्री जुटाए । वेदका ज्ञाता र यज्ञसञ्चालनमा निपुण ब्राह्मण, ठूला ठूला राजा-रानी, आफ्ना मित्र-बन्धु, विभिन्न जात-जाति र वर्गका प्रतिनिधि नागरिकहरूलाई समेत आफ्ना प्रतापी र शत्रुसंहारक छोरा हेमकण्ठको राज्याभिषेकको अवलोकन गर्न आमन्त्रण गरे । सर्वप्रथम श्रीगणेशको अर्चना गरेर विधिपूर्वक इष्टदेवताको आराधना गरे । स्वस्तिवाचन गराई मातृकापूजाका साथ आभ्युदयिक श्राद्ध पनि सम्पन्न गरे । त्यसपछि निमन्त्रित ब्राह्मणहरूलाई सुस्वादु भोजनद्वारा तृप्त गराए ।।४३-४७।। यसरी मन्त्रघोषपूर्वक छोरा हेमकण्ठको राज्याभिषेक सम्पन्न गरेपछि राजा सोमकान्तले आफ्ना तीनजना महामात्यसँग कुराकानी गरे ।।४८।।

राजोवाच

ममायं सुत इत्येवममात्या बुद्धिरस्तु वः ।
भवतामेव हस्तेषु सुत एष निरूपितः ।।४९।।

ममानुशासनं यद्वत् कृतं नीतिविशारदैः ।
तथास्य शासनं कार्यं श्रेणीमुख्यसमन्वितैः ।।५०।।

**सोमकान्तले भने** - हे महामात्यहरू ! तपाईंहरूको हृदयमा यो हेमकण्ठ मेरै छोरा हुन् भन्ने बुद्धि पलाओस्, म अब वन जान लागें । तसर्थ मेरो यो छोरालाई मैले तपाईंहरूको जिम्मामा सुम्पेको छु ।।४९।। मैले जसरी आज मेरो छोरालाई आचार र राजनीतिको विषयमा अनुशासन गरें अर्थात् उपदेश गरें त्यसैगरी नीतिवेत्ता तपाईं महामात्यहरूले पनि विभिन्न वर्ग, समूह र जातिका ठूला-बडा पुरुषहरूसमेत साथमा लिएर मेरो छोराको राज्यसञ्चालनमा मार्गदर्शन गर्नुहुनेछ ।।५०।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे आचारादिनिरूपणं नाम तृतीयोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'आचारोपदेश' शीर्षकान्वित तेस्रो अध्याय पूर्ण भयो ।।३।।

ॐ

## चतुर्थोऽध्यायः　{ ४ अध्याय }

सूत उवाच

जातेऽभिषेके राजाऽसौ चकार द्विजपूजनम् ।
मणिमुक्ताप्रवालानि ददौ साङ्गं गवा युतम् ।।१।।

तोषयामास सर्वास्तान् गजगोऽश्वधनांशुकैः ।
नानादेश्यानि वासांसि सुवर्णान्तरितानि च ।।२।।

नानावर्णानि काश्मीरदेशजानि महान्ति च ।
राजभ्यो राजपत्नीभ्यो ग्राममुख्येभ्य एव च ।।३।।

तद्भृत्येभ्यो गुणिभ्यश्च ददौ राजा यथार्हतः ।
अमात्येभ्यो ददावन्यान् ग्रामान् बहुधनान्यपि ।।४।।

ततो वनं ययौ राजा दुःखशोकसमन्वितः ।
पूर्वजन्मार्जितैर्दोषैरत्यन्तमलिनोऽशुचिः ।।५।।

तस्मिन्प्रयाते लोकानां हाहाकारो महानभूत् ।
स्वं स्वं कार्यं विहायैव प्रतिजग्मुर्जनाधिपम् ।।६।।

अमात्या राजभार्या च हेमकण्ठः सुहृद्वृतः ।
उत्तिष्ठन् प्रपपाताग्रे स्खलन् धावन् रुदन्नपि ।।७।।

अमात्या नागरास्तन्तु दुःखिता अप्यवारयन् ।
गव्यूतिद्वितयं गत्वा तस्थौ राजा श्रमान्वितः ।।८।।

दृष्ट्वा वापीं शीतजलां नानावृक्षसमन्विताम् ।
उवाच नागरान् सर्वानमात्यान् स्वजनानपि ।।९।।

अपराद्धं मया यद् यच्चिरं राज्यं प्रकुर्वता ।
तत् क्षन्तव्यं नमाम्येष बद्धवाञ्जलिपुटं जनाः ।।१०।।

सूतजीले भन्नुभयो - राजा सोमकान्तले छोरा हेमकण्ठको राज्याभिषेक सम्पन्न गरिसकेपछि राज्याभिषेकमा आमन्त्रित ब्राह्मणहरूको पूजा गरे । उनले मणि, मोती, मुगाजस्ता बहुमूल्य पदार्थ र गाईसमेत अङ्ग पुऱ्याएर दान गरे ।।१।। तिनले ती सबै ब्राह्मणहरूलाई हात्ती, घोडा, गाई, धन र वस्त्र दिएर सन्तुष्ट बनाए । त्यसपछि विभिन्न देशमा तयार भएका अनेक रङ्गका वस्त्र, काश्मीर देशमा तयार गरिएका ठूला आकार भएका दोसल्लाहरूसमेत आमन्त्रित राजा-रानी, ग्रामप्रधान, तिनका सेवक र गुणी सज्जनहरूलाई स्तरअनुसार प्रदान गरे। यसका साथै आफ्ना अमात्यहरूलाई पनि केही गाउँ बिर्ताका रूपमा प्रदान गरी धेरै धन पनि प्रदान गरे ।।२-४।। त्यसपछि पूर्वजन्ममा अर्जित दोषहरूका कारण अत्यन्त मलिन र अपवित्र स्वरूपमा देखिएका राजा सोमकान्त दुःख एवं शोकले युक्त भई वनका लागि प्रस्थान गरे ।।५।। राजाको वन प्रस्थानपछि त्यहाँ मुनिहरूले ठूलो हाहाकार गरे । सबै मानिस आ-आफ्ना काम छाडेर राजाका पछि लागे ।।६।। पछि लाग्नेहरूमा महामात्य, महारानी र मित्रसहित छोरा हेमकण्ठ पनि थिए । पितालाई त्यसरी वन जान लागेको देखेर हेमकण्ठका खुट्टा लर्बराए । केही बेर उभिए, अनि दौडन थाले । त्यसपछि शोकसन्तप्त भएर भुइँमा पछारिए अनि रुन लागे । हेमकण्ठको त्यो अवस्था देखी दुःखी भएका अमात्य र नागरिकहरूले हेमकण्ठलाई त्यसो नगर्न अनुरोध गरे । यसरी चार कोश लामो दूरीको बाटो तय गरेपछि थाकेका राजा सोमकान्त उभिए। अनेक वृक्ष-वनस्पतिले चारैतिर घेरिएको, चीसो पानी भएको पोखरी देखेर तिनले सबै प्रजाजन, स्वजन र अमात्यहरूलाई अनुरोधको मुद्रामा भने ।।७-९।। 'हे मेरा प्यारा जन हो ! मैले चिरकालसम्म राज्य गर्दा तपाईंहरूमाथि जुन र जस्तो अपराध गरें त्यसका लागि म आज हात जोडेर क्षमायाचना गर्दछु, मलाई क्षमा दिनुहोस् । तपाईंहरूले मेरा छोरा

कृपा विधेया पुत्रे मे यदि दैवात् समागते ।
विज्ञापयामि व: सर्वान् मयि स्नेहो न हीयताम् ।।११।।

गच्छन्तु नगरं सर्वे सस्त्रीवृद्धा: समागता: ।
पुत्रेण पाल्यमाना मे तिष्ठन्तु विगतज्वरा: ।।१२।।

अनुजानन्तु मां सर्वे सुचित्तो याम्यहं वनम् ।
युष्मासु तु प्रयातेषु मनो मे निश्चलं भवेत् ।।१३।।

उपकारं महान्तं मे कुर्वन्तु कृपयाऽखिला: ।
दु:खितो निष्ठुरं वक्तुं मर्तुकामोऽपि नोत्सहे ।।१४।।

महत्पापं मयैवैतज्जन्मजन्मान्तरार्जितम् ।
यद्वियोगो हि राज्यस्य लोकानां हितकारिणाम् ।।१५।।

परन्तु किं करोम्येष यद् गलत्कुष्ठवानहम् ।
सर्वोऽपि स्वकृतं भुङ्क्ते सुकृतं दुष्कृतं तथा ।।१६।।

सूत उवाच

इति श्रुत्वा वचो राज्ञो मूर्च्छिता: सुहृदस्तथा ।
घ्नन्त: केचित् पाणितलै: शिरांसि भृशदु:खिता: ।।१७।।

केचित् परस्परं चक्रुरभिज्ञा: पण्डिताश्च ये ।
सान्त्वनं पूर्वजातानां नृपाणां चरितैर्नृपे ।।१८।।

अनिर्वाच्यामवस्थां तत् समीक्षेयुरथाऽपरे ।
यथा स्वरूपे विज्ञाते योगिनो ज्ञानवृत्तय: ।।१९।।

दु:खितं सोमकान्तं तं वनं गन्तुं समुत्सुकम् ।
नियम्य दु:खं धैर्येण धीरा: केचिदथाब्रुवन् ।।२०।।

जना ऊचु:

पोषयित्वा पालयित्वा न नस्त्वं त्यक्तुमर्हसि ।
यथा न त्यजते शैत्यं जलमौष्ण्यं तनूनपात् ।।२१।।

मर्यादां जलधिर्वापि सूर्य: प्राकाश्यमेव च ।
कथं वा नगरं यामस्त्वां विना जनवत्सल ।।२२।।

हेमकण्ठमाथि दया गर्नुहुनेछ। दैवको कृपाबाट स्वस्थ भएर म फर्के भने मेरा सबै सुख-दु:ख तपाईँहरूलाई बताउने छु। मेरो माया नमार्नु होला । अहिले स्त्री-वृद्धसहित सबै तपाईँहरू राजधानी फर्कनुहोस्। मेरा छोराको शासनमा उनीद्वारा संरक्षित भई चिरकालसम्म निश्चिन्त भएर रहनुहोस् । तपाईँहरूले मलाई खुसीसाथ वन जान आज्ञा दिनुहोस् । तपाईँहरू खुसी भएर घर फर्किनुभएमा मेरो मन स्थिर हुनेछ ।।१०-१३।। अहिले फर्किदिएर तपाईँहरूले ममाथि गुन लगाउनुहोस् । तपाईँहरूसमक्ष मर्ने बेलामा पनि निष्ठुर भाषण गर्न म सक्दिनँ ।।१४।।मैले जन्म-जन्मान्तरमा ठूलो पाप गरेको रहेँछु । त्यस कारण आज मलाई आफ्ना हितैषी, स्वजन, प्रजाजन र अमात्यजनहरूबाट टाढा भएर वनवास गर्नुपरेको छ। तर मेरो केही उपाय छैन । म आफै कुष्ठरोगी भएर दु:ख पाइरहेको छु । सबैले आफूले गरेका राम्रा नराम्रा कर्मको फल भोग्नै पर्ने रहेछ।।१५-१६।।

**सूतजीले भन्नुभयो** - राजा सोमकान्तका यी वचन सुनेर केही मित्र सज्जनहरू बेहोश भए, केहीले साह्रै दु:खी भएर दुबै हातले शिर पिट्न थाले, केही परस्परमा भावाविष्ट भई कुरा गर्न थाले, केही विद्वान् एवं बुद्धिजीवीहरूले पुराना राजाहरूका चरित्र, सङ्घर्षमय जीवन र दु:खमय अवस्थाको दृष्टान्त दिएर राजालाई सान्त्वना दिन थाले ।।१७-१८।। कुनै मानिस त राजाको त्यो दयनीय अवस्था देखेर स्वरूपज्ञानपछि योगीहरू स्वरूपबोधमा विलीन भएझैँ अनिर्वचनीय अवस्थामा पुगे ।।१९।। वन जान उत्सुक दु:खी राजा सोमकान्तलाई देखेर उत्पन्न भएको सन्तापलाई धैर्यले बाँधी केही धीर स्वभावका सज्जनहरू भन्न लागे ।

**सज्जनहरूले भने** - हे महाराजा ! पालन-पोषण गरी हामीलाई हुर्काएर अहिले चटक्कै छाडी तपाईँ वनमा नजानुहोस्। जसरी पानीले चीसोपन छाड्दैन, आगोले तातोपन छाड्दैन, समुद्रले सीमा नाघ्दैन र सूर्यले प्रकाश छाड्दैन त्यसैगरी हाम्रा अभिभावक राजाले हामीलाई छोड्नु हुँदैन । हे जनप्रिय राजा ! हामी सबै तपाईँविना एक्लै कसरी राजधानी फर्कन सक्छौँ ? ।।२०-२२।। हे शत्रुनाशक राजा ! जसरी

यथोडुपतिना हीनं व्योम तारान्वितं नृप: ।
पुरं तद्वन्न शोभेत त्वां विना शत्रुकर्षण ।।२३।।

सहैव यामस्तीर्थानि द्वित्राणि वयमप्युत ।
रूपं ते कान्तिमत् कान्त! भविता तीर्थसेवनात् ।।२४।।

ततः सहैव यास्यामो नगरं ध्वजसङ्कुलम् ।
हर्षेण महता युक्ता वाद्यबन्दिपुर:सराः ।।२५।।

सूत उवाच

इति तद्वचनं श्रुत्वा क्रोधदु:खसमन्वितः ।
उवाच राजा तान्नत्वा मैवं मैवं पुनः पुनः ।।२६।।

ततोऽब्रवीद्धेमकण्ठ: सामात्यो वत्सलं नृपम् ।
स्नेहकारुण्यभावेन विनयेन समन्वितः ।।२७।।

पुत्र उवाच

विना त्वां नोत्सहे गन्तुं कर्तुं राज्यञ्च जीवितुम् ।
न मया दृष्टपूर्वस्ते विरहस्तं सहे कथम् ।।२८।।

राजोवाच

एतदर्थं मया पूर्वं धर्मशास्त्रं सुनीतिमत् ।
उपदिष्टं तव शुभं न वृथा कर्तुमर्हसि ।।२९।।

श्रूयते जामदग्न्येन जननी निहता पुरा ।
पितृवाक्यानुरोधेन नीतिज्ञेन सुधीमता ।।३०।।

रामस्तु राज्यं त्यक्त्वैव वनं यातः सहानुजः ।
अपृष्ट्वा कारणं सीतां तत्याज लक्ष्मणो वने ।।३१।।

हेमकण्ठ ! पुरं शीघ्रममात्यैस्त्रिभिरन्वितः ।
अतो ममाज्ञया गच्छ कुरु राज्यं मयार्पितम् ।।३२।।

विज्ञे यथा कार्यसक्ते चित्तं तस्य परात्मनि ।
यथाऽवस्थापिते वित्ते चित्तं लोकस्य वर्तते ।।३३।।

ताराहरूले सम्पन्न भए पनि जून नभएको आकाश सुहाउँदैन त्यसरी नै हजुर नभएको नगर सुहाउने छैन ।।२३।। हे प्यारा राजा! हामी पनि तपाईंका साथ दुई-तीन तीर्थमा जान चाहन्छौं। तपाईंको यो रोगजर्जर रूप पनि तीर्थसेवाबाट कान्तिमय हुनेछ।।२४।।

त्यसपछि ठूलो हर्षले सम्पन्न भएका हामीहरू तपाईंका साथ लागेर ध्वजा-पताकाले सुहाएको राजधानीमा बाजा-गाजा र स्तुतिपाठका साथ प्रवेश गर्नेछौं ।।२५।।

**सूतजीले भन्नुभयो** - जनताका अनुरोधपूर्ण वचन सुनेर दु:ख र क्रोधले युक्त भएका राजा सोमकान्तले सबैलाई हात जोडेर नमस्कार गर्दै 'यो कुरा हुनै सक्तैन' भन्ने वाक्य पटक-पटक दोहोर्‍याए।।२६।। त्यसपछि मन्त्रीसहित हेमकण्ठले दयालु राजासँग स्नेह र करुणा प्रकट गर्दै विनयपूर्ण स्वरमा भने ।।२७।।

**हेमकण्ठले भने-** पूज्य पिताश्री ! म हजुरविना घर फर्कन चाहन्नँ, राज्य गर्न चाहन्नँ र बाँच्न पनि चाहन्नँ । मैले कहिल्यै पनि हजुरको वियोगको अनुभव गरेको छैन । अहिले त्यो वियोग कसरी सहन गरूँ ?।।२८।।

**राजाले भने** - प्यारा पुत्र ! यस्तै परिस्थितिमा कर्तव्यपालन गर्नु पर्ने विधिव्यवस्थाका लागि मैले मङ्गलमय नीतिशास्त्र र धर्मशास्त्रको तिमीलाई उपदेश गरेको हुँ । त्यो उपदेशलाई तिमीले व्यर्थ बनाउन हुँदैन ।।२९।। पहिले नीतिज्ञ र बुद्धिमान् महापुरुष परशुरामले आफ्नै पिताको अनुरोधमा आफ्नी आमाको घाँटी काटेका थिए भन्ने कुरा पुराण-वेत्ताहरूबाट सुन्न पाइन्छ ।।३०।। श्रीराम पनि आफ्ना पिताको आज्ञा पाएर राज्यत्याग गरी भाइ लक्ष्मणका साथ वनवासका लागि प्रस्थान गरेका थिए । लक्ष्मणले पनि कुनै कारण नसोधीकन श्रीसीतालाई वनमा एक्लै छाडेर रामको अनुगमन गरेका थिए।।३१।। बाबु हेमकण्ठ ! मेरो आज्ञापालन गरी तीनजना अमात्यहरूका साथ तिमी छिटै राजधानी फर्किनु पर्छ र मैले जिम्मा लगाएको राज्यको पालन गर्नुपर्दछ ।।३२।। जस्तै विज्ञ जन कार्यमा व्यापृत भए पनि तिनको चित्त परमात्मामा नै लागिरहेको हुन्छ, जस्तै कमाएको धनमा

तथा मयि वनं याते स्वान्तं मे त्वयि वर्तते ।
दैवयोगेन सुभगो जातो यास्ये पुनर्गृहम् ।।३४।।

भविष्यति तथा धर्मो मद्वाक्यकारिणस्तव ।
न तथा सह यानेन तस्माद् गच्छ व्रजामि च ।।३५।।

सूत उवाच

अमात्या नागरा: पुत्र: प्रयातुं कृतमानसा: ।
कष्टेन महता युक्ता नमश्चक्रुर्नृपं तदा ।।३६।।

अनुज्ञातास्ततस्तेन आशीर्भिरभिनन्द्य च ।
प्रदक्षिणीकृत्य नृपं निवृत्ता नगरं प्रति ।।३७।।

अग्रे कृत्वा महासेनां गजाश्वरथपत्तिनीम् ।
छत्रध्वजयुतो मानी हेमकण्ठोऽगमत् पुरीम् ।।३८।।

संसारका मानिसको चित्त लागिरहेको हुन्छ त्यसैगरी म वन गएपछि मेरो चित्त मेरा प्यारा पुत्र तिमीमा नै लागिरहने छ। दैवयोगले म निको हुन र राम्रोसमेत हुन पाएँ भने म फेरि घर फर्कने छु ।।३३-३४।। मेरो आज्ञापालन गर्ने तिमीहरू सबै पुण्यभागी हुनेछौ । मसँग वनजाँदा तिमीहरूलाई त्यो पुण्य प्राप्त हुनेछैन। त्यस कारण तिमी राजधानीतर्फ जाऊ र म वनतर्फ जानेछु ।।३५।।

सूतजीले भन्नुभयो- राजाका साथ वन जानका लागि हठ गरिरहेका मन्त्री, नगरवासी जनता र हेमकण्ठसमेत सबैले राजाज्ञा स्वीकार गरी अनिच्छापूर्वक अत्यन्त कष्टले नगरतर्फ फर्कने विचार बनाएर राजालाई नमस्कार गरे ।।३६।। राजाबाट आशीर्वाद एवं अभिनन्दनपूर्वक नगर फर्कनका लागि आज्ञाप्राप्त गरेका ती सबै राजाको परिक्रमा गरी नगरतर्फ फर्के ।।३७।। स्वाभिमानी हेमकण्ठ पनि छाता र ध्वजाका साथ हात्ती, घोडा, रथ र पैदल सेनालाई आफ्ना अगाडि लगाएर राजधानीतर्फ फर्किए ।।३८।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे सोमकान्ततपोवनगमनं नाम चतुर्थोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'हेमकण्ठको राज्याभिषेकपछि सोमकान्तको तपोवन प्रस्थान' शीर्षकान्वित चौथो अध्याय पूर्ण भयो ।।४।।

ॐ

# पञ्चमोऽध्यायः { ५ अध्याय }

सूत उवाच

ततो मातरमभ्येत्य स्नेहकातरया धिया ।
तां जगाद कथं मातस्त्यजसेऽनपराधिनम् ।।१।।

पुत्र उवाच

सहैव यातु पुत्रोऽयमिति वाच्यस्त्वया पिता ।
तव वाक्यानुरोधेन यदि मां सह नेष्यति ।।२।।

तदा वां सेवनं कुर्यां न मे राज्ये मतिस्तथा ।
किं तद्राज्यं सुखं दद्याद्भवभ्यां रहितस्य मे ।।३।।

सुधर्मोवाच

एतावद् दुःखशोकाभ्यां युक्तो राजा न मे वचः ।
करिष्यति महाबाहो तस्माद् गच्छ ममाज्ञया ।।४।।

पातिव्रत्येन धर्मेण परवत्यस्मि बालक ।
भर्तुरन्यो न देवोऽस्ति योषितां मान्य एव च ।।५।।

सूत उवाच

इत्याकर्ण्य नमश्चक्रे मातरं ससुहृत् सुतः ।
प्रदक्षिणीकृत्य ततोऽनुज्ञां प्राप्य पुरं ययौ ।।६।।

अलङ्कृतैर्नागरिकैः पताकाध्वजपल्लवैः ।
सिक्तमार्गं सुगन्धाढ्यं यथेन्द्रनगरं तथा ।।७।।

दत्त्वा ताम्बूलवासांसि विसृज्य स्वजनान् नृपः ।
प्रविवेश गृहं श्रीमद् हर्षशोकसमन्वितः ।।८।।

चकार राज्यं धर्मेण सुतवत् पालयन् प्रजाः ।
धर्मार्थकाममोक्षेषु यथाशिक्षं मनो दधे ।।९।।

**सूतजीले भन्नुभयो** - पितासँग बिदाबारी भई राजधानी फर्कन लागेका हेमकण्ठले आफ्ना पतिको अनुसरण गर्दै वन जान लागेकी आमा सुधर्माका नजिकमा गएर कातर स्वरमा भने- 'हे आमा ! तपाईं मजस्तो निरपराध छोरालाई एक्लै छाडेर किन वनतर्फ जाँदै हुनुहुन्छ ?' ।।१।।

**हेमकण्ठले भने** - आमा ! तपाईंले पिताश्रीलाई भनिदिनुहोस् यो छोरा पनि हामीसँग वन जान्छ । तपाईंको अनुरोध स्वीकार गरी पिताश्रीले मलाई साथमा लगेमा मैले माता-पिताको सेवा र सत्कार गर्ने अवसर पाउने थिएँ । हजुरहरूलाई वन पठाएर मलाई राज्य गर्ने इच्छा छैन । हजुरहरू नभएको त्यस रित्तो राज्यले मलाई के सुख देला र ? ।।२-३।।

**सुधर्माले भनिन्** - हे महाबाहु छोरा ! त्यस्ता दुःख र शोकले जेलिएका तिम्रा पिताले मेरो वचन स्वीकार गर्नुहुने छैन । त्यस कारण तिमी मेरो आज्ञाअनुसार राजधानी फर्क। हे छोरा! म पनि पतिव्रताधर्मको अधीनमा छु । पत्नीका लागि पतिभन्दा मान्य देवता अरू कुनै हुँदैन ।।४-५।।

**सूतजीले भन्नुभयो** - हेमकण्ठले आमाका ती कुरा सुनेपछि आफ्ना प्रियजन र मित्रहरूका साथ प्रदक्षिणा गरी आमालाई प्रणाम गरे अनि मातापिताको आज्ञा लिएर राजधानी फर्किए ।।६।। तिनको राजधानी सिंगारिएका नरनारीहरूबाट सुहाएको थियो र ध्वजा-पताकाले अत्यन्त सुन्दर देखिन्थ्यो। त्यहाँका राजमार्गहरू धोइ-पखाली राम्रा तुल्याइएका थिए र विभिन्न सुगन्धित पदार्थहरू छरेर सुगन्धमय बनाइएका थिए। त्यो राजधानी इन्द्रकै अमरावती पुरीजस्तो देखिन्थ्यो ।।७।। राजधानीमा पुगेपछि हेमकण्ठले साथमा आएका मानिसहरूलाई पान, सुपारी र लत्ता-कपडा दिएर बिदा गरे। त्यसपछि हर्ष र शोकमा डुबेका ती हेमकण्ठले ऐश्वर्यसम्पन्न आफ्नो राजभवनमा प्रवेश गरे ।।८।। धर्मपूर्वक शासन गर्दै तिनले आफ्ना सन्तानको पालन गरेजस्तै प्रजाको पालन गरे । धर्म, अर्थ, काम र मोक्षसम्बन्धी क्रियाकलापहरूमा आफ्नो अध्ययन र ज्ञानअनुसार प्रवृत्त भए ।।९।।

ऋषय ऊचुः

कथं राजा सोमकान्तः किं वनं समुपागतः ।
किंसहायश्च किं चक्रे कर्म नो वद विस्तरात् ।।१०।।

सूत उवाच

हेतवः कथयिष्यामि सोमकान्तो यथा वनम् ।
गत्वा चकार यत् कार्यं सादरं श्रृणुतानघाः ।।११।।

सुबलज्ञानगम्याभ्याममात्याभ्यां सुधर्मया ।
धर्मपत्न्या युतोऽरण्यं प्रविवेश दुरासदम् ।।१२।।

अग्रतः प्रकृतिर्याता मध्ये राजाऽथ पृष्ठतः ।
धर्मपत्नी सुधर्माऽगात् सीतेव रामपृष्ठतः ।।१३।।

एकाशनाश्च चत्वार एकचित्तासनालयाः ।
समसुखदुःखाश्चापि वनाद् वनमुपाययुः ।।१४।।

क्षुधातृषाश्रमैर्वापि निम्नोन्नतगताध्वभिः ।
अत्यन्तं कर्षिताश्छायामाश्रित्योपाविशन् क्वचित् ।।१५।।

पुनर्वनान्तरं गत्वा ददृशुस्ते सरो महत् ।
यत्र मातङ्गसदृशा नक्रा भान्ति सकच्छपाः ।।१६।।

तालास्तमालाः सरलाः प्रियाला बकुलाः शुभाः ।
सरलाः पनसा जम्बुनिम्बाश्वत्थवटादयः ।।१७।।

वृक्षा नानालताजालैर्वेष्टिताः परितो बभुः ।
यत्रास्ते तिमिरं गाढं गिरिदर्युदरे यथा ।।१८।।

यत्र वायुः सुखस्पर्शः पद्मकादम्बगन्धवान् ।
यस्मान्नयन्ति मुनयः कुसुमानि फलानि च ।।१९।।

यत्र हंसा बकाःश्येनाः शुभाः काकाश्च कोकिलाः ।
सारिकाश्चक्रवाकाश्च नाना रावान् विकुर्वते ।।२०।।

**ऋषिहरूले सोधे** - हे सूतज्यू ! राजा सोमकान्त कसरी कुन वनमा प्राप्त भए ? कसको सहयोग लिएर उनले के काम गरे ? हाम्रा यी प्रश्नहरूको विस्तारपूर्वक उत्तर दिनुहोस् ।।१०।।

**सूतजीले भन्नुभयो** - हे निष्पाप मुनिजन ! राजा सोमकान्त जसरी वनमा गए र उनले जे गरे तथा तिनको वनगमनमा जे-जस्ता कारण रहेका थिए, ती सबैको विषयमा म बताउँछु। तपाइँहरू आदरपूर्वक सुन्नुहोस् ।।११।। सुबल र ज्ञानगम्य नामक दुईजना अमात्य र सुधर्मा नामक आफ्नी धर्मपत्नीका साथ राजा सोमकान्त दुर्गम वनमा प्राप्त भए।।१२।। वनप्रस्थान गर्दा राजाका अगाडि दुईजना अमात्य थिए, बीचमा आफै राजा सोमकान्त थिए र तिनका पछाडि रामको पछि लागेर वन जाने सीतासमान रानी सुधर्मा हिँडिरहेकी थिइन्।।१३।। एउटै भाँडामा पाकेको भोजन गर्ने, समान चित्त, समान आसन र समान आश्रय लिएर वनवासका दिन बिताइरहेका ती चार जना एउटा वनबाट अर्को वनतर्फ नित्य यात्रा गरिरहेका देखिन्थे ।।१४।। कुनै दिन भोक, तिर्खा र थकाइले क्लान्त बनेका, उकाला र ओराला बाटाहरूमा अनवरत यात्राका कारण अत्यन्त दुर्बल देखिने ती चार जना एउटा रूखको छायामा गएर बसेका थिए ।।१५।। छायामा केहीबेर विश्राम गरेपछि ती सबै अर्को वनतर्फ लागे र तिनले त्यहाँ एउटा विशाल सरोवर देखे । जुन सरोवरमा हात्तीसमान गोहीहरू कछुवाका साथ पानीमा सुहाएका थिए ।।१६।। सरोवरका वरिपरि ताडी, तमाल, सल्लो, आँप, मौलसिरी, धूपी, कटहर, जामुनो, नीम, पीपल र वर जातिका रूखहरू अनेक थरि लहराले जेलिएर सुहाएका थिए । जहाँ पर्वतको गुफामा अनुभव गरिने कालो अन्धकारझैं घना अन्धकार छाएको थियो। जहाँ कमल र कदमको गन्ध बोकेको आनन्ददायक मन्द पवन प्रवाहित थियो । जुन वनबाट कमल र कदमलाई मुनिहरूले नित्य पूजाका लागि टिपेर लैजाने गर्दथे ।।१७-१९।। हे मुनिजन! जहाँ अत्यन्त आकर्षक हाँस, बकुल्ला, बाज, कौवा, कोइली, मैना र चखेवा नामक चराहरूले अनेक थरि स्वर निकालेर वातावरणमा सङ्गीतमयता प्रदान गरेका थिए ।।२०।। जहाँ

न यत्र शीतोष्णाकरांशुसन्धि-
र्नानालतापुष्पकुजाश्रितानाम् ।
क्षुत्तृड्भयं यत्र न चैव मृत्युः
स्वर्गे यथा पुण्यवतां द्विजेन्द्राः ।।२१।।

तत्र गत्वा जलं सर्वे पपुःशीतं श्रमापहम् ।
स्नात्वा नित्यक्रियां कृत्वा फलानि बुभुजुश्च ते ।।२२।।

सुष्वाप च क्षणं राजा कच्छे कोमलवालुके ।
धर्मपत्नी सुधर्मा च पादसंवाहने स्थिता ।।२३।।

तस्यानुमतमाज्ञाय द्वावमात्यावगच्छताम् ।
आदातुं कन्दमूलानि फलानि च बिसानि च ।।२४।।

ददर्श तत्राद्भुतरूपमुग्रं
बालं सुधर्मा प्रभया ज्वलन्तम् ।
उत्कृष्टरूपस्य कृते स्मरं तं
जातं पुरा बालमिति स्म मेने ।।२५।।

दृष्ट्वैव तं सा जहृषे सुधर्मा
मेने च तं सा हितकारिणञ्च ।
क्षुब्धं प्रसन्नं हृदयं समीक्ष्या-
पकारिणं चोपकरं हि वक्ति ।।२६।।

पप्रच्छ तं कश्च कुतः प्रयातः
कस्यासि पुत्रो जननी च का ते ।
वदस्व शब्दामृतधारया मे
सखेव कर्णौ परितोषयाशु ।।२७।।

सूत उवाच

इति स्म पृष्टः स जगाद बाल-
स्तां राजपुत्रीं सुधया गिरा मे ।
पिता भृगुर्भामिनि ! मे पुलोमा
माता जलार्थी स्वगृहादिहागाम् ।।२८।।

च्यवनः खलु नाम्नाहं पितुराज्ञाकरः शुभे ।
त्वं च का कतमोऽयं ते कथं वनमिदं गतः ।।२९।।

लहरा, फूल फुलेका थिए । रूखको छायादार आश्रयमा बस्नेहरूका लागि प्रचण्ड सूर्यका ताता किरण र चन्द्रमाका चीसा किरणको कहिल्यै पनि संयोग हुन्नथ्यो । जहाँ पुण्यवान्हरूले भोक र तिर्खाको दुःख अनुभव गर्दैनथे र जहाँ मानिसहरूले मृत्युको पीडा पनि व्यहोर्नु पर्दैनथ्यो ।।२१।। ती सबैले त्यहाँ गई थकाई मेटाइदिने मीठो पानी खाए । नुहाएर नित्यक्रिया सम्पन्न गरी मीठा फल पनि खाए ।।२२।। त्यसपछि तलाउको कोमल बालुवा भएको किनारमा पल्टिएका राजा सोमकान्त निदाए । तिनकी धर्मपत्नी सुधर्मा आफ्ना पति सोमकान्तको पाउ दबाएर सेवा गर्न थालिन् ।।२३।। राजा सोमकान्तको आज्ञा पाएर साथमा आएका दुईजना अमात्यहरू कन्दमूल, फल र कमलका डाँठ सङ्ग्रह गर्न गए।।२४।। अमात्यहरू हिंडेपछि सुधर्माले त्यहाँ अद्‌भुत सुन्दर, प्रखर तेजस्वी र कान्तिद्वारा देदीप्यमान एउटा बालकलाई देखिन्। तिनले त्यस बालकलाई देखेर त्यसको अद्‌भुत रूपका कारण कामदेव नै फेरि पैदा भएर आएजस्तो मानिन् ।।२५।। सुधर्मा त्यस बालकको दर्शन पाएर अत्यन्त प्रसन्न भइन् । तिनीले त्यसलाई आफ्नो हितैषी पनि मानिन् । हुन पनि कुनै पनि क्रुद्ध मानिसलाई देख्दा यो अपराधी हो भन्ने र कुनै प्रसन्न मानिसलाई देख्दा यो उपकारी हो भन्ने कुरा आफ्नै मनले भनिरहेको हुन्छ।।२६।। सुधर्माले ती बालकसँग सोधिन् - बाबु ! तिमी को हौ ? कहाँबाट आएका हौ ? कस्का छोरा हौ ? तिम्री आमा को हुन्? यी प्रश्नहरूको उत्तर दिने सन्दर्भमा मित्रले जस्तै आफ्ना वचनामृतको धारा प्रवाहित गरेर मेरो मनलाई छिटो सन्तुष्ट तुल्याऊ ।।२७।।

**सूतजीले भन्नुभयो** - हे मुनिहरू ! सुधर्माद्वारा प्रश्न गरिएका ती बालकले आफ्नो अमृतमय वचनद्वारा उत्तर दिए- हे आदर्श नारी ! मेरा पिताको नाम भृगु ऋषि हो र मेरी आमालाई पुलोमा भन्दछन् । म अहिले यहाँ पानी लिन आएको छु ।।२८।। हे सुमङ्गली नारी ! मेरो नाम च्यवन हो । म पिताको आज्ञापालन गर्ने पुत्र हुँ । तपाईं को हुनुहुन्छ ? तपाईंसँगै रहेका यी पुरुष को हुन् र किन तपाईं यो वनमा आउनुभएको छ ? ।।२९।।

स्रवन्ति कथमङ्गानि वर्षाकाले गिरेरिव ।
अतिदुर्गन्धता चास्य केन वा वद कर्मणा ।।३०।।

कृमिभारसमाकीर्णममुं वा सेवसे कथम् ।
स्वयं चारुतरा भूत्वा सुकुमारी सुलोचना ।।३१।।

चारुप्रसन्नवदना चारुसर्वाङ्गशोभिनी ।
कच्चित्पूर्वं न पित्रा ते सुहृद्भिर्भ्रातृभिर्द्विजैः ।।३२।।

विज्ञातोऽयं वरः कुष्ठी कृमिभाराकुलोऽपि च ।
कथमेनं वृतवती दुर्गमञ्चागता वनम् ।।३३।।

सूत उवाच

इति पृष्टा सुधर्मा सा मुनिपुत्रेण धीमता ।
व्याचष्टे सकलं तस्मै शोकहर्षसमन्विता ।।३४।।

सुधर्मोवाच

सौराष्ट्रदेशे विख्यातं देवताख्यं पुरं महत् ।
तत्राऽयं सोमकान्तो मे भर्ता राज्यं चकार ह ।।३५।।

अतिमानी वदान्यश्च शूरो दृढपराक्रमः ।
असङ्ख्यातबलोपेतो रिपुराष्ट्रविमर्दनः ।।३६।।

यज्वाऽतिसुन्दरः श्रीमान् सुहृदानन्दकारकः ।
विवेक्ता सर्वकार्याणां नीतिशास्त्रविशारदः ।।३७।।

राज्यं स्वं बुभुजे राजा बहुकालं द्विजोत्तम ।
इमामवस्थां सम्प्राप्तः पूर्वकर्मविपाकतः ।।३८।।

अमात्यद्वयसंयुक्तो वनमेतत् समागतः ।
भ्रमन्ती पृष्ठलग्नाऽस्य पुत्रे राज्यं प्रयच्छतः ।।३९।।

वर्षाकालमा पर्वतबाट पानीको धारा बगेझैं तपाईंका नजिक रहेका यी पुरुषका अङ्ग-प्रत्यङ्गहरूबाट किन पीप र रगतका धारा बगिरहेका छन् ? कुन कर्मले गर्दा यिनका शरीरबाट घोर दुर्गन्ध आइरहेको छ ? मलाई उत्तर दिनुहोस् ।।३०।। तपाईं आफू सुरूपा नारी हुनुहुन्छ, सुकुमारी र सुनयना पनि हुनुहुन्छ तर कीरैकीराको भारी बोक्ने यस्ता दुर्गन्धित र घिन लाग्दा मानिसको सेवा किन गरिरहनुभएको छ ? ।।३१।। तपाईं सुन्दरी एवं उज्यालो अनुहारकी हुनुहुन्छ र आफ्ना अङ्ग-प्रत्यङ्गमा रहेको सौन्दर्यले सुहाउनुभएको छ । यस्ती तपाईंसँग यो घिन लाग्दो कीरै कीराको भारी बोक्ने कुष्ठरोगी पुरुषसँग विवाहको प्रस्ताव आउँदा के तपाईंका पिताले आफ्ना मित्र, दाजुभाइ र ब्राह्मणहरूसँग राम्ररी बुझ्ने प्रयास गर्नुभएन? तपाईं आफै पनि किन यस्ता पुरुषसँग विवाह गर्न राजी हुनुभयो र वरण गर्नुभयो ? फेरि यस्ता पुरुषसँग किन यस दुर्गम वनमा आउनुभयो ? ।।३२-३३।।

**सूतजीले भन्नुभयो** - हे मुनिजन ! भृगुका बुद्धिमान् छोरा च्यवनले यसरी सोधेपछि आफ्ना पतिलाई कुष्ठरोग भएकाले शोकाकुल र घोर वनमा प्रेमपूर्वक आफ्नो वृत्तान्त सुन्न चाहने व्यक्तिलाई पाउँदा हर्षित भएकी सुधर्माले तिनलाई आफ्ना सबै कुरा बताउँदै भनिन् ।।३४।।

**सुधर्माले भनिन्** - हे मुनिपुत्र ! सौराष्ट्र देशमा देवतापुर नामबाट प्रसिद्ध ठूलो नगर छ । त्यहाँ रहेर यी मेरा श्रीमान् सोमकान्तले राज्य गरिरहनुभएको थियो ।।३५।। हे उत्तम ब्राह्मण ! मेरा श्रीमान् सोमकान्त अति स्वाभिमानी, उदार दाता, शूर, दृढपराक्रमी, असङ्ख्यसेनासम्पन्न, शत्रुराज्यमा आक्रमण गरी शत्रुलाई तह लगाउन समर्थ, निरन्तर यज्ञ-यागमा संलग्न, ऐश्वर्यवान्, मित्रहरूलाई आनन्द प्रदान गर्ने, सुन्दर स्वरूप भएका, सबै कार्यहरूको विश्लेषण गर्न समर्थ र नीतिशास्त्रका विद्वान्का रूपमा प्रसिद्ध हुनुहुन्थ्यो । उहाँले आफ्नो प्रसिद्धिअनुकूल दीर्घकालसम्म राज्य सञ्चालन गर्नुभयो। अहिले पूर्वजन्मका कर्मका परिणामले यस अवस्थामा प्राप्त हुनुभएको छ ।।३६-३८।। उहाँ दुई अमात्यहरूका साथमा यस वनमा आउनुभएको हो । छोरालाई राज्य सुम्पनु हुने श्रीमान्को साथ लागेर म पनि वनमा आएकी छु । मैले सुबल र ज्ञानगम्य नामक अमात्यहरूका साथ

सुबलज्ञानगम्याभ्यां प्रकृतिभ्यामिहागता ।
राज्ञोऽनुज्ञां समादाय फलार्थं तौ गतौ वने ।।४०।।

इहाऽस्मान् राक्षसाः प्रेता भूतानि मृगपक्षिणः ।
नानाविधा भीषयन्ति कथं नो भक्षयन्ति न ।।४१।।

न जाने दुःखभोगाय स्थापयन्त्यग्रतोऽपि च ।
दुःखस्यान्तं न पश्यामि कर्मणो दुष्कृतस्य च ।।४२।।

कटुतिक्ताम्ललवणमधुरस्निग्धभोजने ।
न तथा रुचिरस्याऽभूत् परीतस्य द्विजातिभिः ।।४३।।

यथेदानीं कन्दमूलकषायाम्लफलादिषु ।
दरिद्राणां महाहारः पाकोऽपि भक्षितस्य च ।।४४।।

न तथा श्रीमतां शक्तिरशने पाक एव च ।
यः शेते कोमले दिव्ये शयने स्म मनोरमे ।।४५।।

इदानीं यत्र कुत्रापि पश्य कालविपर्ययम् ।
यस्य दिग्व्यापिनश्वासन् नानापरिमलाः शुभाः ।।४६।।

पूयशोणितदिग्धस्य पूतिगन्धोऽपि साम्प्रतम् ।
य आनन्दमये सिन्धौ मग्नोऽभूत् पण्डितैर्वृतः ।।४७।।

स इदानीं दुःखमये कृमिभिः परिवारितः ।
कथं तरेम दुःखाब्धिं न जाने भृगुनन्दन ।।४८।।

भव पोत इवागाधे मज्जन्तं नौरिवार्णवे ।।४९।।

उहाँको सेवा गर्दै कालयापन गरिरहेकी छु । यस बेला राजाको आज्ञा पाएर ती दुवै अमात्य कन्द-मूल र फल-फूलको खोजी गर्न गएका छन् ।।३९-४०।। यहाँ हामीहरूलाई राक्षस, प्रेत, भूत, अनेक थरि जनावर र चराहरूसमेतले भय-त्रास देखाइरहेका छन् तर किन हो हामीलाई खान सकेका छैनन् ।।४१।। मलाई लाग्छ, हामीलाई अझ दुःख दिन यिनले आफ्नो आहार बनाएका छैनन् । मलाई दुःखको अन्त होलाजस्तो लाग्दैन । अहिले हामीले यसरी पापकर्मको फल भोगिरहेका छौं ।।४२।। पहिले मेरा पतिदेव आफ्नो दरबारमा ब्राह्मण आदि पूज्यवर्गका साथ भोजन गर्न लाग्दा पीरो, तीतो, नूनिलो, अमिलो, गुलियो र चिल्लो भोजनमा त्यति रुचि राख्नुहुन्नथ्यो । अहिले भने उहाँले यस वनमा कन्दमूल, टर्रो, तीतो, अमिलो जेजस्ता पदार्थ पाइन्छ त्यसलाई रुचिपूर्वक खानु परिरहेको छ । गरीबले त्यस्तो जङ्गली आहारा खान सक्छन् र पचाउन पनि सक्छन् ।।४३-४४।। तर ऐश्वर्यभोगमा अभ्यस्त मानिसहरूको यस्तो आहारा खाने सामर्थ्य हुँदैन र पचाउन पनि सक्दैनन् । जुन राजा पहिले कोमल, दिव्य र सुन्दर शय्यामा आराम गर्नुहुन्थ्यो, आज उहाँलाई जस्तोसुकै भुइँमा सुतेर कालयापन गर्नुपरेको छ । समयको उल्टो परिणाम हेर्नुहोस् – के थियौं हामी र आज के भोगिरहेका छौं ? जुन राजाको शरीरबाट दिग्दिगन्तव्यापी सुगन्धको धारा प्रवाहित हुन्थ्यो, आज उहाँलाई पीप र रगतको दुर्गन्धको बीचमा बाँच्न परिरहेको छ । जुन राजा पहिले विद्वान्हरूका साथ आनन्दसागरमा डुबुल्की मार्दै राज्यसञ्चालन गर्नुहुन्थ्यो, आज उहाँ यो दुःखमय परिस्थिति आत्मसात् गरेर शरीरका घाउमा सल्बलाउने कीराहरू हेर्दै बाँचिरहनुभएको छ । हे भृगुपुत्र ! हामी यो दुःखसागर कसरी तर्न सक्छौं ? मैले कुनै उपाय देखेकी छैन । अगाध सागरमा डुबिरहेका हामीहरूका निम्ति तपाईं जहाज अथवा डुंगा बनिदिनुहोस् ।।४५-४९।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे सुधर्माच्यवनसंवादो नाम पञ्चमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सोमकान्तकी रानी सुधर्मासँग भृगुका पुत्र च्यवनको कुराकानी' शीर्षकान्वित पाँचौं अध्याय पूर्ण भयो ।।५।।

ॐ

# षष्ठोऽध्यायः { ६ अध्याय }

### सूत उवाच

इति तद्वचनं श्रुत्वा च्यवनो भृगुनन्दनः ।
त्वरया स्वमुपादाय कलशं जलसम्भृतम् ।।१।।

दुःखितः परदुःखेन तूष्णीमेवागमद् गृहम् ।
तं भृगुः परिपप्रच्छ विलम्बकारिणं सुतम् ।।२।।

### भृगुरुवाच

किमपूर्वं त्वया दृष्टं लक्ष्यसे चकितो यथा ।
विलम्बश्च कथं जातो वद पुत्र ! ममाग्रतः ।।३।।

### पुत्र उवाच

सौराष्ट्रदेशे विख्याते दैवते नगरे मुने ।
सोमकान्त इति ख्यातो राजा राजीवलोचनः ।।४।।

चक्रे राज्यं बहुतिथं धर्मेण पालयन् प्रजाः ।
दुर्भगत्वं गतो दैवात् पुत्रे राज्यं निवेश्य सः ।।५।।

पत्न्या सुधर्मया युक्तो भर्तुराज्ञाभृता पितः ।
सुबलज्ञानगम्याभ्यां प्रकृतिभ्यामिहागतः ।।६।।

गलत्कुष्ठी कृमियुतो विभ्रमन् दुर्गमं सरः ।
सहस्त्रभगतां प्राप्तो यथेन्द्रो गौतमान् मुनेः ।।७।।

क्व सा सुधर्मा चार्वङ्गी क्व गलत्कुष्ठवान् पतिः ।
इति मे पृच्छतो वृत्तं तदीयं गतवान् क्षणः ।।८।।

तदीयैः करुणावाक्यैर्मनो मे कलिलं त्वभूत् ।
ततोऽहं कलशं पूर्णं कृत्वा शीघ्रमुपागतः ।।९।।

### सूत उवाच

सर्वं चाकथयत् तस्मै तया यत् कथितं वचः ।
श्रुत्वा तच्च पुनः पुत्रं च्यवनं भृगुरब्रवीत् ।।१०।।

**सूतजीले भन्नुभयो** - सुधर्माका ती कुराहरू सुनेपछि महर्षि भृगुका छोरा च्यवन अत्यन्त दुःखित भए र कलशमा छिटो छिटो पानी भरी नबोलीकन आफ्नो घरतर्फ लागे। आफ्नो छोरालाई ढिलो आएको देखेर भृगु ऋषिले बिलम्ब गर्ने छोरा च्यवनलाई किन विलम्ब गर्‍यौ भनी सोध्नुभयो ।।१-२।।

**भृगुले भन्नुभयो** - बाबु च्यवन ! आज तिमीले के अपूर्व कुरा देख्यौ ? तिमी चकित झैं देखिन्छौ ? किन विलम्ब भयो ? मेरा सामु सबै कुरा भन ।।३।।

**च्यवनले भने** - हे पिताश्री ! विख्यात सौराष्ट्र देशमा देवतानगर नामक एउटा सहर छ । त्यहाँ कमलजस्ता आँखा भएका सोमकान्त नामक प्रख्यात राजा थिए ।।४।। तिनले धर्मपूर्वक प्रजापालन गर्दै धेरै दिनसम्म राज्य गरे । दैवसंयोग ती कुष्ठरोगबाट ग्रस्त भए । त्यसपछि आफ्नो राज्य छोरालाई सुम्पेर आज्ञापालिका पत्नी सुधर्मा र सुबल एवं ज्ञानगम्य नामक मन्त्रीहरूका साथ ती राजा यहीं नजिकको सरोवरमा आई बसेका छन् । कुष्ठरोगका कारण तिनको शरीरबाट रगत र पीपको धारा बगिरहेको छ । तिनको शरीर कीराहरूले ढाकिएको छ। जसरी पहिले गौतम ऋषिको सरापबाट सम्पूर्ण शरीरमा हजार योनि धारण गर्ने इन्द्र घिनलाग्दा देखिएका थिए, त्यस्तै राजा सोमकान्त पनि घिनलाग्दा भएर तलाउको नजिकमा बसेका छन् । अत्यन्त मनोहर स्वरूप भएकी सुधर्मा कहाँ? शरीरबाट रगत र पीपका धारा बगाउने ती सोमकान्त कहाँ? यो सोचेर मलाई खुल्दुली भयो र तिनै सुधर्माका साथ संवादको क्रममा मैले धेरै समय बिताएँ ।।५-८।। हे पिताश्री ! सुधर्माका ती कारुणिक वचन सुनेर मेरो मन पग्लियो । त्यसपछि कलशमा पानी भरेर छिटो-छिटो गरी आश्रममा आइपुगें ।।९।।

**सूतजीले भन्नुभयो** - च्यवनले आफ्ना पिता भृगुका सामु रानी सुधर्माले गरेका बिलौना सुनाए । आफ्ना पुत्रका मुखबाट सोमकान्त राजा र सुधर्मा रानीको विषयमा सबै कुरा सुनेर भृगु ऋषिले आफ्ना छोरालाई भन्नुभयो ।।१०।।

भृगुरुवाच

सर्वानानय तान् शीघ्रं पुत्र ! गच्छ ममाज्ञया ।
द्रक्ष्यामि कौतुकं तेषां स्वीयं वा दर्शयामि तान् ।।११।।

सूत उवाच

इत्थं स चोदितः पित्रा च्यवनः करुणानिधिः ।
जगाम सरसो भूमिं सुधर्मां द्रष्टुमुत्सुकः ।।१२।।

तस्मिन्नेव क्षणेऽमात्यौ फलकन्दभरान्वितौ ।
सुबलज्ञानगम्यौ तावागतौ राजसन्निधिम् ।।१३।।

तत ऊचे स तु मुनिः सुधर्मां चारुलोचनाम् ।
पिता मे स्वाश्रमं सर्वानाकारयति सुव्रते ।।१४।।

इति तद्वचनं श्रुत्वा सुधर्मा शोकविह्वला ।
तदैव सावधानाऽभूत् तनुः प्राण इवागते ।।१५।।

सुशीला राजपत्नी सा पीत्वा तद्वचनामृतम् ।
अगमत् सा सुचार्वङ्गी प्रकृतिद्वयसंयुता ।।१६।।

सोमकान्तेन पतिना मुनिपुत्रपुरःसरा ।
गणेशस्कन्दसहिता शिवेव शिवसंयुता ।।१७।।

शुशुभे मार्गमध्ये सा वाचस्पतिपुरःसरा ।
मन्त्रघोषयुतं प्राप भृगोराश्रममण्डलम् ।।१८।।

नानापुष्पलताकीर्णं नानापक्षिनिनादितम् ।
मार्जारा नकुलाःश्येना गजा गावो मयूरकाः ।।१९।।

भुजङ्गाः पक्षिणः सिंहा व्याघ्राः क्रीडन्ति यत्र च ।
न च वायुर्भृशं वाति न सूर्यस्तपते भृशम् ।।२०।।

न वर्षति भृशं मेघो वर्षते च तदिच्छया ।
विविशुस्ते हर्षयुता मुनिपुत्रपुरःसराः ।।२१।।

तत्राद्भुतं व्याघ्रमृगाजिनस्थं
दर्दर्श सूर्यप्रतिमं भृगुं तम् ।
राजाऽथ पत्नी प्रकृतिद्वयञ्च
ननाम बद्धाञ्जलिरब्रवीच्च ।।२२।।

**भृगुले भन्नुभयो** – हे छोरा ! तिमी मेरो आज्ञाअनुसार छिटै सरोवरतर्फ जाऊ र राजा सोमकान्त, रानी सुधर्मा र अमात्यहरू सुबल र ज्ञानगम्यलाई लिएर यहाँ आऊ । मैले तिनलाई मेरै आश्रममा देख्नेछु अथवा मैले तिनीहरूलाई आफ्नो कौतूहल अर्थात् केही आश्चर्यपूर्ण घटना देखाउँछु ।।११।।

**सूतजीले भन्नुभयो** – यसरी आफ्ना पिताद्वारा अभिप्रेरित दयालु स्वभावका च्यवन सरोवरको नजिकै रहेकी सुधर्मालाई भेट्न उत्सुकतापूर्वक गए । च्यवन त्यहाँ पुगेका बेला फलको भारी बोकेका सुबल र ज्ञानगम्य नामक अमात्यहरू पनि राजा बसेको ठाउँमा आइपुगे । च्यवनले त्यहाँ गएर सुनयनी सुधर्मालाई भने– हे सुव्रता नारी ! मेरा पिताश्रीले तपाईंहरू सबैलाई आफ्नो आश्रममा आमन्त्रित गर्नुभएको छ ।।१२–१४।। च्यवनका ती कुरा सुनेर शोकले विह्वल भएकी सुधर्मा प्राणको सञ्चार हुँदा शरीर सक्रिय भएझैं ठाडी भइन् । सुशीला राजपत्नी ती सुधर्मा च्यवनको वचनामृत पान गरेर आफ्ना दुईजना अमात्यहरू र आफ्ना पतिलाई साथ लिएर भृगुको आश्रमतर्फ लागिन् । अगाडि अगाडि मुनिपुत्र, तिनका पछि अमात्यहरू, त्यसपछि राजा सोमकान्त र तिनका पछि रहेकी सुधर्मा मुनिको आश्रमतर्फ जाँदा बाटाको बीचमा श्रीगणेश, स्कन्द र शिवजीका साथमा बृहस्पतिलाई अघि लगाएर यात्रा गरिरहेकी पार्वतीसमान देखिइन् । केही समयपछि सुधर्मा वैदिक मन्त्रघोषले गुञ्जायमान भृगु ऋषिको पवित्र आश्रममा पुगिन् ।।१५–१८।। भृगु ऋषिको आश्रम अनेक प्रकारका लता र पुष्पले भरिभराउ थियो । त्यसलाई अनेक थरिका पक्षीहरूले आ–आफ्ना स्वर निकालेर ध्वनिमय तुल्याएका थिए । त्यहाँ बिराला, न्याउरी मूसा, बाज, हात्ती, गाई, मयूर, सर्प, पक्षी, सिंह, बाघजस्ता पशुपक्षीहरू आनन्दपूर्वक क्रीडा गरिरहेका थिए । त्यहाँ प्रचुर हावा थिएन र सूर्यको कडा ताप पनि थिएन । बादलले आवश्यकताअनुसार पानी वर्षाउँथे। त्यस दिव्याश्रममा ती सबै सहर्ष प्राप्त भए । तिनीहरूले त्यहाँ अद्‌भुत स्वरूपसम्पन्न, बाघ र मृगको छालामा विराजमान सूर्यजस्तै चहकिला भृगु ऋषिको दर्शन गरे । राजा, राजपत्नी र अमात्यहरूले हात जोडेर भृगु ऋषिलाई प्रणाम गरे। अनि राजाले नम्रतापूर्वक निवेदन गरे ।।१९–२२।।

राजोवाच

अद्याशिषो मे सफला द्विजेन्द्र !
द्विजेरिता धर्मचयस्तपोऽपि ।
आजन्मतोऽहं परिपूत एष
पितुर्जनन्याश्च सुजीवितं मे ।।२३।।

भवद्दृशिः सम्प्रति हन्त्यथैनः
पूर्वार्जितैः पुण्यचयैः कृताऽपि ।
आगामिकल्याणकरी मुनीन्द्र !
कालत्रये जन्म करोति पूतम् ।।२४।।

सौराष्ट्रदेशे खलु देवताख्ये
पुरे कृतं राज्यममोघदृष्टे !
भीतेन पापाद् द्विजदेवतादि-
पूजा कृता नीतिमता मुनीन्द्र ! ।।२५।।

आकस्मिकं मे दुरितं किमेतत्
प्रादुर्बभूवोग्रतरं दुरन्तम् ।
येनाऽहमीदृक् कुदशां प्रणीतो
जाने न किञ्चित् प्रतिकारमत्र ।।२६।।

अपायतां यान्ति कृता उपाया
युष्मत्कृतोपायमुपायमीहे ।
निर्वैरतां यान्ति हि जातिवैरा-
स्तवाश्रमे त्वां शरणं प्रपन्नः ।।२७।।

सूत उवाच

श्रुत्वेति वचनं तस्य भृगुस्तु करुणायुतः ।
उवाच सोमकान्तं तं ध्यानेनालोक्य सुव्रत ! ।।२८।।

भृगुरुवाच

उपायं वच्मि नृपते न चिन्तां कर्तुमर्हसि ।
ममाश्रमगता दुःखं नहि बिन्दन्ति जन्मिनः ।।२९।।

जन्मान्तरकृतं चैव दुरितं ते नृपोत्तम ।
येनेमाङ्गमितोऽवस्थां कथयिष्ये तदप्यहम् ।।३०।।

**राजाले भने** - हे भृगु ऋषि ! मैले ब्राह्मणद्वारा प्राप्त गरेका ती आशीर्वादलाई आज सफल भएको अनुभव गरेको छु र मैले गरेका धर्मलाई पनि फलीभूत भएको मानेको छु । मैले गरेका तपस्या र पुण्यकर्मलाई पनि परिपूर्ण भएको ठानेको छु । म घिनलाग्दो भएतापनि मैले आफूलाई जन्मदेखि नै अत्यन्त पवित्र भएको महसुस गरेको छु । मेरा मातापिताको जीवन र मेरो जीवन पनि उत्तम जीवनका रूपमा परिणत भएको मानेको छु ।।२३।। पूर्वजन्ममा अर्जित पुण्यका प्रतापले पाएको हजुरको दर्शनले अहिले पापनाश गर्दछ, पूर्वजन्ममा अर्जित पुण्यहरूका प्रभावले दर्शन पाइयो । हजुरको दर्शनले भविष्यमा पनि कल्याण हुनेछ । अतः हजुरको यो दर्शनले हाम्रो भूत; भविष्य र वर्तमानलाई पनि पवित्र गर्दछ ।।२४।। सौराष्ट्र देशको देवतापुरमा पापबाट भयभीत भई मैले ब्राह्मण र देवताको पूजा गर्दै नीतिपूर्वक राज्यसञ्चालन गरिरहेको थिएँ । तर हे अमोघ दृष्टि भएका मुनिराज ! मलाई थाहा छैन, कुन पापबाट अकस्मात् यस्तो घिनलाग्दो रोग आइलाग्यो। यो रोग अत्यन्त कष्टदायक छ र यसको अन्त हुने केही लक्षण छैन । यस्तो घिनलाग्दो अवस्थामा पुगेको मैले यस रोगको निराकरण गर्ने कुनै उपाय जान्न सकेको छैन। जति उपाय गरें, ती सारा व्यर्थ भए । यस बेला तपाईंजस्ता तपस्वी र सिद्धपुरुषको उपदेश नै मेरा निमित्त सफलतम उपाय हुनेछ। मेरो यही आकाङ्क्षा छ । हजुरको पवित्र आश्रममा रहेका जन्मजात द्वेष हुने प्राणीहरू पनि द्वेष छाडेर परस्परमा आनन्दका साथ क्रीडा गरिरहेका छन् । यस्तो पवित्र स्थानमा मेरो पनि रोगनिवारण हुनेछ भन्ने विश्वासका साथ म हजुरको शरणमा परेको छु ।।२५-२७।।

**सूतजीले भन्नुभयो**- राजाका यी कुरा सुनेपछि दयालु भृगु ऋषिले ध्यानपूर्वक तिनको विषयमा केहीबेर विचार गरेर हे सुव्रत! मेरो कुरा सुन्नुहोस् भनी आफ्ना कुरा राख्नुभयो ।।२८।।

**भृगुले भन्नुभयो**- हे राजा ! म तपाईंको रोगनिवारणका लागि उपाय बताउँछु । तपाईंले कुनै प्रकारको चिन्ता गर्नुपर्दैन। मेरो आश्रममा आएका प्राणीहरूले दुःखको अनुभव गर्दैनन्। हे उत्तम राजा ! जन्मान्तरमा गरेको जुन पापले आज तपाईं यस्तो डरलाग्दो र घिनलाग्दो अवस्थामा पुग्नुभएको छ, त्यस पापको विषयमा पनि म बताउने छु ।।२९-३०।।

कुर्वन्तु भोजनं सर्वे चिरकालं बुभुक्षिताः ।
वनाद् वनान्तरं याताः श्रान्ताः क्लान्तानना भृशम्।।३१।।

तपाईँहरू धेरै दिनसम्मको भोकले पीडित हुनुहुन्छ । एउटा वनबाट अर्को वनमा भौंतारिदा तपाईँहरू धेरै थाक्नुभएको छ, ओइलाउनुभएको छ, त्यस कारण अहिले भोजन गर्नुहोस् ।।३१।।

सूत उवाच

इत्युक्त्वा स्नापयामास सुतैलाभ्यङ्गपूर्वकम् ।
भोजयामास चान्नानि षड्रसानि त्वनेकशः ।।३२।।

बुभुजुस्तेऽपि विश्रान्ता भृगोरमिततेजसः ।
आज्ञया मुनिवर्यस्य सुस्नाताः सुष्ठ्वलङ्कृताः ।।३३।।

सुषुपुर्मृदुशय्यायां हित्वा चिन्तां दुरत्ययाम् ।
मुनिना कल्पितायां ते स्वराज्यङ्गमिता इव ।।३४।।

**सूतजीले भन्नुभयो** – यस्ता कुरा गरेपछि भृगु ऋषिले आफ्ना आश्रमका मानिसहरूद्वारा राजालाई उत्तम तेलले मालिश गराएर स्नान गर्न लगाए । त्यसपछि ६ प्रकारका रसले परिपूर्ण अनेक थरि मिष्टान्न र भोजन खुवाए ।।३२।। तिनीहरूले पनि आराम गरी अत्यन्त तेजस्वी भृगु ऋषिको आज्ञाअनुसार राम्रोसँग स्नान गरी राम्रा लुगा-गहनाहरू धारण गरेपछि भोजन गरे ।।३३।। भविष्यको पीडादायक चिन्तालाई छाडेर आनन्दपूर्वक भृगु ऋषिद्वारा आराम गर्न प्रदान गरिएको शय्यामा शयन गरे । त्यस बेला तिनीहरूले आफूले राज्य प्राप्त गरेसरह महान् सुखको अनुभव गरिरहेका थिए ।।३४।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे भृगोराश्रमागमनं नाम षष्ठोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'रानी र मन्त्रीहरूका साथ सोमकान्तको भृगु आश्रममा प्रवेश' शीर्षकान्वित छैठौं अध्याय पूर्ण भयो ।।६।।

ॐ

# सप्तमोऽध्याय:   { ७ अध्याय }

ऋषय ऊचु:

तत्र गत्वा किमकरोत् सोमकान्तो नृपस्तदा ।
उपाय: कथित: को वा भृगुणा सर्ववेदिना ।।१।।

कथयस्व कथामेतां शृण्वतां नो द्विजोत्तम ।
न तृप्तिमधिगच्छाम: पीत्वा त्वद्वचनामृतम् ।।२।।

सूत उवाच

सम्यक् पृष्टं महाभागा यूयं तु ज्ञानसागरा: ।
य: कथान्तं न प्रयाति श्रोता वक्ताऽथवा द्विजा: ।।३।।

लिख्यमानं वाचयति पुस्तकं हरतेऽपि वा ।
न पृच्छति च य: शिष्यो गुरु: पृष्टो न वक्ति चेत् ।।४।।

उभौ तौ मूकबधिरौ लोके दृष्टौ द्विजोत्तमा: ।
शृण्वन्तु कथयिष्यामि सोमकान्तकथामत: ।।५।।

तस्यां रात्र्यां व्यतीतायां दिननाथे तथोदिते ।
स्नानं सन्ध्यां जपं होमं कृत्वा स भृगुसत्तम: ।।६।।

स्नाताय कृतजप्याय पत्नीप्रकृतिसंयुजे ।
पूर्वजन्मकथां तस्मै राज्ञे कथितुमारभत् ।।७।।

भृगुरुवाच

कोह्लारनगरे रम्ये विन्ध्याचलसमीपत: ।
चिद्रूप इति विख्यातो वैश्यो बहुधनोऽभवत् ।।८।।

तस्य भार्या तु सुभगा नाम्ना ख्याता सुलोचना ।
सुशीला दानशीला च पतिवाक्यपरा सती ।।९।।

तस्यास्त्वं पुत्रतां यातो भवे पूर्वे नृपोत्तम ।
कामन्द इति ते नाम चक्रतुस्तौ द्विजेरितौ ।।१०।।

अतिस्नेहं दिवारात्रावतिलालनमेकके ।
वार्धक्यकालजे तौ तु पितरौ त्वयि चक्रतु: ।।११।।

**ऋषिहरूले भने –** हे सूतज्यू ! भृगु ऋषिको आश्रममा गएपछि सोमकान्त राजाले के गरे ? र सर्वज्ञ ऋषि भृगुले कस्तो उपाय बताए ?।।१।। हे सूतज्यू! हामी श्रद्धालु श्रोताहरूलाई अरू कथा सुनाउनुहोस् । हजुरका मुखबाट उपदेशामृत पान गरेर हामी कहिल्यै पनि अघाउँदैनौं ।।२।।

**सूतजीले भन्नुभयो-** हे भाग्यशाली ऋषिहरू! तपाईँहरू त स्वयं ज्ञानका सागर हुनुहुन्छ तापनि मलाई मान्यता दिएर राम्रो कुरा सोध्नुभयो । जुन श्रोता अथवा वक्ता कुनै कथा आरम्भ गरेर त्यसको अन्त्यमा पुग्दैन, जसले महत्त्वपूर्ण ग्रन्थ स्वयं लेखी पाठ गर्दैन अपितु अरूले मिहेनेत गरी लेखेको पुस्तक पाएमा मात्र वाचन गर्दछ, जसले पुस्तक चोर्ने काम गर्दछ, जुन शिष्यले गुरुलाई सोध्दैन र जुन गुरुले शिष्यले प्रश्न गर्दा उत्तर दिँदैन ती सबै लाटा र बहिरा हुने कुरा लोकमा देखिएको छ । हे मुनिहरू ! तपाईँहरूको जिज्ञासालाई आत्मसात् गरेर म सोमकान्तको कथा बताउँदैछु। तपाईँहरू आदरपूर्वक त्यो कथा सुन्नुहोस् ।।३-५।। त्यो रात बितेपछि अर्को दिन सूर्यनारायणको उदय भयो र भृगु ऋषिले स्नान, सन्ध्या, जप र होम सम्पन्न गरी स्नान र सन्ध्योपासनपछि आफ्नी पत्नी र अमात्यहरूका साथ रहेका राजा सोमकान्तलाई तिनकै पूर्वजन्मको कथा सुनाउन आरम्भ गर्नुभयो ।।६-७।।

**भृगुले भन्नुभयो -** विन्ध्याचल नजिकै रहेको रमणीय कोह्लार नगरमा अत्यन्त धनी चिद्रूपनामक वैश्य बस्दथे। तिनकी पत्नी सुलोचना अत्यन्त राम्री, सुशील, सुन्दर र दान गर्ने स्वभाव भएकी नारी थिइन् । तिनले आफ्ना पतिको आज्ञालाई कहिल्यै पनि उल्लङ्घन गर्दैनथिन् । हे राजा सोमकान्त ! तपाईं पूर्वजन्ममा तिनै सुलोचनाका छोरा भएर जन्मनुभएको थियो । ती वैश्य दम्पतीले ब्राह्मणबाट जुराएर तपाईंको नाम कामन्द राखेका थिए ।।८-१०।। वृद्धावस्थामा जन्मनुभएका एउटा मात्र छोरा हुनुभएका कारण तपाईंका माता-पिताले तपाईँप्रति अत्यन्त गहिरो स्नेह गरेका थिए ।।११।।

विवाहं चक्रतुस्तौ तु धनकौतुकमङ्गलैः ।
मृगाक्षी सुकुमाराङ्गी नाम्ना ख्याता कुटुम्बिनी ।।१२।।

अनुरक्ता त्वयि सदा द्विजदेवाऽतिथिप्रिया ।
बभूव योषिद् योषित्सु रत्नभूताऽतिसुन्दरी ।।१३।।

कुटुम्बिनीति स्वं नाम विदधे सार्थकं तु सा ।
सप्तपुत्रा पञ्चकन्या पञ्चबाणप्रिया नु किम् ।।१४।।

ततो बहुतिथे काले पञ्चत्वमगमत् पिता ।
माता तव सती तेन सह दग्धा दिवं गता ।।१५।।

ततस्त्वं सखिवर्गैस्तद् द्रव्यं नाशितवान् बहु ।
नीतं नष्टं भक्षितं च विनाशमगमद् धनम् ।।१६।।

चिन्तया धर्मपत्नी त्वां निराकृतवती भृशम् ।
न गृहीतं तु तद्वाक्यं ततो विक्रीतवान् गृहम् ।।१७।।

गता सा बालकैः सार्धमनुज्ञाता पितुर्गृहम् ।
अपत्यपोषणकृते ऋते त्वां वंशकण्टकम् ।।१८।।

तत उद्वृत्ततां यात उन्मत्त इव मद्यपः ।
अन्यायकारी नगरे जातो मत्त इव द्विपः ।।१९।।

परस्वहारो वनितासु जारो
ग्रामेषु चोरो जनतापकारः ।
द्यूतेषु वीरो वृजिनौघसारो
हिंसाविहारो बलहीनशूरः ।।२०।।

तपाईं युवावस्थामा पुगेपछि तपाईंका बाबु-आमा वैश्यदम्पतीले प्रशस्त धन खर्च गरेर ठूलो कौतुकका साथ मङ्गलोत्सव गर्दै विवाह गरिदिए। मृगका जस्ता आँखा भएकी कुटुम्बिनीनामक एउटी कोमलाङ्गी नारी तपाईंकी पत्नी भएर आइन् ।।१२।। तपाईंकी पत्नी कुटुम्बिनी तपाईंप्रति अनुरक्त थिइन् । तिनले श्रद्धा र प्रेमका साथ ब्राह्मण, देवता र अभ्यागतको सेवा - सत्कार गर्दथिन्। वास्तवमा ती सुन्दरी संसारका नारीरत्नहरूमा पनि उत्तम नारीरत्न थिइन् ।।१३।। तिनले सबैप्रति कुटुम्बको जस्तो व्यवहार गरेर आफ्नो कुटुम्बिनी भन्ने नामलाई सार्थक तुल्याएकी थिइन् । कामदेवकी पियारी रतिजस्ती राम्री ती कुटुम्बिनीले सात भाइ छोरा र पाँच बहिनी छोरी जन्माइन्।।१४।। छोराछोरी जन्मेका धेरै दिनपछि तपाईंका पिता दिवङ्गत भए। तपाईंकी आमा सुलोचना पनि पतिव्रता नारी भएका कारण आफ्ना पतिको चितामा जलेर दिवङ्गत भइन् ।।१५।। माता-पिताको मृत्युपछि तपाईं आफ्ना दुर्व्यसनी मित्रहरूका साथमा लागेर दुर्व्यसनमा फँस्नुभयो । तपाईंले आफ्ना बाबुको ठूलो सम्पत्ति र धनको नाश गर्नुभयो। तपाईंको धन चोरले हरे, श्रीसम्पत्ति नष्ट-भ्रष्ट भयो, तपाईं आफैले पनि दुरुपयोग गर्नुभयो। यसरी तपाईंका बुबाले आर्जेको असङ्ख्य धनराशि समाप्त भयो ।।१६।। तपाईंकी धर्मपत्नी कुटुम्बिनीले चिन्तित भएर तपाईंलाई पटक पटक त्यसो नगर्न अनुरोध गरिन् । परन्तु तपाईंले कुटुम्बिनीका कुरा कहिले पनि सुन्नुभएन। बरु आफ्ना बुबाको घर नै बेचिदिनुभयो ।।१७।। बालक-बालिकाका साथमा रहेकी बिचरी ती कुटुम्बिनी अनाथ भइन् । के खानु ? कहाँ जानु ? कहाँ बस्नु ? यस्ता प्रश्नहरू उनका सामु थिए । अन्तमा उपाय नभएर तपाईंसँग आज्ञा मागीकन उनी आफ्ना लालाबाला साथमा लिएर पिताको घरतर्फ लागिन् । बालबच्चाको पालनपोषणका लागि तपाईंजस्तो कुलकण्टकलाई छाडेर तिनले माइतको शरण लिनुभयो ।।१८।। त्यसपछि तपाईं चरित्रहीन हुनुभयो र मदिरापान गरेर पागलजस्तो हुने, अन्याय गर्ने, मत्त हात्तीझैं हुनुभयो।।१९।। तपाईंले परधनको अपहरण गर्नुभयो। परस्त्री र परपुत्रीहरूको धर्म लुट्नु भयो। गाउँ-गाउँमा चोरी र डकैती गराएर त्राहि-त्राहि मचाउनुभयो। तपाईंले जनताको कति अपकार गर्नुभयो त्यसको ठेगान रहेन। जूवा खेल्ने काममा

ये ये जनास्ते सुखसङ्गतृप्ता-
स्तेभ्यो गृहीत्वा बहुवित्तमाद: ।
निक्षेपत: पितृकृतात् सुहृद्भ्यो
मिषात् कुतश्चिन्नगरस्थितेभ्य: ।।२१।।

शपथाननृतांश्चकर्थ नून-
मनृतानां प्रमदाजनेषु साक्ष्यम् ।
इति सर्वजना: सुभीतिमापु-
रुरगात् सद्मगतादिवोग्रवीर्यात् ।।२२।।

असह्यतां तेन जनस्य यातो
गोक्षूरक: पायसगो यथैव ।
राज्ञो गृहीत्वाऽनुमतिं जनास्ते
निर्वापयामासुरतो पुरात् त्वाम् ।।२३।।

वने स्थितस्त्वं बहुजन्तुघाती
स्त्रीबालवृद्धान् विनिहंसि नित्यम् ।
महाजनं वीक्ष्य पलायसे च
सिंहं निरीक्ष्येव वृको मृगो वा ।।२४।।

मत्स्यान् बकान् सारसकुक्कुटाँश्च
वृकान् मृगान् वानरकोकिलाँश्च ।
हत्वाऽत्सि खड्गान् शशकाँश्च गोधा
मुधा स्वदेहं वृजिनादपोष: ।।२५।।

सिंहान् व्याघ्रांश्च जम्बूकान्नि:सार्य गिरिगह्वरात् ।
नानास्थानगतांश्चोरान् मेलयित्वा सुदुर्धरान् ।।२६।।

काष्ठैर्लोष्टैश्च पाषाणैश्चकर्थ गृहमुत्तमम् ।
विशालं क्रोशविस्तारं नानाकौतुकमण्डितम् ।।२७।।

पित्रा भीतेन पत्नी सा प्रापिता बालकै: सह ।
गुहागतं ते सदनं राजतो जनतोऽपि च ।।२८।।

आफूलाई वीर ठान्ने तपाईँ पापको पुञ्ज नै बन्नुभयो। हिंसासँग विहार गर्दै तपाईँले निर्बलसँग शून्याइँ देखाउनुभयो ।।२०।। जुन मानिसहरू तपाईँको सङ्गत पाएर रमाउँथे तिनीहरूबाट धेरै धनसम्पत्ति लिएर तपाईँले खाने-पिउने काम गर्नुभयो । कतिपय ठाउँमा तपाईँले पैतृक सम्पत्ति धितो राखेर पैसा ल्याई चलन गर्नुभयो । कतिपय आफ्ना मित्रहरूसँग गई अनेक निहुँ बनाएर पैसा ल्याउनुभयो। फेरि नगरका ठूला-बडा मानिसहरूकहाँ गएर पनि उधारो धन ल्याई त्यसको दुरुपयोग गर्नुभयो ।।२१।। तपाईँले झुटो शपथ खाने काम गर्नुहुन्थ्यो । असत्यभाषण गरेर सुन्दर युवतीहरूका नजिकमा गई भुट्टा मानिसहरूलाई साक्षी राखेर तिनीहरूसँग आहार-विहार र भोग गर्नुहुन्थ्यो । तपाईँको यस चरित्रबाट कोह्लार नगरका सबै मानिसहरू घरभित्र रहेको प्रचण्ड सर्पसँग डराए झैं डराउँथे ।।२२।। खीरमा ओदाने काँडो परेजस्तै तपाईँ पनि अरूका निमित्त असह्य हुनुभयो । त्यसपछि त्यहाँका जनताले राजासँग अनुमति लिएर तपाईँलाई कोह्लारपुरबाट टाढा भगाए ।।२३।। भागेर ज्यान जोगाउन वनमा पुगेका तपाईँले अनेक जीवजन्तुहरूको हत्या गर्नुका साथै बाटोमा हिँड्ने स्त्री, पुरुष, बालक र वृद्धहरूको पनि हत्या गर्नुभयो । त्यस बेला तपाईँ बाघलाई देखेर ब्वाँसो र मृग भागेजस्तै बलिया मानिस देखेपछि डरले भाग्नु हुन्थ्यो ।।२४।। तपाईँले भौंतारिने क्रममा माछा, बकुल्ला, सारस, कुखुरा, ब्वाँसो, मृग, बाँदर, कोइली, गैंडा, खरायो, गोहोरोजस्ता प्राणीहरूको पनि हत्या गरेर पापकर्मबाट शरीरको पोषण गर्नुभयो ।।२५।। तपाईँले पर्वतको गुफामा बस्ने सिंह, बाघ, स्यालजस्ता प्राणीलाई ढुङ्गाले हानेर गुफाबाट बाहिर निकाली मार्ने काम गर्नुभयो । अनेक ठाउँमा रहेका आफ्नोजस्तै स्वभाव भएका दुष्ट, चोर र डाकाहरूलाई एक ठाउँमा जम्मा गर्नुभयो । त्यसपछि तपाईँले पर्वतकै गुफाभित्र काठ, ढेला र ढुङ्गाद्वारा उत्तम, विशाल, एक कोशसम्म फैलिएको, अनेक आश्चर्यदायक विषयवस्तुले भरिएको घर बनाउनुभयो । तपाईँसँग र सामाजिक परम्परासँग डराएका तपाईँका ससुराले लाला-बालाहरूका साथ तपाईँकी पत्नीलाई त्यहाँ पुऱ्याए। तपाईँका छोरा-छोरीहरू उत्तम वस्त्र

नानालङ्कारवसना बालका अपि तेजसा ।
देवाङ्गनेव शुशुभे त्वं च चोरसमन्वितः ।।२९।।

त्वं च मार्गे जनान् दीनान् हत्वा हत्वा गुहाङ्गतः ।
चोरैः सबालयोषिद्भिर्भासि राजेव तद्गतः ।।३०।।

कदाचिद् ब्राह्मणो विद्वान् विख्यातो गुणवर्धनः ।
मध्याह्ने मार्गमध्ये तु त्वया दृष्टः स एककः ।।३१।।

गृहीत्वा दक्षिणं पाणिं तं विप्रं धृतवानसि ।
स वेपमानस्त्वद्बुद्धिं जानन् धर्षणया तया ।।३२।।

ऊचे त्वां स्वान्तकं मत्वा मूर्च्छितो जीवितेच्छया ।
अत्यन्तं करुणावाक्यैर्बोधयँस्त्वां सहेतुकैः ।।३३।।

गुणवर्धन उवाच

धनवान् सुभगो भूत्वा कथं मां हन्तुमिच्छसि ।
द्विजं नवोढाभर्तारं शान्तं चानपराधिनम् ।।३४।।

दुर्बुद्धिवासनां त्यक्त्वा सद्धर्मेषु मतिं कुरु ।
प्रथमा मे गता कान्ता प्राप्ता कान्ततरा परा ।।३५।।

स्वाचारा परमोदारा साध्वी सर्वगुणाकरा ।
पितृणामनृणार्थाय धर्मसन्तानवृद्धये ।।३६।।

कृता साऽतिप्रयत्नेन गार्हस्थं धर्ममिच्छता ।
मद्विना तद्विना वां हि जन्मनी भवतो वृथा ।।३७।।

पिता मे हि भव त्वञ्च माता पुत्रोऽस्म्यहं तव ।
जीवदाता भयत्राता पिता शास्त्रे निगद्यते ।।३८।।

र अलङ्कारले सुहाएका थिए र तपाईंकी पत्नी देवाङ्गनाझैं शोभायमान थिइन् । तपाईं भने चोर र डाँकाहरूका साथमा जीवनयापन गरिरहनुभएको थियो ।।२६-२९।। तपाईं बाटोमा हिंड्ने बटोहीहरूलाई लुट्ने र मार्ने काम गर्दै गुफामा गएर लुक्नु हुन्थ्यो । तपाईंसँगै स्त्री र बच्चाहरूका साथमा रहेका कतिपय चोरहरू रहने गर्दथे। तपाईं भने तिनकै राजासरह जीवन बिताइरहनु भएको थियो ।।३०।। कुनै दिन मध्याह्नमा एक जना विख्यात विद्वान् ब्राह्मण गुणवर्धन बाटामा हिंडिरहेका थिए । ती एक्लै थिए । तिनलाई देखेर तपाईंले आक्रमण गर्नुभयो। उनको दायाँ हात समातेर ल्याएर बाँध्नुभयो। बिचरा काँपिरहेका ती ब्राह्मणले तपाईंको व्यवहार देखेर डराई तपाईंलाई यमराज ठाने । तिनले अब मेरो अन्त हुन्छ भन्ने कुरा जानेर केही बेर मूर्च्छित भई होशमा आए र जीवनदानका लागि तपाईंसँग प्रार्थना गरे । अत्यन्त करुणामय वाक्य उच्चारण गरी तपाईंलाई उद्बोधन गर्दै भने ।।३१-३३।।

**गुणवर्धनले भने** - हे सज्जन ! तपाईं धनवान् र सुन्दर हुनुहुन्छ । म ब्राह्मण हुँ र भर्खर विवाह भएकी युवतीको पति पनि हुँ । म शान्त स्वभावको छु र मैले केही अपराध गरेको छैन । मलाई किन मार्दै हुनुहुन्छ ? ।।३४।। तसर्थ दुर्बुद्धिको भावना छाडेर धर्ममा बुद्धि लगाउनुहोस् । मेरी पहिली पत्नी दिवङ्गत भएकी हुन् । त्यसपछि मैले दोस्रो विवाह गरेको छु । ती भर्खरकी सुन्दरी युवती छन् । आफ्नो आचारमा निष्ठा राख्दछिन्। उदार हृदयकी छन्, पतिव्रता छन् र सबै गुणकी खानी पनि छन् । मैले त पितृऋण तिर्न, धर्मपूर्वक सन्तान वृद्धि गर्न र अत्यन्त उत्तम गृहस्थ जीवन बिताउनका लागि तिनीसँग विवाह गरेको हुँ । म उत्तम गृहस्थजीवन बिताउन चाहन्छु । यस बेला तपाईंले मलाई मारिदिनुभयो भने मविना उनको पनि जीवन व्यर्थ हुनेछ । तिनीलाई छाडेर जाने मेरो जीवन पनि व्यर्थ हुनेछ।।३५-३७।। हे सज्जन ! तपाईं मेरा पिता र मेरी दयालु माता पनि बन्नुहोस्। म तपाईंको पुत्र हुँ । किनकि शास्त्रहरूमा भयबाट मुक्ति दिलाउने र प्राण दिने मानिसलाई समेत पिता भनिएको छ।।३८।।

दस्यवोऽपि हि रक्षन्ति द्विजं वा शरणागतम् ।
द्विजं योग्यं शरण्यं मामतस्त्वं मोक्तुमर्हसि ।।३९।।

नो चेत् कल्पसहस्त्रं त्वं निरयान् प्रतिपद्यसे ।
भोक्तारः सर्व एवैते स्त्रीपुत्राः सुहृदो जनाः ।।४०।।

न पापभागिनस्त्वेते सुखिनस्त्वत्प्रतारकाः ।
कियद्भिर्जन्मभिः पापं मोक्ष्यसे न वितर्कये ।।४१।।

शरणमा आएका मानिस र ब्राह्मणको हत्या डाँकाहरूले पनि गर्दैनन् । म शरणमा आएको योग्य ब्राह्मण हुँ । तसर्थ तपाईंले मलाई छोडिदिनुहोस् ।।३९।। यसरी बिन्ती गर्दागर्दै पनि तपाईंले मलाई मार्नुभयो भने हजारौं कल्पसम्म नरकभोग गर्नुपर्नेछ। तपाईंले मलाई मारेर प्राप्त गरेको धन र पदार्थको भोग गर्ने तपाईंका स्त्री, पुत्र, मित्र र अरु सम्बन्धी मानिसहरू पापका फलभागी हुने छैनन् । तपाईंलाई ठग्ने ती त सुखी हुनेछन् । तर तपाईंभने कति जन्मको प्रयासबाट पापमुक्त हुनुहुनेछ त्यो म भन्न सक्दिनँ ।।४०-४१।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे सोमकान्तपूर्वजन्मकथनं नाम सप्तमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनुदित श्रीगणेशपुराण उपासनाखण्डको 'भृगुद्वारा सोमकान्तको पूर्वजन्मकथन' शीर्षकान्वित सातौं अध्याय पूर्ण भयो ।।७।।

ॐ

## अष्टमोऽध्यायः　　{ ८ अध्याय }

भृगुरुवाच

इति तेनोदितं वाक्यं मुहुर्ग्लानिं प्रकुर्वतः ।
करुणायुतमाकर्ण्य नोद्भिन्नं हृदयं तव ।।१।।

वज्रात् सारतरं किन्नु ब्रह्मणा त्वयि निर्मितम् ।
हिंसनाद् बहुजन्तूनां मनुष्याणां सहस्रशः ।।२।।

अतिनिष्ठुरतां प्राप्तं कृतघ्नस्येव मानसम् ।
अवोचस्त्वं ततस्तन्तु कृतान्त इव निष्ठुरः ।।३।।

चोर उवाच

किं ते वाक्यचयैर्विप्र ! वृथा मयि नियोजितैः ।
अश्रोतरि च पाण्डित्यं न्युब्जकुम्भे यथा जलम् ।।४।।

क्वेयं मम मतिर्मूढ ! क्वोपदेशस्तवाप्ययम् ।
तत्त्वचिन्तेव मधुपे साम्प्रतं मे न रोचते ।।५।।

अर्थासक्तस्य न क्वापि पितृबन्धुविचारणा ।
यथा कामातुरस्यापि न भीतिर्ह्रीश्च विद्यते ।।६।।

शुद्धिः काके द्यूतकारे सत्यं धैर्यं नपुंसके ।
कामशान्तिः स्त्रियां सर्पे क्षमा दृष्टा त्वया नु किम्।।७।।

अन्तिके त्वं निसृष्टोऽसि व्यापाररहितस्य मे ।
विधात्रा दैवयोगेन न त्वां मुञ्चामि कर्हिचित् ।।८।।

भृगुरुवाच

इत्युक्त्वा निशितं खड्गं हस्त आदाय दक्षिणे ।
चकर्ताऽथ शिरस्तस्य बिडाल इव मौषकम् ।।९।।

एवं ते ब्रह्महत्यानां सङ्ख्यां कर्तुं न शक्यते ।
स्त्रीबालवृद्धजन्तूनां हत्यानाञ्च विशेषतः ।।१०।।

**भृगुले भन्नुभयो -** ब्राह्मणले भनेका ती कारुणिक कुरा सुनेर पटक पटक ग्लानिको अनुभव गरेता पनि तपाईँको हृदयमा कुनै असर परेन ।।१।। ब्रह्माजीले तपाईँको मन वज्रभन्दा पनि कठोर बनाएजस्तो लाग्दथ्यो । त्यो धेरै जन्तुहरूको हत्या गर्नाले अति निष्ठुर भएजस्तो र कृतघ्न मानिसको जस्तो ज्यादै मलिन थियो । त्यस कारण जीवनको याचना गरिरहेका ती ब्राह्मणप्रति यमराजसमान निष्ठुर भएर चोररूपमा रहेका तपाईँले भन्नुभयो ।।२-३।।

**चोरले भन्यो -** हे ब्राह्मण ! जसरी सावधानीपूर्वक कुरासमेत सुन्न नचाहने मानिसलाई पण्डित्याइँ देखाउनु व्यर्थ हुन्छ । जसरी उल्ट्याएर राखिएको गाग्रामाथि पानी खन्याउनु व्यर्थ हुन्छ । जसरी मदिरापान गर्ने मानिसका सामु गरिएको तत्त्वचिन्ता व्यर्थ हुन्छ, त्यसरी नै मेरा निमित्त प्रयोग गरिएका तपाईँका वचनहरू व्यर्थ छन् । म जस्तो कठोर मानिसको बुद्धि कहाँ ? तपाईँको यो उपदेश कहाँ ? यिनको तुलना नै हुन सक्दैन । यस कारण मलाई तपाईँको यो उपदेश मन परेको छैन ।।४-५।।

धनार्जनलाई सर्वोपरि महत्त्व दिने मानिसले कहिले पनि यी मेरा माता-पिता हुन् र यी मेरा बन्धु हुन् भन्दैन । कामातुर मानिसले पनि निन्दनीय कर्म गर्न डर र लाज मान्दैन ।।६।। के तपाईँले कौवामा पवित्रता, जुवाडे मानिसमा सत्य, नपुंसकमा धैर्य, नारी जातिमा कामसन्तुष्टि र सर्पमा सहनशीलता देख्नुभएको छ ? ।।७।। उद्योगधन्दा केही नभएको र चोरी गरेर पेट पाल्ने मेरा सामु विधाताले तपाईँलाई पठाएका छन्। दैवयोगबाट प्राप्त भएका तपाईँलाई मैले कुनै हालतमा पनि छाड्न सक्दिनँ।।८।।

**भृगुले भन्नुभयो-** हे राजन् ! यसरी उत्तर दिएर चोरका रूपमा रहनुभएका तपाईँले दायाँ हातमा तीखो धार भएको तरवार लिएर बिरालाले मूसाको टाउको चोइट्याएझैं ती ब्राह्मणको शिर टुक्र्याउनु भयो ।।९।। यसरी हेर्दा तपाईँले पूर्वजन्ममा गरेका ब्रह्महत्याहरूको गणना गर्न सकिँदैन । खास गरी स्त्रीहत्या, बालहत्या र जीवहत्याको गणना गर्न त झनै सकिँदैन ।।१०।।

सङ्ख्याता परपापानां विभागी जायते यतः ।
ततो बहुतिथे काले गते कामन्द ! ते जरा ।।११।।

आगताऽथ कफो ग्लानिः स्वेदो हिक्काऽथ वेपथुः ।
अभूत् तन्द्री चोपविष्टे प्रसुप्ते न च साऽभवत् ।।१२।।

अनादरञ्च चक्रुस्ते पुत्रा दास्योऽथ सेवकाः ।
सुहृदश्च सुताश्चापि नप्तारोऽथापि मित्रकाः ।।१३।।

एक एवाऽभवत् तत्र दृष्ट आप्तो रहस्यकृत् ।
अनिवार्यगतिर्विप्रः स चापि प्रेषितस्त्वया ।।१४।।

आकारयितुं सर्वांस्तान् मुनीन् काननवासिनः ।
ते चापि त्वद्भयादेव द्विजवाक्यात् समागताः ।।१५।।

अब्रवीस्तान् नमस्कृत्य मत्तो दानानि गृह्यताम् ।
तेऽब्रुवन् न च गृह्णीमो दानानि पतितस्य ते ।।१६।।

याजनाध्यापनाद् यौनात् सम्बन्धाद् भाषणादपि ।
परं सञ्चरते पापं सहयानासनाशनात् ।।१७।।

इति ते भाषमाणास्त्वां गत्वा च निजमाश्रमम् ।
सस्नुः सचैलं सर्वेऽपि पावमानीस्ततोऽजपन् ।।१८।।

ततोऽनुतापो मनसि जातः कामन्द ! ते भृशम् ।
आमयात् स्वजनैस्त्यागाद् ब्राह्मणैः परिवर्जनात् ।।१९।।

जीर्णदेवालयोद्धारेऽभवत्ते मतिरूर्जिता ।
धनं स्वं विपुलं वीक्ष्य कुप्यरत्नादिसंयुतम् ।।२०।।

ततोऽनादिः परामूर्तिर्गणेशस्य वने शुभा ।
जीर्णदेवालये क्षुद्रे स्थिता ते कथिता द्विजैः ।।२१।।

अरूले गरेका पापकर्मको चर्चा अथवा गणना गर्ने मानिसले त्यो पापको फलभोगमा भागिदार हुनुपर्छ भन्ने शास्त्रीय मान्यता रहेको छ । त्यस कारण पनि तपाईंले गरेका पापकर्मको म चर्चा गर्न चाहन्नँ। हे तत्कालीन कामन्द र अहिलेका सोमकान्त! तपाईंलाई त्यसपछि वृद्धावस्थाले आक्रमण गऱ्यो । कफ, ग्लानि, पसिना, बाडुली र कम्पनजस्ता वृद्धावस्थामा हुने दोषहरू पनि तपाईंमा आइलागे । बसेको बेला उँघ लाग्ने र सुतेका बेला उँघ नलाग्ने स्थिति भयो । तपाईंका छोरा-छोरी, दास-दासी, नाति-नातिनी, मित्र र शुभचिन्तकहरूले पनि तपाईंको अनादर गर्न थाले ।।।११-१३।। तपाईंको सम्मान गर्ने, आज्ञाकारी र गोप्यरूपमा सेवा गर्ने एक जना अनिवार्यगति नामक ब्राह्मण थिए, तिनलाई पनि तपाईंले वनवासी सबै मुनिहरूलाई बोलाउन भनी खटाउनुभयो । ती मुनिहरू पनि ब्राह्मणबाट सन्देश पाएपछि नजाने हो भने कामन्दले मारिदिन्छ भन्ने डरले छिटै तपाईंका समीपमा आए।।१४-१५।। त्यस बेला तपाईंले ती ब्राह्मणहरूलाई प्रणाम गरेर भन्नुभयो - हे मुनिहरू ! म दान गर्न चाहन्छु । तपाईंहरूले मेरो दान स्वीकार गर्नुहोस् । ती मुनिहरूले तपाईंका कुरा सुनेपछि - तिमी जस्ता पतित व्यक्तिले दिएको दान हामी लिंदैनौं भनेका थिए ।।१६।। यज्ञकर्म, अध्यापन, यौन सम्पर्क, मैत्री आदि सम्बन्ध, परस्पर संवाद, सहयात्रा, सहासन र सहभोजनबाट पनि यौटाले गरेको पाप अर्कोमा सर्दछ ।।१७।। यसरी तपाईंलाई आफ्नो राय सुनाएर ती मुनिहरू आ-आफ्ना आश्रमतर्फ लागे। त्यहाँ गई तिनीहरूले पतितसँग कुराकानी गरेका कारण लागेको पापदेखि मुक्त हुन सचैल स्नान गरी पावमानी सूक्तको जप गरे ।।१८।। हे सोमकान्त ! अथवा पूर्वजन्मका हे कामन्द ! त्यो घटनापछि वृद्धावस्थाजनित रोगबाट पीडित हुनाले, आफन्तहरूले छोडिदिनाले र तपस्वी ब्राह्मणहरूले पतितका हातबाट गरिएको दान लिंदैनौं भनी तिरस्कारपूर्वक वर्जना गर्नाले तपाईंलाई मनमा साह्रै पछुतो लाग्यो र तीव्र वेदनाको अनुभव पनि गर्नुभयो।।१९।। त्यसपछि आफूसँग धातु, उपधातु र रत्न आदि सहित धेरै धन भएको जानेर तपाईंको बुद्धि जीर्ण मन्दिरको उद्धारकार्यमा प्रवृत्त भयो ।।२०।। त्यसपछि केही ब्राह्मणहरूले तपाईंलाई वनमा रहेको सानो र जीर्ण मन्दिरमा श्रीगणेश भगवान्‌को मङ्गलमय

ततोऽतिविस्तृतं दीर्घं चतुस्तोरणसंयुतम् ।
चतुर्द्वारं सुरुचिरं चतुःशिखरशोभितम् ।।२२।।

नानास्तम्भचितं नानावेदिभिः परिवारितम् ।
मुक्ताप्रवालरत्नाद्यैः खचितं रुचिराङ्गणम् ।।२३।।

नानापुष्पद्रुमयुतं नानाफलद्रुमैश्रितम् ।
चतुर्दिक्षु चारुवारिमयवापीविराजितम् ।।२४।।

प्रासादं निर्मितवतस्तद् द्रव्यं ते व्ययं गतम् ।
किञ्चित् स्त्रिया च पुत्रैश्च सुहृद्भिर्बन्धुभिर्हृतम् ।।२५।।

ततो नातिचिरे काले पञ्चत्वञ्च गतो भवान् ।
याम्यदूतैः कशाघातैर्बद्धः सन्ताडितो भृशम् ।।२६।।

कण्टकैर्विद्धसर्वाङ्गः शिलायां पोथितोऽपि च ।
मज्जितो नरके घोरे पूयशोणितकर्दमे ।।२७।।

एवं नीतस्तु तैर्दूतैश्चित्रगुप्तयमान्तिके ।
यमेन पृष्टः किं पुण्यमुत भोक्ष्यसि पातकम् ।।२८।।

त्वमवोचः पुण्यमहं पूर्वं भोक्ष्यामि सूर्यज !
ततः सौराष्ट्रदेशे त्वं राजत्वेन विनिर्मितः ।।२९।।

इति ते कथितं पूर्वजन्म पापकरं मया ।
शरणागतकारुण्यात् तपोबलसमाश्रयात् ।।३०।।

कान्तप्रासादकरणात् सोमकान्तोऽभवो नृपः ।
कान्तया कान्ततरया भासि कान्त्या शशी यथा ।।३१।।

सूत उवाच

भृगुणाऽभिहितं श्रुत्वा सोमकान्तो नृपाधमः ।
तद्वाक्ये संशयापन्न आसीदश्मेव निष्क्रियः ।।३२।।

अनादि उच्चकोटिको मूर्ति रहेको समाचार सुनाए ।।२१।। त्यो कुरा सुनेर तपाईंले त्यस वनमा गई मन्दिरमा रहेको श्रीगणेशको मूर्ति देखेपछि त्यहाँ लम्बाइ र चौडाइ दुवै दृष्टिबाट फैलिएको विशाल, चार तोरण भएको, चार ढोका भएको, चार बुर्जा भएको, अनेक स्तम्भहरूले खचित, अनेक मण्डपहरूले शोभायमान, मोती–मुँगा आदिबाट खचित, सुन्दर प्राङ्गण भएको, अनेक फूलका वृक्षले घेरिएको, अनेक फलका वृक्षले शोभायमान र चारै दिशामा सुन्दर सङ्लो पानी भएका पोखरीले सुहाएको भव्य श्रीगणेशको मन्दिर बनाउनुभयो । उक्त मन्दिरको निर्माण गर्दा तपाईंसँग रहेको सम्पूर्ण धन खर्च भयो । त्योभन्दा पहिले तपाईंको धेरै धन वेश्या, मित्र र बन्धुहरूले अनेक निहुँमा तपाईंसँग लिएर खर्च गरिसकेका थिए ।।२२–२५।। मन्दिरनिर्माणपछि केही समय नबित्दै तपाईंको देहावसान भयो । तपाईंलाई यमदूतहरूले बाँधी धेरै कालसम्म दण्डप्रहार गरे । काँडाको घारीमा पर्याकिर अङ्ग–प्रत्यङ्गमा घाउ–घाउ बनाए । ढुङ्गामाथि तपाईंलाई पछारे। त्यसपछि पीप र रगतको हिलोले भरिएको नरकमा लगेर डुबाए । यस्तै धेरै किसिमका यातना दिएपछि यमदूतहरूले तपाईंलाई चित्रगुप्त र यमको नजिकमा पुऱ्याए। त्यस बेला यमराजले पहिले पुण्यको फल भोग्न चाहन्छौ अथवा पापको फल भनी सोधेका थिए ।।२६–२८।। यमराजले त्यसरी सोधेपछि तपाईंले भन्नुभयो – हे धर्मराज! म सर्वप्रथम पुण्यको फल भोग्न चाहन्छु । त्यसपछि तपाईं सौराष्ट्र देशको राजा सोमकान्तको रूपमा पैदा हुनुभयो ।।२९।। शरणमा आएका तपाईंमाथि दया लागेर मैले आफ्नो तपस्याको सामर्थ्यबाट तपाईंको पापमय पूर्वजन्मको बयान गरें । श्रीगणेशको अत्यन्त सुन्दर एवं भव्य मन्दिर बनाएका कारण तपाईंको नाम सोमकान्त रह्यो । त्यस पुण्यका कारण तपाईंले अत्यन्त सुन्दर महारानी सुधर्माद्वारा शोभायमान हुने अवसर पनि पाउनुभयो।।३०–३१।।

**सूतजीले भन्नुभयो** – भृगुले बताएका कुरा सुनेर अधम राजा सोमकान्तलाई ती कुराहरूमा सन्देह भयो र उनी ढुङ्गाझैं निश्चल अवस्थामा रहे ।।३२।। वेद र शास्त्रका अर्थ जान्ने वर्तमान, भूत र भविष्यका घटनालाई आँखाले

वेदशास्त्रार्थविदुषो भूतभाविभवद्विद: ।
तपस्विनो भृगोर्वाक्ये यत: स संशयं दधौ ।।३३।।

निरगन् क्षणमात्रेण तस्याङ्गात् पक्षिणो भृशम् ।
नानावर्णाकृतिधरा बभक्षुर्नृपतिं तदा ।।३४।।

उड्डीयोड्डीयचञ्च्वग्रैर्ददंशुर्नृपशुं दृढै: ।
उत्कृत्योत्कृत्य मांसानि जक्षुस्ते मुनिसन्निधौ ।।३५।।

ततोऽतिदु:खिततनु: शरणं पुनरागत: ।
अवदद् दीनया वाचा भृगुं ज्ञानतपोनिधिम् ।।३६।।

राजोवाच

त्वद्वने जातिवैराणां परस्परभयं न हि ।
त्वत्समक्षं कथमिमे मृतं मां मारयन्ति च ।।३७।।

त्वत्पादप्रवणं दीनं सकुष्ठं शरणागतम् ।
इदानीं मोचय मुने सर्वसत्त्वाभयङ्कर ।।३८।।

सूत उवाच

इत्युक्त: पुनरप्याह भृगुस्तं दीनवत्सल: ।
मद्वाक्यसंशयादित्थमनुभूतं नृप ! त्वया ।।३९।।

प्रतीकारं वदिष्यामि स्वस्थो भव क्षणं नृप ।
मम हुङ्कारमात्रेण गमिष्यन्ति द्विजा इमे ।।४०।।

सूत उवाच

द्विजस्य हुङ्कृतिं श्रुत्वा द्विजाश्चान्तर्हितास्तदा ।
तुतोष नृपतिश्चापि पत्न्यमात्यसमन्वित: ।।४१।।

देखेझैं बताउने तपस्वी भृगु ऋषिका कुरामा राजा सोमकान्तले सन्देह प्रकट गरेका कारण तत्काल तिनका अङ्ग - प्रत्यङ्गबाट अनेक वर्ण र आकारका चराहरू निस्कन थाले । यसरी निस्किएका ती चराहरूले नरपशु राजाको शरीरलाई लुछ्न र खान लागे ।।३२-३४।। उड्दै - उड्दै आएर झम्टिने ती चराहरूले आफ्ना बलिया ठोँडको चुच्चाबाट टोक्न थाले र शरीरको मासु चोक्ट्याएर भृगु मुनिका सामु खान थाले ।।३५।। त्यसपछि सर्वाङ्गमा भएको वेदनाले आत्तिएका ती राजा सोमकान्त फेरि ज्ञान र तपका सागर भृगुका चरणमा शरणागत भएर दीनवचनद्वारा निवेदन गर्न लागे ।।३६।।

**राजाले भने -** हे महामुनि ! तपाईँको यो आश्रम र यसको सेरोफेरोमा रहेका वनमा जन्मजात वैरी प्राणीहरू पनि परस्पर मिलेर रहेका छन् । तिनीहरूमा कोही-कसैसँग डराउँदैन तर यी चराहरूले तपाईँकै सामु कुकर्मले ज्यूँदै मरेको मानिसलाई किन मारिरहेका छन् ? हे मुनिवर ! म तपाईँको पाउमा परेको छु, दीन-हीन छु, कुष्ठरोगले गलेको छु र अहिले आत्मरक्षाका लागि तपाईँको शरणमा आएको छु । सबै प्राणीहरूको कल्याण गर्ने र डर-त्रासबाट रक्षा गर्ने स्वभाव भएका हे मुनिवर ! अहिले यो भयङ्कर आक्रमणबाट मेरो रक्षा गर्नुहोस् ।।३७-३८।।

**सूतजीले भन्नुभयो -** रक्षाका लागि आर्तपुकार गरिरहेका राजा सोमकान्तद्वारा प्रार्थित दीनवत्सल महर्षि भृगुले भन्नुभयो - हे राजा ! मेरो वाक्यमा सन्देह गरेका कारण तपाईँले यसरी पक्षीहरूको आक्रमण भोग्नुपर्‍यो । म यिनबाट मुक्त हुने उपाय बताउँछु । तपाईँ निश्चिन्त हुनुहोस् । मेरो हुँकारमात्रबाट यी सबै चराहरू यहाँबाट भाग्ने छन् ।।३९-४०।।

**सूतजीले भन्नुभयो -** त्यसपछि भृगु ऋषिको हुँकार सुनेर ती चराहरू अलप भए । पत्नी र मन्त्रीहरूका साथमा रहेका ती राजा सोमकान्त पनि सन्तुष्ट भए ।।४१।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे नानापक्षिनिवारणं नामाष्टमोऽध्याय:**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सोमकान्तद्वारा निरूपित पूर्वजन्मकथाप्रति सन्दिग्ध सोमकान्तमाथि पक्षीहरूको आक्रमण' शीर्षकान्वित आठौं अध्याय पूर्ण भयो ।।८।।

ॐ

## नवमोऽध्यायः { ९ अध्याय }

सूत उवाच
ततो भृगुः क्षणं ध्यात्वा पुनस्तं प्राह भूपतिम् ।
अत्यन्तविह्वलो दुःखं वीक्ष्य तत्पूर्वकर्मजम् ।।१।।

क्व पापनिकरास्ते तु क्वोपायाः कथिता मया ।
तथाप्येकं ब्रवीमि त्वामुपायमघनाशनम् ।।२।।

गणेशस्य पुराणं त्वं श्रोष्यसे यदि सत्वरम् ।
तदैव मोक्ष्यसे दुःखसागरान् नात्र संशयः ।।३।।

इत्युक्त्वा तं गणेशस्य नामाष्टशतमुत्तमम् ।
जप्त्वा जलं मन्त्रयित्वा सिषेच नृपतिं तदा ।।४।।

सिक्तमात्रे जले तेन तत्रासारन्ध्रतो लघुः ।
कृष्णास्यः प्राप तद्भूमौ ववृधे तत्क्षणादसौ ।।५।।

सप्ततालप्रमाणोऽभूद् व्यादितास्यो भयङ्करः ।
करालजिह्वो रक्ताक्षो दीर्घबाहुर्जटाधरः ।।६।।

मुखादुरु वमन्नग्निं क्षणाच्च पूयशोणिते ।
नेत्राणामन्धतां कुर्वन्नन्धकार इवापरः ।।७।।

आलोक्य दुद्रुवुः सर्वे तदाश्रमनिवासिनः ।
दंष्ट्रारावैर्दशदिशः पूरयन्तं तमद्भुतम् ।।८।।

अपृच्छत् तं द्विजवरस्तत्समक्षं तु पूरुषम् ।
विद्वानपीति कोऽसि त्वं नाम ते किं वदस्व मे ।।९।।

प्रत्युवाच मुनिं तं तु परिपृष्टो द्विजेन सः ।
प्राणिमात्रशरीरस्थो नाम्नाऽहं पापपूरुषः ।।१०।।

त्वन्मन्त्रजलपातेन निःसृतो राजदेहतः ।
क्षुधातुरो भक्ष्यमीहे देहि मह्यं न चेत् तदा ।।११।।

भक्षयिष्ये मुने ! लोकान् सोमकान्तं तवाग्रतः ।
वद मे वसतिं रम्यामितो निःसारितस्य च ।।१२।।

**सूतजीले भन्नुभयो -** त्यसपछि राजा सोमकान्तको जन्मान्तरजनित पापबाट उत्पन्न भएको दुःख देखेर व्याकुल भृगु ऋषिले केहीबेर ध्यान गरी सोमकान्तका प्रति भने - हे राजा ! तपाईंबाट गरिएका ती भयङ्कर पाप कहाँ ? मैले बताएका उपाय कहाँ ? तापनि तपाईंको पाप नाश गर्ने एउटा उपाय बताउँछु. ।।१-२।। तपाईंले छिटै श्रीगणेशपुराणको श्रवण गर्नुभयो भने तत्काल दुःखको समुद्रबाट मुक्त हुनुहुनेछ, यस कुरामा सन्देह छैन ।।३।। यसो भनेर भृगु ऋषिले श्रीगणेशका १०८ नाम जपी जललाई अभिमन्त्रित गरेर सोमकान्तको शरीरमा सेचन गरे ।।४।। भृगुले सोमकान्तको शरीरमा जल सेचन गरिसकेपछि सोमकान्तको नाकको प्वालबाट सानो आकार र कालो अनुहार भएको एउटा प्राणी पैदा भयो र तुरुन्तै त्यसको शरीर बढ्न थाल्यो ।।५।। शरीर बढ्दै जाँदा त्यो प्राणी सातवटा ताडीवृक्षसमान अग्लो भयो । फैलिएको मुख, डरलाग्दो जिब्रो, राता आँखा, लामा हात, शिरमा डरलाग्दो जटा यस्तो आकार-प्रकार भएको, मुखबाट अग्निको ज्वाला, पीप र रगत बमन गर्दै दर्शकका आँखालाई अन्धकारमा पुऱ्याउने त्यो कालो वर्णको प्राणीलाई देखेर आश्रमवासी सबै मानिसहरू डराएर बताउति भाग्न थाले । घोर दाह्रा बजाएर भयङ्कर आवाजले दसै दिशा भर्ने त्यस अद्भुत प्राणीसँग विद्या र तपस्याको बलबाट सबै कुरा जानेता पनि नजानेझैं गरी विद्वान् भृगुले तिमी को हौ? तिम्रो नाम के हो ? मलाई भन भनी सोधे ।।६-९।। भृगुद्वारा सोधिएको त्यस प्राणीले भन्यो- हे ऋषि ! प्राणीमात्रको शरीरमा रहने म पापपुरुषका नामबाट चिनिन्छु । तपाईंले श्रीगणेशका मन्त्रले अभिमन्त्रित गरेर जलले सेचन गरेपछि राजा सोमकान्तको शरीरबाट म बाहिर आएको छु । मलाई भोक लागेको छ, केही खानेकुरा दिनुहोस् । अन्यथा मैले भर्खरै यी सबै मानिस र यो सोमकान्तलाई तपाईंकै सामु खानेछु । तपाईंले बाहिर निकाल्नुभयो, अब मलाई बस्ने ठाउँको खाँचो छ । त्यो ठाउँ पनि बताउनुहोस् ।।१०-१२।। त्यसपछि बाहिर

ततस्तु बहिरभ्येत्य तमुवाच मुनिः पुनः ।
अस्मिन् रसाले सरले विरसे वस कोटरे ।।१३।।

गलितानि च पत्राणि भक्षयस्व ममाज्ञया ।
नो चेत् त्वां भस्मसात् कुर्यां नानृतं मे वचोऽधम ।।१४।।

सूत उवाच

इति तन्मुनिवाक्यान्ते शुष्कं स वृक्षमस्पृशत् ।
भस्मसादभवद् वृक्षो द्विजास्तत्स्पर्शमात्रतः ।।१५।।

मुनेः सन्दर्शनाद्भीतस्तस्मिन् भस्मन्यलीयत ।
तस्मिन् विलीने स मुनिः सोमकान्तं पुनर्जगौ ।।१६।।

भृगुरुवाच

पुराणश्रवणाद् यत्ते जातं पुण्यं नृपोत्तम ।
अयं यावच्च्यूततरुरत्र चोत्तिष्ठते पुनः ।।१७।।

तावत्संपादयास्मिंस्तद्भस्मन्येव दिने दिने ।
विवृद्धेऽस्मिंस्तरौ राजन्निष्पापस्त्वं भविष्यसि ।।१८।।

राजोवाच

गणेशस्य पुराणं यन्नदृष्टं न च वै श्रुतम् ।
कुत्र तल्लभ्यते ब्रह्मन् ! व्याकर्ता तस्य वा मुने ।।१९।।

मुनिरुवाच

ब्रह्मणा कथितं पूर्वं वेदव्यासाय धीमते ।
व्यासाच्च विदितं मह्यं पुराणं पापनाशनम् ।।२०।।

अहं ते च प्रवक्ष्यामि तीर्थे स्नानं समाचर ।
श्रोष्ये पुराणमिति च सङ्कल्पं कुरु सुव्रत ।।२१।।

सूत उवाच

भृगुणा नोदितः स्नात्वा भृगुतीर्थेति विश्रुते ।
सोमकान्तो मुदायुक्तस्ततः सङ्कल्पमाचरत् ।।२२।।

गणेशस्य पुराणं यत् तच्छ्रोष्येऽद्य प्रभृत्यहम् ।
सङ्कल्पमात्रे तु कृते बभौ राजा निरामयः ।।२३।।

आएर भृगुले पापपुरुषलाई भने – यो सुक्न लागेको आँपको रूख छ, यसको टोड्कामा तिमी बस । यस रूखबाट भुइँमा झरेका सुकेका पात खाएर निर्वाह गर । यो मेरो आज्ञा हो । अन्यथा मैले तिमीलाई तपोबलबाट खरानी बनाउने छु । हे अधम पुरुष ! मेरो वचन मिथ्या हुँदैन ।।१३-१४।।

**सूतजीले भन्नुभयो**- हे मुनिजन ! भृगुऋषिले भनेका वचन सुनेर पापपुरुषले त्यस सुकेको आँपको रूखलाई स्पर्श गऱ्यो। स्पर्श गर्नासाथ त्यो रूख खरानी भयो। त्यो पापपुरुष भृगु ऋषिसँग डराएर त्यसै खरानीमा लीन भयो। पापपुरुष खरानीमा लीन भएपछि भृगुले सोमकान्तलाई भन्नुभयो ।।१५-१६।।

**भृगुले भन्नुभयो** - हे राजन् ! तपाईंले श्रीगणेशको पुराण सुनेपछि त्यसबाट जुन पुण्य पैदा हुन्छ त्यो पुण्य जबसम्म भुइँमा खरानीका रूपमा रहेको रूख जस्ताको तस्तै हुँदैन, तबसम्म दिनदिनै समर्पण गरिरहनु पर्दछ । यो वृक्ष बढेर फलफूलले भरिभराउ भएपछि तपाईं पापबाट मुक्त हुनुहुनेछ ।।१७-१८।।

**राजाले भने** - हे मुनिराज ! मैले श्रीगणेशपुराणको नाम सुनेको थिइनँ, देख्ने कुरै भएन । त्यो पुराण कहाँ पाइन्छ र त्यसलाई राम्ररी व्याख्या गरी सुनाउने विद्वान् को छन् र कहाँ पाइन्छन् ?।।१९।।

**भृगुले भन्नुभयो** – सर्वप्रथम ब्रह्माजीले बुद्धिमान् र विद्वान् आफ्ना छोरा व्यासलाई श्रीगणेशपुराण सुनाउनुभएको थियो । पापनाश गर्नमा अमोघ उपाय बनेको यो श्रीगणेशपुराण व्यासबाट सुनेको हुँ । म तपाईंलाई श्रीगणेशपुराण सुनाउने छु । भृगु तीर्थमा गएर स्नान गर्नुहोस् र म आजदेखि श्रीगणेशपुराण सुन्नेछु भन्ने सङ्कल्प पनि गर्नुहोस् ।।२०-२१।।

**सूतजीले भन्नुभयो** - भृगुद्वारा अभिप्रेरित एवं प्रसन्न राजा सोमकान्तले भृगुतीर्थमा नुहाएर म आजदेखि दिनदिनै श्रीगणेशपुराण सुन्नेछु भन्ने सङ्कल्प गरे । सङ्कल्पमात्र गर्नाले रगत नभएका ती राजा कृमि हीन एवं घाउ-खटिरा र कोराले परिपूर्ण शरीरको सट्टा सफा, सुन्दर शरीरले शोभायमान पनि भए। त्यसपछि चकित र हर्षित भएका राजालाई साथ लिएर

भृगुप्रसादान्नीरक्तः कृमिक्षतविसर्जितः ।
गृहीत्वा तं भृगुरगाद्विस्मितं हर्षितं नृपम् ।।२४।।

उपविश्यासने स्वीयेऽदापयत्तस्य चासनम् ।
उपविष्टो बभाषे तं दिव्यकान्तिर्नृपोत्तमः ।।२५।।

राजोवाच

भवत् प्रसादात्सकला गरिष्ठा
सङ्कल्पमात्रेण गता व्यथा मे ।
आश्चर्यभूतं सकलं वदस्व
पुराणमेतद् द्विरदाननस्य ।।२६।।

भृगुरुवाच

शृणुष्वावहितो भूत्वा तत्पुराणं वदाम्यहम् ।
अनन्तपुण्यनिचयैर्यस्य श्रवणगोचरा ।।२७।।

मतिरुत्पद्यते पुंसां नान्यथा पापकारिणाम् ।
यस्याकर्णनमात्रेण सप्तजन्मार्जितान्यपि ।।२८।।

लघुशुष्कार्द्रस्थूलानि पापानि च महान्त्यपि ।
तत्क्षणाद् विलयं यान्ति गणेशस्य प्रसादतः ।।२९।।

अव्ययस्याऽप्रमेयस्य निर्गुणस्य निराकृतेः ।
मनोवागनिरूप्यस्य केवलानन्दरूपिणः ।।३०।।

यस्य स्वरूपं न विदुर्ब्रह्मेशानादयः सुराः ।
सहस्रवदनो यस्य महिमानं न च क्षमः ।।३१।।

यावद् विशेषविदपि प्रवक्तुं राजसत्तम !
मया यथा श्रुतं पूर्वं तत्पुराणं सुपुण्यदम् ।।३२।।

अतीन्द्रियज्ञानवतो व्यासाच्चाऽमिततेजसः ।
यज्ञविध्वंसशोकार्तो दक्षः शुश्राव मुद्गलात् ।।३३।।

यस्य भक्तिर्दृढा राजन् ! गणेशे सर्वसिद्धिदे ।
स एतच्छृणुयान्नित्यं न वाच्यं तादृशेतरे ।।३४।।

यदि सर्वेऽपि कुर्वीरन् विघ्नराजस्य सेवनम् ।
क्व तदा विघ्ननिचया विहरेयुर्यथासुखम् ।।३५।।

भृगु ऋषि पूजामण्डपमा जानुभयो । तिनले आफू व्यासासनमा बसेपछि राजा सोमकान्तलाई पनि बस्ने आसन दिनुभयो । भृगु नजिकै आसनमा बसेका दिव्यकान्तिले शोभायमान राजा सोमकान्तले भने ।।२२-२५।।

**राजाले भने** - हे महर्षि भृगु ! हजुरको कृपामय प्रेरणाबाट श्रीगणेशपुराणको श्रवण गर्नेछु भन्ने सङ्कल्प गर्नासाथ सम्पूर्ण शरीरमा व्याप्त गुरुतर वेदना हराएको छ । यस्तो आश्चर्यमय श्रीगणेशपुराण मलाई राम्ररी सुनाउनुहोस् ।।२६।।

**भृगुले भन्नुभयो** - हे राजा ! तपाईं सावधान हुनुहोस् र श्रीगणेशपुराण सुन्नुहोस्, म सुनाउँछु । अनन्त पुण्यको राशि भएपछि मात्र मानिसका हृदयमा श्रीगणेशपुराण सुन्ने बुद्धि पैदा हुन्छ । पापी मानिसका हृदयमा त्यस्तो बुद्धि पैदा हुँदैन । श्रीगणेशपुराणको श्रवणमात्रले श्रीगणेशका कृपाबाट सात जन्मसम्म गरेका साना-ठूला, पुराना र ताजा सबै प्रकारका पापहरू तत्काल समाप्त हुन्छन् ।।२७-२९।। हे राजन् ! अव्यय, अप्रमेय, निर्गुण, निराकार, मन र वाणीद्वारा अगम्य, केवलानन्दस्वरूप जुन श्रीगणेश भगवान् हुनुहुन्छ, उहाँको वास्तविक स्वरूपलाई ब्रह्मा, शिव आदि देवताहरू पनि जान्नु हुन्न । श्रीगणेशका सम्पूर्ण विशेषता र महिमा जान्ने शेषनागले पनि श्रीगणेशको पूर्ण महिमा बताउन सक्नु हुन्न । मैले अतीन्द्रिय-ज्ञानसम्पन्न, अतितेजस्वी भगवान् वेदव्यासका मुखारविन्दबाट पहिले जुन रूपमा पुण्यदायक श्रीगणेशपुराण सुनेको थिएँ त्यसै रूपमा तपाईंलाई पनि सुनाउने छु । यज्ञविध्वंस भएपछि शोक-सन्तप्त दक्षप्रजापतिले पनि यो श्रीगणेशपुराण मुद्गल ऋषिबाट सुनेका थिए ।।३०-३३।। हे राजन् ! सबै प्रकारका सिद्धि प्रदान गर्ने श्रीगणेशमा जुन मानिसको दृढ भक्ति हुन्छ, त्यसले मात्र यो पुराण सुन्ने अवसर प्राप्त गर्दछ । त्यस्ता मानिसलाई मात्र वक्ताले सुनाउनु पर्दछ, त्यसको विपरीत स्वभाव भएका नास्तिक मानिसहरूलाई यो पुराण सुनाउनु हुँदैन ।।३४।। यदि सबै मानिसले विघ्नविनाशक श्रीगणेशको सेवा गर्दछन् भने कसरी विघ्नको पुञ्ज संसारमा सानन्द रहन सक्छन् ? फेरि कसले अनेक थरि वियोगबाट उत्पन्न दुःखको अनुभव गर्नुपर्छ ? भूत,

दुखान्यनुभवेयुः के नानाविरहजान्युत ।
चकारेदं पुरा व्यासो भूतभव्यभविष्यवित् ।।३६।।

वेदार्थज्ञानरहितान् वेदाध्ययनवर्जितान् ।
वर्णाश्रमाचारशून्यान् जातिसङ्करकारिणः ।।३७।।

कलौ विलोक्य तु जनान् कुटिलान् पापकारिणः ।
अष्टादशपुराणानि कृतवान् धर्मगुप्तये ।।३८।।

तावन्त्युपपुराणानि ततोऽर्थान् बुबुधुर्जनाः ।
तत एव गणेशस्य रूपं जानन्त्यमी जनाः ।।३९।।

वर्तमान र भविष्य जान्ने भगवान् वेदव्यासले यस पुराणको रचना गर्नुभएको हो । भगवान् वेदव्यासले वेदार्थ नजान्ने, वेदको अध्ययन नगर्ने, वर्ण र आश्रमका आचार र विचारको पालन नगर्ने, जातिसङ्कर मानिसहरूको सङ्ख्या बढाउने, कुटिल र पापी कलिकालिक मानिसहरूलाई देखेर धर्मको रक्षाका निमित्त १८ महापुराणको रचना गर्नुभयो । त्यस्तै उहाँले १८ उपपुराण पनि बनाउनुभयो । ती महापुराण र उपपुराणहरूबाट मानिसहरूले मानव जीवनको प्रयोजन र कर्तव्यको विषयमा बुझ्ने अवसर प्राप्त गरे । ती सबै पुराण र श्रीगणेशपुराणबाट धेरै मानिसहरूले भगवान् श्रीगणेशको स्वरूप र महिमा बुझ्ने अवसर पनि पाए ।।३५-३९।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे राजोपदेशज्ञानोपदेशकथनं नाम नवमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'शरणागत सोमकान्तका प्रति भृगुको ज्ञानोपदेश' शीर्षकाङ्कित नवौं अध्याय पूर्ण भयो ।।९।।

ॐ

# दशमोऽध्यायः { १० अध्याय }

भृगुरुवाच

नारायणांशसम्भूतः पाराशर्यो महामुनिः ।
अतीतानागतज्ञानी वेदशास्त्रार्थतत्त्ववित् ।।१।।

कृत्वा वेदं चतुर्भागं तदर्थज्ञानसिद्धये ।
स विद्यामदगर्वेण पुराणं कर्तुमारभत् ।।२।।

समाप्तिसाधनं नैव कृतवान् मङ्गलं पुरा ।
गणेशस्य नतिं वापि स्तुतिं वा तस्य वा क्वचित् ।।३।।

ततो विघ्नाभिभूतःसन्नर्थं कञ्चन नास्मरत् ।
भ्रान्तिरेवाभवत् तस्य लौकिकेऽलौकिके पथि ।।४।।

नित्ये नैमित्तिके काम्ये श्रौते स्मार्ते च कर्मणि ।
व्याख्यातुर्वेदशास्त्राणां सर्वज्ञस्य सतोऽपि हि ।।५।।

ओषधीभिश्च मन्त्रैश्च भग्नवीर्य इवाहिराट् ।
तस्तम्भे स्वात्मनि भृशं तद्धेतुं नाध्यगच्छत ।।६।।

ततोऽगच्छत् सत्यलोकं धातारं प्रष्टुमादरात् ।
विस्मयाक्रान्तहृदयो ह्रीणः पाराशरो मुनिः ।।७।।

नमस्कृत्य देवगणान् देवर्षीन् कमलासनम् ।
पूजितो ब्रह्मणा दत्ते निषसादासने शुभे ।।८।।

पाणिना चास्पृशत् पादौ पाराशर्यो महामुनिः ।
प्रणयावनतो भूत्वा ब्रह्माणं प्रष्टुमारभत् ।।९।।

व्यास उवाच

ब्रह्मन्नद्भुतमेतद्धि किं मे दैवादुपस्थितम् ।
वेदार्थानि पुराणानि कर्तुं मे बुद्धिरादृता ।।१०।।

आवीक्षतोऽखिलाँल्लोकान् ज्ञानाचारविवर्जितान् ।
कलौ कर्मजडाँस्तब्धान् नास्तिकान् वेदनिन्दकान् ।।११।।

**भृगुले भन्नुभयो** - अतीत एवं भविष्यका द्रष्टा, वेद एवं शास्त्रका अर्थज्ञाता र नारायणको अंशबाट उत्पन्न पराशरका सुपुत्र महामुनि वेदव्यासले सर्वप्रथम एउटा वेदलाई चार भागमा बाँड्नुभयो र वेदार्थको ज्ञान सजिलैसँग सबैले गर्न सकून् भन्ने आशयले विद्यामदको गर्वले युक्त भएर पुराणवाङ्मयको निर्माण गर्न आरम्भ गर्नुभयो ।।१-२।। उहाँले पुराणको रचना शुरु गर्दा प्रमादवश ग्रन्थ समाप्तिको साधन मङ्गलाचरण गर्नुभएन । श्रीगणेशको वन्दना र स्तुति पनि गर्नुभएन । त्यस कारण पुराणको रचना गर्ने कार्यमा विघ्न आइलाग्यो । विघ्नद्वारा अभिभूत व्यासदेवले कुनै पनि अर्थको स्मरण र निक्योंल गर्न सक्नुभएन । लौकिक र अलौकिक दुबै विषयमा उहाँलाई भ्रान्तिमात्र भयो । नित्य, नैमित्तिक र काम्य, श्रौत एवं स्मार्त कर्मको विषयमा वेदको व्याख्या गरेर यथार्थ सन्देश दिने सर्वज्ञ विद्वान् भएर पनि भगवान् वेदव्यास मन्त्र र औषधिबाट पराक्रमहीन एवं विवश बनेको सर्पराजझैं स्तब्ध हुनुभयो । आफूले विचार गर्दा यस्तो किन भयो भन्ने कुराको कारण पनि फेला पार्न सक्नुभएन ।।३-६।। त्यसपछि विस्मित र लज्जित मुनि वेदव्यास यस्तो किन भयो भन्ने विषयमा सत्य-तथ्य पत्ता लगाउन सत्यलोकमा विराजमान ब्रह्माजीका समीपमा आदरपूर्वक जानुभयो ।।७।। त्यहाँ पुगेका वेदव्यासले ब्रह्माजीका वरिपरि विराजमान देवगण र देवर्षिका साथै भगवान् ब्रह्माजीलाई प्रणाम गर्नुभयो । ब्रह्माजीद्वारा सत्कार प्राप्त गर्नुभएका वेदव्यास उहाँले दिनुभएको मङ्गलमय आसनमा बस्नुभयो । त्यसपछि पराशरनन्दन महामुनि वेदव्यासले आफ्ना हातले ब्रह्माजीका दुई पाउ स्पर्श गरी नम्र भएर ब्रह्माजीसँग प्रश्न गर्नुभयो ।।८-९।।

**वेदव्यासले भन्नुभयो** -हे ब्रह्माजी ! कलिकालमा ज्ञान र आचारबाट वर्जित, कर्मसम्पादनमा मन्द, स्तब्ध, नास्तिक र वेदनिन्दक मानिसहरूलाई देखेर यी सबैले मैले बनाएका पुराणका वाक्यहरूबाट विधि र निषेध जानून् भन्ने आशयले मेरो मनमा पुराणहरूको रचना गर्ने बुद्धि पैदा भयो।

विधिं चैव निषेधं च ज्ञास्यन्ति मम वाक्यत: ।
ममैव तु गतं ज्ञानं भ्रान्त: क्षीब इवाऽभवम् ।।१२।।

न हेतुं तत्र पश्यामि स्फूर्ति: कापि न जायते ।
तद्धेतुं स्फूर्तिहेतुञ्च प्रष्टुं त्वामहमागत: ।।१३।।

अन्यं कं शरणं यामि विना त्वां चतुरानन !
सर्वज्ञ सर्वकर्ता त्वं मम भ्रान्तिं निवारय ।।१४।।

वद हेतुं मम भ्रान्तेर्नारायणस्वरूपिण: ।
नित्याचारवतो ब्रह्मन् सर्वज्ञस्य सतोऽपि च ।।१५।।

सूत उवाच

एवमाकर्ण्य तद्वाक्यं विचार्य कमलासन: ।
प्रणतं मुनिमभ्याह प्रहसन् विस्मयन्निव ।।१६।।

ब्रह्मोवाच

हन्त ! ते कथयिष्यामि गतिं सूक्ष्मां हि कर्मणाम् ।
विचार्य सम्यक् कर्तव्यं कर्म साध्वितरच्च यत् ।।१७।।

अन्यथा कुर्वत: पुंस: कृतं भवति चान्यथा ।
बुद्ध्या युक्त्याऽऽर्जवेनापि गुरूणि च लघूनि च ।।१८।।

कार्याणि साधयेद् धीमान् न गर्वान्न च मत्सरात् ।
वाहनत्वं समापन्नो गर्वेण तु खगेश्वर: ।।१९।।

मत्सरान्नाशितं सर्वमाम्बिकेयसुतेन च ।
मत्सरादेव रामेण क्षत्रमुत्सादितं पुरा ।।२०।।

योऽनादिनिधनो देवो जगत्कर्ता जगन्मय: ।
जगद्धाता जगद्धर्ता सदसद् व्यक्तमव्ययम् ।।२१।।

यो कर्तुमन्यथाकर्तुं शक्त: कर्तुञ्च सर्वदा ।
यस्याऽऽज्ञावशगा नित्यं देवा इन्द्रपुरोगमा: ।।२२।।

अहं विष्णुश्च रुद्रश्च सूर्याग्निवरुणादय: ।
यो विघ्नहर्ता भक्तानां विघ्नकर्तेतरस्य च ।।२३।।

तस्मिँस्त्वं कृतवान् गर्वं स्वविद्याबलसंश्रयात् ।
सर्वज्ञताऽभिमानेन न कृतं पूजनं त्वया ।।२४।।

तर मैले दैवबाट अद्‌भुत कुरा बेहोर्नु पर्‍यो । मैले जानेको ज्ञान सहसा मबाट लुप्त भयो । म आफै भ्रान्तिमा परें र मत्त जस्तो भएँ । यस्तो कसरी हुन गयो ? त्यो कारण पनि जान्न सकिनँ। मेरो आत्मामा जाँगर र स्फूर्ति कत्ति पनि रहेन । त्यसको कारण जान्न र स्फूर्ति जगाउने उपाय प्राप्त गर्नका लागि आज म हजुरका शरणमा आएको छु । हे चतुर्मुख ब्रह्माजी ! हजुरलाई छाडेर म अरू कसको शरणमा जाउँ ? हजुर सर्वज्ञ र सर्वकारण हुनुहुन्छ, त्यस कारण मेरो भ्रान्ति निवारण गरिदिनुहोस् । हे ब्रह्माजी ! नारायणको अंशावतार, नित्य सदाचारमा प्रवृत्त र सर्वज्ञ भएर पनि मेरो मनमा भ्रान्ति कसरी आयो ? यसको कारण बताउनुहोस् ।।१०-१५।।

**सूतजीले भन्नुभयो** - व्यासको प्रार्थना सुनेर केहीबेर विचार गरेपछि ब्रह्माजीले विनम्र वेदव्यासलाई मन्द मुस्कानका साथ चकित तुल्याउँदै भन्नुभयो ।।१६।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! म तपाईँलाई कर्मको सूक्ष्म गतिको विषयमा बताउँछु । मानिसले शुभ एवं उग्र कर्म गर्दा विचारपूर्वक गर्नुपर्दछ ।।१७।। कर्ममा विचार पुगेन भने कर्म गर्ने मानिसले गरेको कर्म प्रतिकूल अथवा प्रत्युत्पादक हुने गर्दछ । बुद्धिमान् मानिसले बुद्धि, युक्ति र सरलताको समुचित सामञ्जस्य मिलाएर साना-ठूला कार्यसम्पादन गर्नुपर्दछ। कुनै पनि काम अहङ्कार र द्वेष राखेर गर्नु हुँदैन । गरुड गर्वकै कारण नारायणका वाहन बन्न विवश भए ।।१८-१९।। पाण्डु-पुत्रहरूसँग द्वेषका कारण दुर्योधनले सर्वस्व नाश गरे र द्वेषकै कारण पहिले परशुरामले क्षत्रियकुलको नाश गरे ।।२०।। अनादिनिधन, जगत्कर्ता, जगन्मय, जगत्‌रक्षक, जगत्‌का संहारक, सत्, असत्, व्यक्त र अव्यक्त जुन देवता हुनुहुन्छ, जुन देवताले गर्न, नगर्न र अन्यथा गर्न पनि सक्नु हुन्छ, जसका अधीनमा इन्द्र आदि देवता ब्रह्मा, विष्णु, रुद्र, सूर्य, अग्नि र वरुण आदि सबै रहन्छन्, जो भक्तका विघ्नहर्ता र दुष्टहरूका विघ्नकर्ताका रूपमा प्रसिद्ध हुनुहुन्छ त्यस्ता गणनाथ प्रभुका सामु हे वेदव्यास! तपाईँले विषयज्ञानको अभिमान देखाउनुभयो र म सर्वज्ञ छु भन्ठानेर उहाँको आराधना गर्नुभएन ।।२१-२४।। तपाईँले पुराण

स्मरणं वा गणेशस्य प्रारम्भेऽन्यस्य वा तथा ।
न कृतं च त्वया व्यास ! तेन भ्रान्तिस्तवाऽनघ ।।२५।।

आरम्भे सर्वकार्याणां प्रवेशे वापि निर्गमे ।
श्रौते स्मार्ते लौकिके यो स्मृतोऽविघ्नं करोति च ।।२६।।

यमाहुः परमानन्दं यमाहुः परमां गतिम् ।
यमाहुः परमं ब्रह्म वेदशास्त्रार्थदर्शिनः ।
तं गच्छ शरणं वत्स द्विरदाननमादरात् ।।२७।।

स चेत् प्रसन्नो भगवान् वाञ्छितं ते करिष्यति ।
नो चेद् वर्षसहस्रेण न स्ववाञ्छामवाप्स्यसि ।।२८।।

व्यास उवाच

कोऽसौ गणेशः किं चास्य रूपं वेद्यं कथञ्च तत् ।
कस्य वायं प्रसन्नोऽभूत् पूर्वं हि चतुरानन ।।२९।।

कति वा ह्यवताराश्च किं किं कार्यं च वै कृतम् ।
पूर्वञ्च पूजितः केन कस्मिन् काले स्मृतोऽपि च ।।३०।।

मम विक्षिप्तचित्तस्य पृच्छतः प्रपितामह !
एतत् सर्वं सुविस्तार्य ब्रूहि मे करुणानिधे ।।३१।।

रचनाको आरम्भमा न श्रीगणेशको, न त अरू कुनै देवताको सम्झना गर्नुभयो । त्यस कारण हे निष्पाप व्यास ! तपाईंको मनमा भ्रान्ति पैदा भयो ।।२५।। सबै कार्यको आरम्भ, प्रवेश र निर्गम काल र श्रौत एवं स्मार्त कार्यको सम्पादनमा जसको स्मरण गरिएन भने विघ्न प्राप्त हुन्छ, जसलाई परमानन्द, परमगति र परमब्रह्म पनि भन्ने गरिन्छ, ती वेद र शास्त्रका रहस्य जान्ने विद्वान्हरूद्वारा आराध्य गजानन प्रभु श्रीगणेशको शरणमा तपाईं श्रद्धापूर्वक जानुहोस् ।।२६-२७।। श्रीगणेश प्रसन्न हुनुभयो भने उहाँले तपाईंको इच्छा पूरा गरिदिनुहुनेछ । उहाँ रिसाउनुभयो भने हजारौं वर्ष लगाएर कार्य गरे पनि तपाईंको त्यो इच्छा कहिले पूरा हुनेछैन ।।२८।।

**व्यासले भन्नुभयो -** हे चतुर्मुख विधाता ! श्रीगणेश को हुनुहुन्छ ? उहाँको स्वरूप कस्तो छ ? त्यो स्वरूप कसरी जान्न सकिन्छ ? योभन्दा पहिले श्रीगणेश कोसँग प्रसन्न हुनुभएको थियो ? उहाँका कति अवतार भए ? र ती ती अवतारहरूमा उहाँले कस्ता र के के कार्य सम्पन्न गर्नुभयो ? सर्वप्रथम उहाँको पूजा कसले गऱ्यो ? कुन समयमा कसले, कसरी उहाँको सम्झना गऱ्यो ? हे दयालु पितामह ! चित्तमा विक्षेप भई हजुरका सामु जिज्ञासा प्रकट गर्ने मलाई यी प्रश्नहरूको उत्तर दिएर सबै कुराको रहस्य राम्ररी खुलाइदिनुहोस् ।।२९-३१।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे व्यासप्रश्नवर्णनं नाम दशमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'श्रीगणेशको स्वरूप र सामर्थ्यका विषयमा वेदव्यासको जिज्ञासा' शीर्षकान्वित दशौं अध्याय पूर्ण भयो ।।१०।।

ॐ

# एकादशोऽध्याय: { ११ अध्याय }

भृगुरुवाच

जगाद भूयश्चतुराननस्त-
मेवं कृतप्रश्नविवक्षयाऽथ ।
क्रमेण सर्वं कथयामि तेऽहं
गणेशमन्त्रान् बहुधा विचार्य ।।१।।

ब्रह्मोवाच

अनन्ता हि मुने ! मन्त्रा गणेशस्य महात्मन: ।
उपासनं वदिष्यामि शीघ्रं सिद्धिकरस्य ते ।।२।।

सप्तकोटिमहामन्त्रा गणेशस्यागमे स्थिता: ।
तद्रहस्यं शिवो वेद किञ्चित् किञ्चिदहं मुने ।।३।।

षडक्षरैकाक्षरयो: श्रेष्ठत्वं तेषु विद्यते ।
ययो: स्मरणमात्रेण सर्वसिद्धि: करे भवेत् ।।४।।

जीवन्मुक्ता भवन्त्येव यदुपासनया मुने ।
त एव धन्यास्ते पूज्यास्ते नमस्या: सुरैरपि ।।५।।

यदुपासनया दास्यं येषां कुर्वन्ति सिद्धय: ।
इच्छाविहारा: सर्वज्ञा नानारूपा भवन्ति ते ।।६।।

ये कुर्वन्ति गणेशस्य भक्तिं भावसमन्विता: ।
न येषां भक्तिलेशोऽपि तेषां जन्म निरर्थकम् ।।७।।

नालोकयेन्मुखं तेषां विमुखा ये गजानने ।
तेषां दर्शनमात्रेण विघ्नानि स्यु: पदे पदे ।।८।।

विघ्नान्युपशमं यान्ति तदुपासकदर्शनात् ।
नमस्यन्ति च भूतानि स्थावराणि चराणि च ।।९।।

अतस्तेऽहं प्रवक्ष्यामि मन्त्रमेकाक्षरं शुभम् ।
तदनुष्ठानमात्रेण वाञ्छितं समवाप्स्यसि ।।१०।।

अनुष्ठानं प्रवक्ष्यामि यथोक्तं शम्भुना मम ।
स्नानं कृत्वा धौतवस्त्रे परिधाय शुचिर्नर: ।।११।।

**भृगुले भन्नुभयो** - ब्रह्माजीले वेदव्यासले गरेका ती प्रश्नहरूको उत्तर दिने इच्छाले भन्नुभयो- हे वेदव्यास! सर्वप्रथम श्रीगणेशका मन्त्रहरूको विषयमा विचार गरेर क्रमैसँग म तपाइँका सबै प्रश्नहरूको उत्तर दिनेछु ।।१।।

**ब्रह्माजी भन्नुहुन्छ** – हे मुनिवर ! महात्मा श्रीगणेशका वाचक अनन्त मन्त्र छन् । अत्यन्त छिटो सिद्धि प्रदान गर्ने मन्त्रको उपासना विधिबारे म तपाइँलाई बताउँछु ।।२।। हे मुनि! शास्त्रहरूमा श्रीगणेशका सात करोड मन्त्रहरू रहेका छन् । ती मन्त्रहरूको रहस्य भगवान् शिवजी जान्नुहुन्छ र केही म पनि जान्दछु । ती मन्त्रहरूमा ६ अक्षरको मन्त्र र १ अक्षरको मन्त्र उत्तम मन्त्र मानिएका छन् । जुन मन्त्रहरूको सम्झनामात्र गर्दा सबै प्रकारका सिद्धि प्राप्त गर्न सकिन्छ ।।३-४।। हे मुनि! जुन मन्त्रको उपासनाबाट साधकहरू जीवनमुक्त हुन्छन्, धन्य हुन्छन् र सबै देवताहरूद्वारा वन्दनीय बन्दछन्, ती मन्त्रहरूको उपासनाबाट सिद्धि पनि दासी भएर आउँछन् । जसले भावपूर्ण भएर श्रीगणेशमा भक्ति गर्दछन्, ती स्वेच्छापूर्वक सर्वत्र विहार गर्न समर्थ हुन्छन् । ती सर्वज्ञ र अनेक रूपमा परिणत भई विचरण गर्न समर्थ पुरुष बन्दछन्। जसका हृदयमा श्रीगणेशका प्रति लेशमात्र पनि भक्ति हुँदैन त्यस्ता मानिसहरूको जन्म व्यर्थ छ ।।५-७।। जुन मानिस श्रीगणेशबाट पराङ्मुख भएर रहन्छन् तिनको मुख पनि हेर्न हुँदैन । त्यस्ता मानिसहरूको मुख हेरेपछि पाइला पाइलामा विघ्न आइलाग्छ।।८।। श्रीगणेशको उपासना गर्ने भक्तहरूको दर्शन गर्नाले विघ्नहरू समाप्त हुन्छन् । त्यस्ता साधकलाई सकल प्राणी, स्थावर र जङ्गमतत्त्वले पनि नमस्कार गर्दछन् ।।९।। त्यस कारण म तपाइँलाई मङ्गलमय एकाक्षरी मन्त्रको विषयमा बताउँछु । त्यसको अनुष्ठान गर्नाले आफूले चाहेको विषय प्राप्त गर्न सक्नु हुनेछ ।।१०।। भगवान् शङ्करले मलाई जसरी श्रीगणेशको अनुष्ठानविधि बताउनुभएको थियो त्यसरी म तपाइँलाई बताउँछु । बुद्धिमान् साधकले स्नान गरेर पवित्र

चैलाजिनं कुशैः कृत्वा स्वासनं साधकः सुधीः ।
तस्मिन् स्थित्वा भूतशुद्धिं प्राणानां स्थापनं तथा ।।१२।।

अन्तर्बहिर्मातृकाणां न्यासं कृत्वा त्वतन्द्रितः ।
प्राणायामं ततः कृत्वा मूलमन्त्रं जपन् हृदि ।।१३।।

मन्त्रसन्ध्यामुपासीत आगमोक्तां यथाविधि ।
आपादमस्तकं देवं ध्यात्वा निश्चलचेतसा ।।१४।।

मानसैरुपचारैस्तं पूजयेत् सुसमाहितः ।
ततो जपेद् यथाशक्ति पुरश्चरणमार्गतः ।।१५।।

अनुकूलो भवेद् यावद् वरं दातुं गजाननः ।
स्वरूपं दर्शयेद् यावत् तावज्जपपरो भवेत् ।।१६।।

भृगुरुवाच

एवमुक्त्वा मुनिं ब्रह्मा विलोक्य शुभवासरम् ।
एकाक्षरं मन्त्रराजमेकार्णं गणपस्य च ।।१७।।

अशिक्षयत् तदा सर्वं सम्भ्रान्तं मुनिसत्तमम् ।

ब्रह्मोवाच

सूर्यकोटिप्रतीकाशं वरं दातुं समागतम् ।।१८।।

यदा द्रक्ष्यसि तं देवं तदा चित्तं स्थिरीकुरु ।
ममैव हृदये नित्यं स्थिरो भव गजानन ।।१९।।

वृणीष्वेति वरं तस्मात् स ते दास्यत्यसंशयम् ।
हृदि स्थिते तत्र देवे दिव्यं ज्ञानमवाप्स्यसि ।।२०।।

भूतं भावि भवच्चैव ज्ञास्यसि त्वमशेषतः ।
हित्वा भ्रान्तिं दृढां वत्स ! नानाग्रन्थान् करिष्यसि ।।२१।।

व्यास उवाच

गता भ्रान्तिर्मम पितरुपदेशे कृते त्वया ।
अनुष्ठानं करिष्यामि पितामह ! तवाज्ञया ।।२२।।

ब्रह्मोवाच

एकान्ते निर्जने देशे व्यग्रताहेतुवर्जिते ।
अनुष्ठानं कुरु विभो ! गजाननमनुस्मरन् ।।२३।।

वस्त्र धारण गरी कुशासनमा बसेर विधिपूर्वक भूतशुद्धि र प्राणस्थापना गर्नुपर्दछ । मातृकाको अन्तर्न्यास एवं बहिर्न्यास गरी निरालस्य भएर प्राणायाम गर्नुपर्दछ । त्यसपछि हृदयमा मूलमन्त्र जप्दै विधिपूर्वक शास्त्रोक्त मन्त्रसन्ध्या गर्नुपर्दछ। त्यसपछि आफ्नो चित्तलाई निश्चल बनाएर गजानन भगवान्का पाउदेखि मस्तकसम्मका अङ्गहरूको ध्यान गर्नुपर्दछ ।।१२-१४।। फेरि एकाग्र भएर मानस उपचारबाट श्रीगणेशको पूजा गर्नुपर्दछ। त्यसपछि पुरश्चरणका विधानले यथाशक्ति श्रीगणेश मन्त्रको जप गर्नुपर्दछ। जबसम्म भगवान् गजानन वरदान दिनका लागि अनुकूल बन्नुहुन्न र आफ्नो स्वरूप दर्शन गराउन प्रकट हुनुहुन्न, तबसम्म श्रीगणेशमन्त्रको निरन्तर जप गर्नुपर्दछ ।।१५-१६।।

**भृगुले भन्नुभयो** - ब्रह्माजीले यसरी वेदव्यासलाई उपदेश दिनुभयो र उत्तम तिथि एवं वारको विचार गरी श्रीगणेशको एकाक्षरी मन्त्रको शिक्षा दिनुभयो । भ्रान्तिमा परेका वेदव्यासलाई ब्रह्माजीले भन्नुभयो - कोटिसूर्यको कान्तिले सुहाउनुभएका र वरदान दिन भनी दर्शन दिनुहुने श्रीगणेश जुन बेला तपाईंका सामु साकार बन्नुहुन्छ, त्यस बेला तपाईंले उहाँलाई हृदयमा धारण गर्नुहोस् अनि प्रार्थनाको मुद्रामा भन्नुहोस् - हे गजानन ! तपाईं मेरा हृदयमा निरन्तर स्थिर भएर रहनुहोस् । त्यसपछि भगवान् श्रीगणेशले तपाईंलाई वरदान लिन आज्ञा गर्नुहुनेछ र निश्चय नै तपाईंले चिताएको वरदान दिनुहुनेछ । यसरी श्रीगणेशलाई हृदयमा स्थिर गराएपछि तपाईंले उहाँबाट दिव्य ज्ञान प्राप्त गर्नुहुनेछ । त्यसपछि भूत, भविष्य र वर्तमानकालका सबै विषय तपाईंका सामु प्रत्यक्ष हुनेछन् र ती सबै विषयमा तपाईंलाई पूर्ण बोध हुनेछ । त्यसपछि तपाईंले आफ्ना मनमा रहेका भ्रान्तिहरूलाई निराकरण गरेर अनेक थरि ग्रन्थहरूको निर्माण गर्नुहुनेछ ।।१७-२१।।

**व्यासले भन्नुभयो** - हे पितामह ! हजुरको उपदेश प्राप्त गरेर मेरो भ्रान्ति निर्मूल भएको छ । अब हजुरको आज्ञाअनुसार म श्रीगणेशको उपासनामा लाग्नेछु ।।२२।।

**ब्रह्माजीले भन्नुभयो** - हे सर्वज्ञ वेदव्यास ! आफूलाई अशान्त बनाउने कुनै पनि तत्त्व नभएको अर्थात् आतङ्कशून्य, शान्त, एकान्त एवं निर्जन स्थलमा गजाननको स्मरण गर्दै उपासना आरम्भ गर्नुहोस् ।।२३।। नास्तिक, निन्दक, क्रूर,

नास्तिके निन्दके क्रूरेऽनाचारे च खले शठे ।
न वक्तव्यो मन्त्रराजस्तादृशे शरणागते ।।२४।।

दृढभक्तौ श्रद्धाने विनीते वेदवादिनि ।
साकाङ्क्षे निरनुक्रोशे शास्त्रज्ञे च प्रकाशय ।।२५।।

प्रापयत्येव नरकान् दशपूर्वान् दशापरान् ।
मन्त्रराजस्तु वक्तारमप्रकाश्ये प्रकाशितः ।।२६।।

यो जपेद् भक्तिपूर्वं तु स लभेदीप्सितं फलम् ।
पुत्रपौत्रसमायुक्तो धनधान्यसमन्वितः ।।२७।।

एकदन्तप्रभावेण लब्ध्वा ज्ञानं सुनिर्मलम् ।
इह भुक्त्वाऽखिलान् भोगानन्ते मोक्षमवाप्नुयात् ।।२८।।

आचारहीन, दुर्जन र धूर्त मानिसहरूमा श्रीगणेशको मन्त्र प्रकाशित गर्न हुँदैन । त्यसरी नै उक्त प्रकृतिका मानिस शरणमा आएर मन्त्रप्रकाशनका लागि हठ गर्दछन् भने पनि तिनका सामु श्रीगणेशको मन्त्र प्रकाशित गर्न हुँदैन ।।२४।। दृढ भक्ति भएका, श्रद्धालु, नम्र, वेदाध्ययन गर्ने, उत्तम आकाङ्क्षा भएका, दयालु र शास्त्रवेत्ता मानिसहरूका सामुमात्र श्रीगणेशको मन्त्र प्रकाशित गर्न हुन्छ।।२५।। जुन मानिसहरूका सामु श्रीगणेशमन्त्र प्रकाशित गर्न हुँदैन तिनका सामु प्रकाशित गरेको श्रीगणेशमन्त्रले आफ्ना पूर्ववर्ती दश पुस्ता र उत्तरवर्ती दश पुस्तासम्मका मानिसहरूलाई नरकहरूमा पुऱ्याउँछ ।।२६।। जसले भक्तिपूर्वक श्रीगणेशमन्त्रको जप गर्दछ त्यसले चिताएको कुरा प्राप्त गर्दछ । छोरा-नातिहरूले सम्पन्न र धनधान्यले समृद्ध त्यो मानिस एकदन्त श्रीगणेशको प्रतापबाट निर्मल ज्ञानप्राप्त गरी यस संसारका सबै प्रकारका भोग भोगेर अन्तमा मोक्षमा प्राप्त हुन्छ ।।२७-२८।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे मन्त्रकथनं नामैकादशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'ब्रह्माजीद्वारा वेदव्यासलाई श्रीगणेशमन्त्रको उपदेश' शीर्षकान्वित एघारौं अध्याय पूर्ण भयो ।।११।।

ॐ

# द्वादशोऽध्यायः { १२ अध्याय }

सूत उवाच

इति श्रुत्वा तु वचनं निर्गतं ब्रह्मणो मुखात् ।
हर्षेण महता युक्तो मुनिः पप्रच्छ तं पुनः ।।१।।

व्यास उवाच

अवधानं मया प्राप्तं पीत्वा वागमृतं तव ।
इदानीं श्रोतुमिच्छामि मन्त्रराजमिमं पितः ।।२।।
को जजाप कथं सिद्धिमवाप च गजाननात् ।
एतं मे संशयं छिन्धि त्वत्तोऽन्यो नास्ति मे गुरुः ।।३।।

भृगुरुवाच

इत्येवं मुनिना पृष्टो जगाद वदतां वरः ।
कृपयावनतं ब्रह्मा तं व्यासं राजसत्तम ।।४।।

ब्रह्मोवाच

साधु साधु त्वया पृष्टं पुण्यवानसि साम्प्रतम् ।
न ह्यपुण्यवतां ब्रह्मन् कथायाः श्रवणे रतिः ।।५।।
उपासनामार्गमिमं सम्यक् त्वां बोधयाम्यहम् ।
स्निग्धे प्रज्ञाधिके शिष्ये यतो गोप्यं न किञ्चन ।।६।।
ॐकाररूपी भगवानुक्तस्ते गणनायकः ।
यथा सर्वेषु कार्येषु पूज्यतेऽसौ विनायकः ।।७।।
निर्विघ्नकामनावद्भिर्नो चेद् विघ्नं करोति सः ।
तथोंकारबीजयुक्ता ॐकारपल्लवान्विताः ।।८।।
मन्त्राः सर्वागमे प्रोक्ता अन्ये ये निष्फलाश्च ते ।
सदसद् व्यक्तमव्यक्तं सर्वं हि गणनायकः ।।९।।
एवं सर्वे देवसिद्धमुनिराक्षसकिन्नराः ।
गन्धर्वाश्चारणा नागा यक्षगुह्यकमानवाः ।।१०।।
उपासका गणेशस्य सर्वे लोकाश्चराचराः ।
अत एव गणेशाद्धि परं किञ्चिन्न विद्यते ।
इदानीं कथयिष्यामि कथामेकां पुरातनीम् ।।११।।
मन्त्रराजजपेनायं यथा तुष्टो गजाननः ।
कदाचिद् दैवयोगेन प्रलये समुपस्थिते ।।१२।।

**सूतजीले भन्नुभयो** - ब्रह्माजीका मुखबाट निःसृत वचन सुनेर अत्यन्त हर्षित मुनि वेदव्यासले फेरि ब्रह्माजीसँग प्रश्न गर्नुभयो ।।१।।

**व्यासले भन्नुभयो** – हे पितामह ! हजुरको वचनामृत पिएर मैले मनको एकाग्रता प्राप्त गरेको छु । अहिले म हजुरले उपदेश गर्नुभएको मन्त्रराजको विषयमा सुन्न चाहन्छु।।२।। हे विधाता! सर्वप्रथम मन्त्रराजको कसले जप गर्‍यो र गजाननबाट सिद्धि प्राप्त गर्‍यो ? यो मेरो मनमा रहेको संशय हो । मेरो यस संशयको छेदन गर्नुहोस् । हजुरबाहेक मेरा अरू कुनै गुरु छैनन् ।।३।।

**भृगुले भन्नुभयो** – हे उत्तम राजा ! यसरी व्यासमुनिद्वारा सोधिएका शास्त्रवक्ता ब्रह्माजीले कृपापूर्वक विनीत व्यासका प्रति उपदेश गर्नुभयो ।।४।।

**ब्रह्माजीले भन्नुभयो** – हे वेदव्यास ! तपाईंले ज्यादै राम्रो जिज्ञासा गर्नुभएको छ । तपाईं पुण्यवान् हुनुहुन्छ, किनकि पुण्य नहुने मानिसको मनमा कथाश्रवणमा रुचि हुँदैन ।।५।। म तपाईँलाई राम्ररी उपासनामार्ग बताउँछु किनकि स्नेहपात्र र मेधावी शिष्यबाट लुकाउनुपर्ने कुनै पनि कुरा हुँदैन ।।६।। हे वेदव्यास! तपाईंद्वारा जान्न खोजिएका श्रीगणेश ॐकाररूप ब्रह्म हुनुहुन्छ। कार्यको निर्विघ्न परिसमाप्तिको कामना गर्नेहरूले विनायक भगवान्‌को सबै कार्यमा पूजन गर्दछन्, अन्यथा श्रीगणेशले कार्यमा विघ्न पुर्‍याउनुहुन्छ । सबै आगमहरूमा ॐकारबीज, ॐकार पल्लवसम्पन्न श्रीगणेशका मन्त्र बताइएका छन् । अरू जुन मन्त्र छन्, तिनलाई निष्फल मन्त्र मानिएको छ । सत्, असत्, व्यक्त र अव्यक्त सबै तत्त्व श्रीगणेशका स्वरूप हुन् ।।७-९।। यसैगरी सबै देवता, सिद्ध, मुनि, राक्षस, किन्नर, गन्धर्व, चारण, यक्ष, गुह्यक, मानव, स्थावर र जङ्गमरूप सम्पूर्ण तत्त्वहरूले श्रीगणेशकै उपासना गर्दछन् । त्यस कारण श्रीगणेशभन्दा भिन्न कुनै तत्त्व रहेको छैन । मन्त्रराजको जपबाट श्रीगणेश सन्तुष्ट हुनुहुन्छ भन्ने विषयमा म अहिले तपाईँलाई पुरानो कथा सुनाउँछु । कुनै

वायुभि: पर्वता भिन्ना: पतिता: परितो दिशम् ।
तपन्ति द्वादशादित्या: शोषयित्वा जलं महत् ।।१३।।
ज्वालामाली महावह्निरखिलं ज्वलयत्यपि ।
संवर्त्तका महामेघा वर्षन्ति परितो जलम् ।।१४।।
हस्तिहस्तोपमाभिस्तु धाराभिर्द्विजसत्तम ।
उल्लङ्घयन्ति मर्यादां सागरा: सरितोऽपि च ।।१५।।
एवं सर्वे विनश्यन्ति ह्याब्रह्मस्थावरादय: ।
एवं मायामये नष्टे विकारेऽसौ गजानन: ।।१६।।
अणुभ्योऽणुतरं रूपं कृत्वा क्वापि व्यवस्थित: ।
तत: काले बहुतरे गतेऽन्धतमसावृते ।।१७।।
एकाक्षरं पुनर्ब्रह्म नादयुक्तमजायत ।
वैकारिकं पुनारूपं यदा नादमयं स्थितम् ।।१८।।
मायाविकारमासाद्य तदेवाभूद् गजानन: ।
तत एव च सम्भूता गुणा: सत्त्वं रजस्तम: ।।१९।।
ततस्त्रय: समुत्पन्ना विष्णुर्ब्रह्मा हरोऽपि च ।
मायया रचितं सर्वं त्रैलोक्यं सचराचरम् ।।२०।।
ततस्तन्मायया भ्रान्ता बभ्रमुस्ते सुरास्त्रय: ।
तमेव जनकं स्वस्य द्रष्टुं प्रष्टुं समुत्सुका: ।।२१।।
किमस्माभि: कर्म कार्यमिति जिज्ञासया मुने ।
एकविंशतिस्वर्गाणि पूर्वमूर्ध्वं विलोक्यते ।।२२।।
अन्तरिक्षं तथा तिर्यक् पश्चात् पातालमाययु: ।
अदृष्ट्वा परमात्मानं तपश्चेरुस्ततो भृशम् ।।२३।।
निराहारा जपपरा दिव्यवर्षसहस्रकम् ।
श्रान्ता: खेदमनुप्राप्तास्ततस्ते पृथिवीं पुन: ।।२४।।
विचिन्वन्तो ययुर्द्रष्टुं वनान्युपवनानि च ।
सरित: सागरान् शैलान् शिखराणि गुहाश्च ता: ।।२५।।
ततो जलाशयं ते तु महान्तं ददृशु: पुर: ।
नाना जलचरैर्वृक्षै: पक्षिभिर्विविधैर्युतम् ।।२६।।
बलाकाभिश्चक्रवाकैर्हंसै: कारण्डकैरपि ।
नादितं नलिनीजालं बिसखण्डाशने रतै: ।।२७।।

बेला दैवयोगले प्रलयकाल आएपछि वायुको वेगबाट पर्वतहरू टुक्रिएर चारै दिशामा फैलिए, १२ सूर्य सम्पूर्ण जलराशि सुकाएर प्रचण्ड तेजले बल्न थाले, ज्वालैज्वालाले ज्योतिर्मय अग्निले सम्पूर्ण संसार डढाउन थाल्यो, प्रलयकालिक संवर्तक मेघले हात्तीका सुँढजस्ता धारा वर्षाएर चारैतिर जलैजल बनाए, सागर र नदीहरूले मर्यादा नाघ्न थाले।।१०-१५।। यसरी ब्रह्माजीदेखि स्थावरसम्मका सबै विषय नष्ट हुन थाले । मायाद्वारा बनेका ती सबै विकारी तत्त्व नष्ट भएपछि भगवान् श्रीगणेश अणुभन्दा पनि सानो रूप धारण गरी कतै लीन हुनुभयो । कालो अन्धकारले समयलाई ढाक्यो । त्यो समयपछि ब्रह्मनादले सम्पन्न ॐकाररूप एकाक्षर पैदा भयो। त्यसको वैकारिक रूप आनन्दमय भएर रह्यो । मायाविकारको सम्पर्कले त्यो ॐकार गजानन श्रीगणेशका रूपमा पैदा भयो। ती गजाननबाट नै सत्त्व, रज र तमनामक गुणहरू पैदा भए ।।१६-१९।। त्यसपछि ती गुणहरूका माध्यमबाट ब्रह्मा, विष्णु र शिव यी तीन देवता उत्पन्न भए । मायाबाट नै चराचरसहित स्वर्ग, मर्त्य र पातालनामक तीन लोक पनि रचिए ।।२०।। त्यसपछि श्रीगणेशको मायाले भ्रान्त भएका ब्रह्मा, विष्णु र शिव आफूलाई जन्म दिने पितृतत्त्व श्रीगणेशको स्वरूप दर्शन गर्न र रहस्य केलाउन उत्सुक भएर चारैतिर घुम्न थाले ।।२१।। हामीले के काम गर्नुपर्ने हो भन्ने जिज्ञासा लिएर यी तीन देवताले सर्वप्रथम माथि रहेका एक्काइस प्रकारका स्वर्गहरूको अवलोकन गरे, अन्तरिक्षमा घुमे र तिर्यक् रूपमा रहेको पातालमा पुगे । कहीं पनि तिनीहरूले श्रीगणेशरूप परमात्माको दर्शन गर्न पाएनन् र निराश भई दीर्घकालिक तपस्यामा प्रवृत्त भए ।।२२-२३।। दिव्य एक हजारवर्षसम्म निराहार रही जप गरे । तपस्याले थाकेपछि खिन्न मन भएका ती देवता फेरि पृथिवीभ्रमण गर्न लागे । त्यहाँ परमात्माको खोजी गर्दै ती वन-उपवन, नदी, सागर, शैलशिखर र गुफाहरूको दर्शनका लागि ठाउँ-ठाउँमा घुमिरहे ।।२४-२५।। त्यसपछि तिनीहरूले अनेक थरि जलचर, वृक्ष, अनेक प्रकारका पक्षीहरू, बकुल्ला, चखेवा, नलिनीका पात र कमलका डाँठ खाइरहेका ठूला हाँस र साना खाले घरेलु हाँसको स्वरबाट गुञ्जित विशाल जलाशय आफ्नै अगाडि देखे ।।२६-२७।। जलाशयको तीरमा नुहाई केहीबेर विश्राम गरेपछि अनेक तरङ्गहरूको क्रीडाभूमि, मानिसहरूका

स्नात्वा विश्रम्य तत्तीरे समुत्तीर्य पुरो ययुः ।
नानावीचिसमायुक्तं महान्तं तं जलाशयम् ।।२८।।

सुदुस्तरतरं पुंसां झषनक्रसमाकुलम् ।
ईक्षां चक्रुः सुदुर्दर्शं प्रलयानलसन्निभम् ।।२९।।

कोटिसूर्यप्रतीकाशं तेजोराशिं पुरो मुने ।
चिन्तामापुः परान्ते तु तेजसा हृतदृष्टयः ।।३०।।

ततो गगनमार्गेण तेजोमध्याद् विनिर्गताः ।
क्षुधातृषापरिश्रान्ता निश्वसन्तो मुहुर्मुहुः ।।३१।।

निन्दन्तश्च शपन्तश्च स्वात्मानं जातसाध्वसाः ।
ततोऽतिकरुणाविष्टो लोकाध्यक्षोऽखिलार्थवित् ।।३२।।

दर्शयामास तान् रूपं मनोनयननन्दनम् ।
पादाङ्गुलीनखश्रीभिर्जितरक्ताब्जकेसरम् ।।३३।।

रक्ताम्बरप्रभावात् तु जितसन्ध्यार्कमण्डलम् ।
कटिसूत्रप्रभाजालैर्जितहेमाद्रिशेखरम् ।।३४।।

खड्गखेटधनुःशक्तिशोभि चारुचतुर्भुजम् ।
सुनासं पूर्णिमाचन्द्रजितकान्तिमुखाम्बुजम् ।।३५।।

अहर्निशं प्रभायुक्तं पद्मचारुसुलोचनम् ।
अनेकसूर्यशोभाजिन्मुकुटभ्राजिमस्तकम् ।।३६।।

नानाताराङ्कितव्योमकान्तिजिदुत्तरीयकम् ।
वराहदंष्ट्राशोभाजिदेकदन्तविराजितम् ।।३७।।

ऐरावतादिदिङ्नागभयकारि सुपुष्करम् ।
दृष्ट्वैव सहसा देवं प्रणेमुस्ते मुदा मुने ।
पादाम्बुजमुपस्पृश्य ततः स्तोतुं प्रचक्रमुः ।।३८।।

लागि दुस्तर, ठूला-ठूला माछा र गोहीले भरिएको त्यो जलाशय छाडेर ती अगाडि बढे । अगाडि बढ्नासाथ तिनीहरूले प्रलयकालको अग्निसमान, आँखाले हेर्नै नसकिने करोडौं सूर्यसमान प्रचण्डकिरण भएको तेजको पुञ्ज देखे । तेजबाट दृष्टि मन्द भएका ती देवताहरू ठूलो चिन्तामा परे ।।२८-३०।। त्यसपछि तिनीहरूले तेजलाई चिरेर कथञ्चित् आकाशमार्गबाट आफूलाई अगाडि बढाए र त्यसपछि ती देवता भोक र प्यासले व्याकुल भए । बार-बार श्वास-प्रश्वास लिन थाले ।।३१।। त्यो तेजराशि देखेर भयभीत ती देवता आफूले खोजेको तत्त्व नभेटाएर आफ्नो निन्दा आफै गर्न लागे र आफ्नो भाग्यलाई आफै सराप्न लागे। त्यसपछि सम्पूर्ण रहस्य जान्ने, अन्तर्यामी, सम्पूर्ण लोकहरूका नायक श्रीगणेशले ती देवताहरूको दुःख देखी दयालु भएर मन र आँखालाई प्यारो लाग्ने आफ्नो सुन्दर र दिव्य रूप तिनलाई देखाउनुभयो । भगवान् श्रीगणेशको त्यो रूप विचित्र थियो । पाउका औंलाका नङहरूको कान्तिले रातो कमलको केसरालाई तेजोहीन तुल्याइरहेको थियो। रातो वस्त्रको आभाबाट सन्ध्याकालिक सूर्यको लालिमा तिरस्कृत भइरहेको थियो । कमरको कन्धनीको सेतो कान्तिले हिमालयका चुचुराहरूको सेतोपनलाई निस्तेज बनाइरहेको थियो ।।३२-३४।। खड्ग, ढाल, धनु र शक्तिद्वारा सुहाएका चार हात धारण गर्ने, सुन्दर नासिकाले सुहाएको, पूर्णिमाका चन्द्रमाको कान्तिलाई परास्त गर्ने मुखकमलको कान्तिले सुहाएको, नित्य प्रभामय, कमलझैं राम्रा आँखाहरूले सम्पन्न, अनेक सूर्यको शोभालाई परास्त गर्ने, चम्चमाउँदो मुकुटले शोभायमान मस्तक भएको, अनेक थरि ताराहरूले सम्पन्न आकाशको कान्तिलाई तिरस्कृत गर्ने दोसल्लाद्वारा रमणीय, बँदेलका दाह्राको शोभालाई जित्ने एउटा दाह्रा भएको र ऐरावत आदि हात्तीहरूलाई पनि भयभीत तुल्याउने सुँढ भएको भगवान् श्रीगणेशको दिव्य स्वरूप देखेर तीनवटै देवताले प्रसन्न भएर प्रणाम गर्दै श्रीगणेशका चरणकमलको स्पर्श गरी स्तुति गरे ।।३५-३८।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे गजाननदर्शनं नाम द्वादशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'ब्रह्मा, विष्णु र शिवजीद्वारा आराधित श्रीगजाननद्वारा ती देवताहरूलाई दिव्य रूपप्रदर्शन' शीर्षकान्वित बाह्रौं अध्याय पूर्ण भयो ।।१२।।

ॐ

# त्रयोदशोऽध्याय: { १३ अध्याय }

व्यास उवाच

पञ्चास्यश्चतुरास्यश्च सहस्रमस्तकोऽपि च ।
गजास्यं वरदं देवं कथमेते प्रतुष्टुवु: ।।१।।

ब्रह्मोवाच

प्रसादोन्मुखविघ्नेशकृपापाङ्गनिरीक्षणात् ।
प्राप्तबुद्धिप्रसादास्ते केशास्तं नुनुवुस्तदा ।।२।।

ब्रह्मविष्णुमहेशा ऊचु:

अजन्निर्विकल्पं निराकारमेकं
निरानन्दमद्वैतमानन्दपूर्णम्।
परं निर्गुणं निर्विशेषं निरीहं
परब्रह्मरूपं गणेशं भजेम ।।३।।
गुणातीतमाद्यं चिदानन्दरूपं
चिदाभासकं सर्वगं ज्ञानगम्यम् ।
मुनिध्येयमाकाशरूपं परेशं
परब्रह्मरूपं गणेशं भजेम ।।४।।
जगत्कारणं कारणज्ञानरूपं
सुरादिं सुखादिं युगादिं गणेशम् ।
जगद्व्यापिनं विश्ववन्द्यं सुरेशं
परब्रह्मरूपं गणेशं भजेम ।।५।।
रजोयोगतो ब्रह्मरूपं श्रुतिज्ञं
सदा कार्यसक्तं हृदा चिन्त्यरूपम् ।
जगत्कारकं सर्वविद्यानिधानं
परब्रह्मरूपं गणेशं नता: स्म: ।।६।।
सदा सत्त्वयोगं मुदा क्रीडमानं
सुरारीन् हरन्तं जगत् पालयन्तम् ।
अनेकावतारं निजाज्ञानहारं
सदा विष्णुरूपं गणेशं नमाम: ।।७।।
तमोयोगिनं रुद्ररूपं त्रिनेत्रं
जगद्धारकं तारकं ज्ञानहेतुम् ।
अनेकागमै: स्वं जनं बोधयन्तं
सदा शर्वरूपं गणेशं नमाम: ।।८।।

**व्यासले भन्नुभयो** - पञ्चमुख सदाशिव, चतुर्मुख ब्रह्माजी र सहस्रशीर्षा नारायणले वरदायक गजानन श्रीगणेशदेवको स्तुति कसरी गर्नुभयो ? ।।१।।

**ब्रह्माजीले भन्नुभयो** - प्रसन्न र विघ्नेश श्रीगणेशको कृपादृष्टिबाट निर्मल बुद्धि प्राप्त गर्ने ब्रह्मा, शिव र नारायणले त्यस बेला निम्नअनुसार स्तुति गर्नुभयो।।२।।

**ब्रह्मा, विष्णु र महेशले भन्नुभयो** - अज, निर्विकल्प, निराकार, एकस्वरूप, निरानन्द, अद्वैत, आनन्दपूर्ण, परात्पर, निर्गुण, निर्विशेष र निरीह परब्रह्मरूप श्रीगणेशलाई भज्दछौं।।३।। गुणातीत, आद्य, चिदानन्दस्वरूप, चिदाभासकर्ता, सर्वत्र विद्यमान, सर्वग, ज्ञानगम्य, मुनिहरूद्वारा ध्यानयोग्य र आनन्दरूप परब्रह्म-स्वरूप श्रीगणेशलाई भज्दछौं ।।४।। जगत्का कारण, कारणका पनि कारण, कारणका ज्ञानरूप, आदिदेवरूप, आदिसुखरूप, आदियुगरूप, गुणहरूका स्वामी, जगद्व्यापक, विश्ववन्दनीय र देवताहरूका आराध्य, परब्रह्मरूप श्रीगणेशको भजन गर्दछौं ।।५।। रजोगुणको सम्पर्कबाट ब्रह्माजीका रूपमा अवतीर्ण, वेदका विशेषज्ञ, सदा सत्कार्यमा लीन, हृदयद्वारा ध्येय स्वरूपले सुहाउनुभएका, जगत्का सृष्टिकर्ता र सबै विद्याका निधि परब्रह्मरूप श्रीगणेशलाई नमस्कार गर्दछौं ।।६।। सदा सत्त्व गुणको सम्पर्कमा रहनुहुने, आनन्दपूर्वक लीला विहार गर्नुहुने, देवतत्त्वका विरोधीहरूलाई परास्त गर्नुहुने, संसारका रक्षक, अनेक अवतार लिएर धर्मको रक्षा गर्दै दुष्टहरूको नाश गर्नुहुने र भक्तका हृदयमा रहेको अन्धकारलाई नाश गर्नुहुने विष्णुका रूपमा रहनुभएका श्रीगणेशलाई नमस्कार गर्दछौं।।७।। तमोगुणसँग सम्पर्क गर्नुहुने, रुद्ररूप, जगत्का धर्ता, त्रिनयन, भक्तलाई संसारसागरबाट पार लगाउनुहुने, ज्ञानका हेतु र अनेक शास्त्रहरूको उपदेश दिएर भक्तहरूलाई सत्कर्म एवं पुरुषार्थ गर्न अभिप्रेरित गर्नुहुने सदाशिवरूप श्रीगणेशको वन्दना गर्दछौं।।८।। अन्धकारको पुञ्जलाई

तमस्तोमहारं जनाज्ञानहारं
त्रयीवेदसारं परब्रह्मपारम् ।
मुनिज्ञानकारं विदूरे विकारं
सदा ब्रह्मरूपं गणेशं नमामः ।।९।।
निजैरोषधीस्तर्पयन्तं करौघैः
सुरौघान् कलाभिः सुधास्राविणीभिः ।
दिनेशांशुसन्तापहारं द्विजेशं
शशाङ्कस्वरूपं गणेशं नमामः ।।१०।।
प्रकाशस्वरूपं नभोवायुरूपं
विकारादिहेतुं कलाकालभूतम् ।
अनेकक्रियाऽनेकशक्तिस्वरूपं
सदा शक्तिरूपं गणेशं नमामः ।।११।।
प्रधानस्वरूपं महत्तत्त्वरूपं
धरावारिरूपं दिगीशादिरूपम् ।
असत्सत्स्वरूपं जगद्धेतुभूतं
सदा विश्वरूपं गणेशं नताः स्मः ।।१२।।
त्वदीये मनः स्थापयेदङ्घ्रियुग्मे
जनो विघ्नसङ्घात्र पीडां लभेत ।
लसत्सूर्यबिम्बे विशाले स्थितोऽयं
जनो ध्वान्तबाधां कथं वा लभेत ।।१३।।
वयं भ्रामिताः सर्वथाज्ञानयोगा-
दलब्ध्वा तवाङ्घ्रिं बहून् वर्षपूगान् ।
इदानीमवाप्तास्तवैव प्रसादात्
प्रपन्नान् सदा पाहि विश्वम्भराद्य ।।१४।।

ब्रह्मोवाच

एवं स्तुतो गणेशस्तु सन्तुष्टोऽभून्महामुने ।
कृपया परयोपेतोऽभिधातुं तान् प्रचक्रमे ।।१५।।

गणेश उवाच

यदर्थं क्लेशिता यूयं यदर्थमिह चागताः ।
प्रीतोऽहमनया स्तुत्या वरं मत्तो वृणीत तम् ।।१६।।

हटाउनुहुने, मानिसका हृदयमा रहेको अज्ञानलाई निरस्त गर्नुहुने, यजु-साम र अथर्ववेदरूप त्रयीका सारतत्त्व, सबैलाई पार लगाउनुहुने, परब्रह्मका नामबाट प्रसिद्ध, मुनिहरूलाई ज्ञान प्रदान गर्नुहुने र विकारलाई टाढा पन्छाउनुहुने, सदा ब्रह्मरूप श्रीसूर्यका रूपमा प्रकाशमान श्रीगणेशलाई नमस्कार गर्दछौं ।।९।। आफ्नो किरणसमूहद्वारा वनस्पति र औषधिहरूलाई रसमय तुल्याउनु हुने, अमृतवर्षी कलाद्वारा देवताहरूलाई तृप्त एवं सन्तुष्ट तुल्याउनु हुने, सूर्य किरणबाट उत्पन्न सन्तापलाई हटाउनु हुने र नक्षत्रहरूका नायक चन्द्ररूप श्रीगणेशको वन्दना गर्दछौं ।।१०।। प्रकाशरूप, आकाशरूप, वायुरूप, विकारका आदिकारण, कलाका विकासक एवं संहारक, अनेक क्रिया र अनेक शक्तिका प्रमुख स्रोत श्रीशक्तिरूप श्रीगणेशको वन्दना गर्दछौं ।।११।। प्रकृतिका रूपमा रहनुहुने, महत्तत्त्वका रूपमा संसारमा व्याप्त हुनुहुने, पृथिवीरूप, जलरूप, दिक्पालरूप, असत्‌रूप, सत्‌रूप र जगत्‌का एकमात्र कारण विश्वब्रह्माण्डरूप श्रीगणेशको वन्दना गर्दछौं ।।१२।। जुन मानिसले हजुरका चरणयुगलमा आफ्नो मन लगाउँछ त्यसले विघ्नका समूहबाट उत्पन्न गरिने पीडा भोग्नु पर्दैन । विशाल एवं चहकिलो सूर्यमण्डलमा रहेको प्राणीले अन्धकारको पीडा किन भोग्नुपर्छ र ? ।।१३।। विश्वम्भर ! आद्यरूप ! हे श्रीगणेशदेव ! धेरै वर्षसम्म हजुरका चरणकमलको आश्रय नपाएर हामी अज्ञानवश जगत्‌मा भौंतारियौं, अहिले हजुरकै कृपाबाट हजुरका चरणकमलको दर्शन गर्ने अवसर पायौं । हामी शरणागत छौं । हाम्रो रक्षा गर्नुहोस् ।।१४।।

**ब्रह्माजीले भन्नुभयो** - हे महामुनि ! यसरी ब्रह्मा, विष्णु र शिवजीद्वारा स्तुति गरिएका भगवान् श्रीगणेश उहाँहरूप्रति अत्यन्त प्रसन्न हुनुभयो र परमकृपाले युक्त भई उहाँले त्रिदेवलाई भन्नुभयो ।।१५।।

**श्रीगणेशले भन्नुभयो** - जुन प्रयोजनका लागि तपाईंहरूले धेरै कष्ट भोग्नुपर्‍यो र जुन प्रयोजनका लागि यहाँ आउनुभएको छ, त्यो कुन प्रयोजन हो ? मलाई बताउनुहोस् । म तपाईंहरूको स्तुतिबाट प्रसन्न छु । मबाट आफूले चाहेको वरदान प्राप्त गर्नुहोस् ।।१६।। हे त्रिदेव !

कृतञ्च मम यत् स्तोत्रं भवद्भिर्भावितात्मभिः ।
स्तोत्रराजमिति ख्यातं भविष्यति ममाज्ञया ।।१७।।

इदं यः पठेत् प्रातरुत्थाय धीमान्
त्रिसन्ध्यं सदा भक्तियुक्तो विशुद्धः ।
स पुत्रान् श्रियं सर्वकामान् लभेत
परब्रह्मरूपो भवेदन्तकाले ।।१८।।

तपाइँहरूले भावविभोर भएर जुन मेरो स्तोत्र पाठ गर्नुभएको यो स्तोत्र मेरो आज्ञाबाट संसारमा स्तोत्रराजका रूपमा विख्यात हुनेछ ।।१७।। जुन बुद्धिमान् मानिसले प्रातःकालमा सबेरै उठी यो स्तोत्रको पाठ गर्दछ र जुन शुद्धाचरण भएको मानिसले भक्तिभावले ओतप्रोत भएर तीनवटै सन्ध्यामा यो स्तोत्रको पाठ गर्दछ, त्यसले पुत्र, सम्पत्ति र चिताएका सबै विषय प्राप्त गर्दछ। त्यो अन्तमा परब्रह्मरूप भएर ब्रह्ममा नै विलीन हुन्छ ।।१८।।

### ब्रह्मोवाच

इति तद्वचनं श्रुत्वा सन्तुष्टास्ते तमब्रुवन् ।
तदीक्षया रजःसत्त्वतमोगुणसमुद्भवाः ।।१९।।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशको दृष्टिबाट रजोगुण, तमोगुण र सत्त्वगुणबाट पैदा भएका ती तीन देवताहरू श्रीगणेशको त्यो वचन सुनेर सन्तुष्ट भए ।।१९।।

### त्रय ऊचुः

यदि तुष्टोऽसि देवेश ! सृष्टिसंहारकारक !
तवाङ्घ्रिकमले नोऽस्तु भक्तिरव्यभिचारिणी ।।२०।।

किं चास्माभिः प्रकर्तव्यमाज्ञापयतु नो भवान् ।
अयमेव वरोऽस्माकं वाञ्छितो द्विरदानन ।।२१।।

इति श्रुत्वा वचस्तेषां पुनः प्राह गजाननः ।
भविष्यति महाभागा मयि भक्तिर्दृढा हि वः ।।२२।।

सङ्कष्टानि यथा यूयं तरिष्यथ महान्त्यपि ।
भवत्ख्यात्यै प्रवक्ष्यामि कार्याणि च पृथक् पृथक् ।।२३।।

सृष्टिकर्ता भव ब्रह्मन् ! रजोगुणसमुद्भवः ।
पालनं कुरु विष्णो ! त्वं व्यापकः सत्त्वसंश्रयः ।।२४।।

हर ! संहर सर्वं त्वं तमोगुणसमुद्भवः ।

**त्रिदेवले भने** - सृष्टि र संहारका विधायक हे श्रीगणेश ! यदि हजुर सन्तुष्ट हुनुहुन्छ भने हजुरका चरणकमलमा हाम्रो निष्कलङ्क र निरन्तर भक्ति रहोस् ।।२०।। हे गजानन ! हामीहरूले कुन कर्तव्यपालन गर्नुपर्दछ ? त्यो आज्ञा गर्नुहोस्। हामीले चाहेको वरदान यही हो ।।२१।। तीन देवताहरूको प्रार्थना सुनेर भगवान् श्रीगणेशले भन्नुभयो - हे भाग्यशाली देवताहरू हो ! तपाइँहरूको ममा दृढ भक्ति हुनेछ ।।२२।। जसरी तपाइँहरूले ठूला-ठूला कष्टलाई पार गर्न सक्नु हुन्छ, ती छुट्टाछुट्टै कार्यहरू तपाइँहरूको प्रसिद्धिका लागि म बताउँछु।।२३।। हे विधाता ! तपाइँ रजोगुणबाट पैदा हुनुभएको छ, त्यस कारण तपाइँ सृष्टिकर्ता हुनुहोस् । हे विष्णु ! तपाइँ सत्त्वगुणबाट उत्पन्न हुनुभएको छ र व्यापक पनि हुनुहुन्छ, तसर्थ तपाइँले जगत्को पालन गर्नुहोस् ।।२४।। हे शिवजी ! तपाइँ तमोगुणबाट पैदा हुनुभएको छ, त्यस कारण तपाइँ संसारका संहारक देवता बन्नुहोस् ।

### ब्रह्मोवाच

वेदशास्त्रपुराणानि सृष्टिसामर्थ्यमेव च ।।२५।।

गणेशो दत्तवान् विद्यां ब्रह्मणे मह्यमादरात् ।
विष्णवे भगवान् प्रादात् योगात् स्वच्छन्दरूपताम् ।।२६।।

एकाक्षरं षडर्णं च मन्त्रं सर्वागमाँस्तथा ।
हराय भगवान् प्रादाच्छक्तिं संहरणेऽपि च ।।२७।।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशले मलाई अर्थात् ब्रह्माजीलाई वेद, शास्त्र, पुराण, सृष्टिशक्ति र अन्य विद्याहरू पनि आदरपूर्वक प्रदान गर्नुभयो। भगवान् श्रीगणेशले विष्णुलाई योगबाट स्वच्छन्द रूपमा विचरण गर्ने सामर्थ्य प्रदान गर्नुभयो ।।२५-२६।। भगवान् श्रीगणेशले शिवजीलाई आफ्ना एकाक्षरी मन्त्र, षडक्षरी मन्त्र, सबै शास्त्र र संहारशक्ति पनि प्रदान गर्नुभयो ।।२७।। त्यसपछि म ब्रह्माले दुःखी मनले

ततश्चाहं दीनमनास्त्रैलोक्येशं जगद्गुरुम् ।
उवाच प्राञ्जलिर्भूत्वा वरदं तमिभाननम् ।।२८।।

त्रिलोकीका स्वामी जगद्गुरु, वरदायक श्रीगणेशलाई हात जोडेर प्रार्थना गरें ।।२८।।

ब्रह्मोवाच

यथा गृहीतशक्तिस्तु वाच्यावाच्यं वेवेक्ति न ।
तथानेकविधां सृष्टिमदृष्ट्वा क्वापि किञ्चन ।।२९।।

कर्तुं वापि विभोराज्ञाविभेदं कथमुत्सहे ।
इतः कूप इतो वापीत्येवं प्राप्तं मया कथम् ।।३०।।

ततो गजाननः प्राह दिव्यं चक्षुः प्रदाय तम् ।
ब्रह्माणं वेदशास्त्रज्ञं तथा व्याकुलितं प्रभुः ।।३१।।

**ब्रह्माजीले भन्नुभयो** - "जस्तै अभिधा, लक्षणा र व्यञ्जनाजस्ता शब्दशक्तिसँग अपरिचित मानिसले अर्थ र अनर्थको विवेक गर्न सक्दैन, त्यस्तै सृष्टिका अनेक रूप नदेखीकन कुनै रूपमा पनि नयाँ सृष्टि गर्न सकिंदैन । हजुरको आज्ञाभङ्ग गर्न मैले कसरी उत्साह गरूँ ? अर्को तर्फ सृष्टिको स्वरूप नबुझीकन नयाँ सृष्टि कसरी गरूँ ? म दोधारमा परें । यहाँ कुवा हुनुपर्छ र यहाँ पोखरी हुनुपर्छ भन्ने ठाउँ ठम्याउन नसकी मैले सृष्टि कसरी गर्न सक्दछु ?" ब्रह्माजीको संशयपूर्ण वचन सुनेर प्रभु श्रीगणेशले वेद र शास्त्रका ज्ञाता तर व्याकुल अवस्थामा रहेका ब्रह्माजीलाई दिव्यचक्षु प्रदान गरेर भन्नुभयो ।।२९-३१।।

गजानन उवाच

बहिरन्तः शरीरे मे सङ्ख्यातीतानि पद्मज !
ब्रह्माण्डानि त्वमद्यैव विभ्रमन्ति विलोकय ।।३२।।

**श्रीगणेशले भन्नुभयो** - हे ब्रह्माजी ! मेरा शरीरका बाहिर र भित्र पनि असङ्ख्य ब्रह्माण्ड घुमिरहेका छन् । तपाईंले पनि ती ब्रह्माण्डलाई मेरै शरीरमा भर्खरै हेर्न सक्नु हुन्छ ।।३२।।

ब्रह्मोवाच

ततो गजाननेनाऽहं स्वोदरे श्वासवायुना ।
नीतो ददर्श धाताऽपि ब्रह्माण्डानि त्वनेकशः ।
औदुम्बराणीव तरौ तेषु वा मशकानिव ।।३३।।

भेदयामास तत्रैकं परमेण स्वतेजसा ।
तदन्तः सकलां सृष्टिं ददर्शाऽथ पुनः पुनः ।।३४।।

ब्रह्माणं चापरं तत्र विष्णुमिन्द्रं प्रजापतिम् ।
शङ्करं भास्करं वायुं वनानि सरितोऽम्बुपम् ।।३५।।

सागरान् यक्षगन्धर्वानप्सरःकिन्नरोरगान् ।
ऋषीन् पुण्यजनान् साध्यान् मनुष्यान् पर्वतान् द्रुमान् ।।३६।।

उद्भिज्जान् जारजान् जन्तून् स्वेदजानण्डजानपि ।
पृथ्वीञ्च सप्तपातालान्यव्ययान्येकविंशतिम् ।।३७।।

ददर्श विश्वं चाहं वै भावाभावं चराचरम् ।।३८।।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि श्रीगणेशले मलाई श्वास वायुले खिंचेर आफ्नो पेटभित्र पुऱ्याउनुभयो । त्यस बेला मैले डुम्रीको रूखमा फलहरू लटरम्म रहेझैं र डुम्रीका फलहरूभित्र स्याउँ स्याउँ लामखुट्टे रहेझैं श्रीगणेशका पेटभित्र अनेक ब्रह्माण्ड देखें ।।३३।। श्रीगणेशले आफ्नो परमतेजबाट आफूमा अन्तर्निहित ब्रह्माण्डहरूमध्ये एउटा ब्रह्माण्डको भेदन गर्नुभयो र त्यसभित्र रहेको सम्पूर्ण सृष्टिको वारपार सबै कुरा वारंवार विलोकन गर्नुभयो ।।३४।। श्रीगणेशद्वारा देखाइएको त्यस सृष्टिमा ब्रह्मा, विष्णु, प्रजापति, शङ्कर, सूर्य, वायु, वन, नदी, बादल, सागर, यक्ष, गन्धर्व, अप्सरा, किन्नर, चन्द्रमा, ऋषि, गन्धर्व एवं राक्षस, साध्यजन, पर्वत, वृक्ष, मानिस, उद्भिज, जरायुज, स्वेदज र अण्डज प्राणीहरूका साथ पृथिवी सातै पाताल, एक्काइस प्रकारका स्वर्ग, सारा संसार र मूर्त एवं अमूर्त चराचरको समेत मैले दर्शन गरें ।।३५-३८।।

यद् यच्चाहं भेदयामास चाण्डं
तस्मिँस्तस्मिन् सर्वमेवं ददर्श ।
दृष्ट्वा भ्रान्तिं पूर्ववत् सम्प्रपेदे
तेषामन्तं सर्वथा नाध्यगच्छम् ।।३९।।

न स्थातुं नैव वा गन्तुं शशाक कमलासन: ।
उपविश्य ततो ब्रह्मन् ! तुष्टाव द्विरदाननम् ।।४०।।

ब्रह्मोवाच

वन्दे देवं देवदेवं गणेशं
ब्रह्माण्डानां नैव सङ्ख्या यदङ्गे ।
अभ्रोडूनां सागरे वा झषाणां
क: सङ्ख्याता शर्कराणां च तीरे ।।४१।।
लज्जा न मेऽत्रास्ति सुरेन्द्रवन्द्य !
पादारविन्दं तव यद् विलोक्य ।
भ्रान्तोऽभवं ज्ञाननिधौ प्रसन्ने
मोक्षोऽपि तुच्छ: किमुताऽन्यवार्ता ।।४२।।
दृष्टञ्च नानार्थयुतं सुरेश
ब्रह्माण्डकूटं जठरे त्वदीये ।
स्थातुं बहिर्गन्तुमपीह नेश-
स्त्वदन्यदेवं शरणं न चैमि ।।४३।।
तत: प्रसन्नो भगवाननन्तो वै गजानन: ।
बहिर्निष्कासयामास तदा मां खिन्नमानसम् ।।४४।।
नासिकारन्ध्रमार्गेण हरिं मदनुयायिनम् ।
तामसञ्च हरं देवं विष्णुना सह सङ्गतम् ।।४५।।
नि:सारयामास विभु: श्रुतिरन्ध्राद् गजानन: ।
शयाते स्म तदङ्गे तावुभौ हरिहरौ सुखम् ।।४६।।

फेरि मैले जुन जुन ब्रह्माण्डको भेदन गरें, त्यहाँ त्यहाँ ती सबै विषयलाई त्यसरी नै देखें । ती सारा ब्रह्माण्ड देखेर मेरो मनमा पहिलेजस्तो भ्रान्ति पैदा भयो । वास्तवमा मैले ती ब्रह्माण्डहरूको पार पाउन सकिनँ । हे वेदव्यास ! म त्यस बेला कमलको आसनमा बस्न र त्यहाँबाट अन्यत्र जान पनि सकिनँ । मैले त्यहीं बसी बसी गजानन श्रीगणेश प्रभुको स्तुति गरें ।।३९-४०।।

**ब्रह्माजीले भन्नुभयो** - देवताहरूका पनि देवता मेरा आराध्यदेव श्रीगणेशको वन्दना गर्दछु । जसरी आकाशका तारा, सागरका माछा र नदी अथवा सागरका तीरमा रहेका बालुवाको गणना गर्न सकिंदैन त्यसैगरी श्रीगणेश प्रभुमा रहेका ब्रह्माण्डहरूको गणना गर्न पनि सकिंदैन ।।४१।। हे देवताहरूका वन्दनीय परमात्मा! हजुरका चरणकमलको दर्शन गरेर म भ्रान्तिमा परें भन्नुपर्दा मलाई कत्ति पनि लाज लाग्दैन । ज्ञानका सागर तपाईं प्रसन्न हुनुभएमा मेरा लागि मोक्ष पनि तुच्छ हुनेछ, अरू के भनूँ ? ।।४२।। देवताहरूका स्वामी हे गणेश प्रभु ! मैले हजुरका पेटभित्र सम्पूर्ण सृष्टिका पदार्थले परिपूर्ण ब्रह्माण्डहरूको दर्शन गरें, अहिले म उभिन र बाहिर जान पनि असमर्थ छु । हजुरबाहेक अरू कुनै मेरो शरण पनि देखेको छैन ।।४३।। स्तुतिपछि प्रसन्न हुनुभएका अनन्तरूप भगवान् श्रीगणेशले खिन्न अवस्थामा रहेको मलाई आफ्नो पेटबाट बाहिर निकाल्नुभयो ।।४४।। त्यसपछि श्रीगणेशका शरीरभित्र सुखपूर्वक निदाइरहेका विष्णु र शिवजीलाई पनि श्रीगणेशले बाहिर निकाल्नुभयो । मेरा पछि रहनुभएका नारायणलाई उहाँले नाकका प्वालबाट बाहिर निकाल्नुभयो भने नारायणका पछि रहनुभएका तमोगुणी देवता सदाशिवलाई कानका प्वालबाट बाहिर निकाल्नुभयो ।।४५-४६।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे ब्रह्मस्तुतिवर्णनं नाम त्रयोदशोऽध्याय:**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'श्रीगणेशद्वारा देवत्रयको कार्यविभाजन र ब्रह्माजीद्वारा श्रीगणेशको स्तुति' शीर्षकान्वित तेह्रौं अध्याय पूर्ण भयो ।।१३।।

ॐ

## चतुर्दशोऽध्यायः { १४ अध्याय }

राजोवाच

ततः किमकरोद् ब्रह्मा वीक्ष्याण्डानि सहस्रशः ।
कथञ्च सृष्टिमकरोदाज्ञां प्राप्य गजाननात् ।।१।।

भृगुरुवाच

अभवद् गर्वसम्पन्नः स्वात्मन्येवं विचारयन् ।
वेद्मि शास्त्राणि वेदाँश्च पुराणान्यागमानपि ।।२।।

ज्ञानविज्ञानसम्पन्नः शापानुग्रहशक्तिमान् ।
ब्रह्माण्डानि च दृष्टानि सृष्टीनां रचनास्तथा ।।३।।

इदानीं सृष्टिकरणेऽशक्यं मे नैव किञ्चन ।
इत्येवं सर्वसम्पन्ने सृष्ट्यर्थं कमलोद्भवे ।।४।।

विघ्ना नानाविधा भूप ! प्रादुरासन् सहस्रशः ।
तं वेष्टयित्वा ब्रह्माणं स्थिताः परमदारुणाः ।।५।।

यथा मत्ताः पुष्परसैः सरघा मधुजालकम् ।
त्रिनेत्राः पञ्चहस्ताश्च कूपास्याः सप्तपाणयः ।।६।।

त्र्यङ्घ्रयः पञ्चतुण्डाश्च सप्ततुण्डाः षडङ्घ्रयः ।
दशास्याः पञ्चपादाश्च तालदन्ता वृकोदराः ।।७।।

नानारूपा महासत्वाः सङ्ख्यातुं न च ते क्षमाः ।
चकम्पे द्रुहिणस्तेषां नानारावान् निशम्य तान् ।।८।।

केचित् तं मुष्टिभिर्जघ्नुर्नेमुश्च नुनुवुः परे ।
चतुःशिखासु सङ्गृह्य दोलयामासुरादरात् ।।९।।

चत्वार्यपि मुखान्यस्य जहसुस्तं तथा परे ।
निनिन्दुश्च प्रशंसाञ्च चक्रुः केचित् सिषेविरे ।।१०।।

मोचयामासुरपरे बबन्धुरपरे पुनः ।
मोचितं पुनरप्यन्ये विचकर्षुरितस्ततः ।।११।।

**सोमकान्तले भने** - श्रीगणेशका शरीरमा हजारौं ब्रह्माण्ड देखेपछि ब्रह्माले के गर्नुभयो ? र उहाँले गजाननबाट आज्ञा पाएर कसरी सृष्टि गर्नुभयो ? ।।१।।

**भृगुले भन्नुभयो** - त्यसपछि ब्रह्माजीले मनमनै विचार गर्नुभयो- म शास्त्र, वेद, पुराण, आगम जान्दछु, ज्ञान-विज्ञानसम्पन्न छु, सराप र वरदान दिन समर्थ छु, मैले ब्रह्माण्डहरूको र सृष्टिका नानाथरिका रचनाहरूको अवलोकन गरेको छु र यसबेला मैले सृष्टिकार्य गर्न नसक्ने कुनै कारण छैन । यसरी विचार गरेपछि कता-कता ब्रह्माजीका मनमा अभिमान भरियो। म सर्वशक्तिसम्पन्न छु भन्ने ब्रह्माजीले कार्यारम्भ गर्न लाग्दा हजारौंथरिका विघ्न आइलागे। ब्रह्माजीलाई चारैतिरबाट डरलाग्दा प्राणीले घेर्न थाले । जसरी फूलको रसपान गरी मातेको माहुरीले महको चाकालाई ढाकिदिन्छ त्यसैगरी ब्रह्माजीलाई पनि नानाथरिका प्राणीहरूले घेरे । ती प्राणीमध्ये केही तीन आँखा भएका, केही पाँच हात भएका, केही कुवाझैं चौडा मुख भएका, केही सात हात भएका, केही तीन खुट्टा भएका, केही पाँच मुख भएका, केही सात मुख भएका, केही छ खुट्टा भएका, केही दश मुख भएका, केही पाँच खुट्टा भएका, केही ताडीको पातझैं चौडा दाँत भएका र केही ठूलो पेट भएका प्राणीहरू थिए ।।२-७।। अनेक रूप र ठूलो ज्यान भएका ती प्राणीहरू असङ्ख्य थिए । ती ठूलो-ठूलो स्वरले चिच्याएको सुनेर ब्रह्माजी साह्रै डराउनुभयो ।।८।। तीमध्ये केही प्राणीले ब्रह्माजीलाई मुड्कीले प्रहार गरे, कुनैले प्रणाम गरे र केहीले स्तुति पनि गरे । कसैले चार टाउकामा रहेका टुप्पी समातेर ब्रह्माजीलाई पिङमा मच्चाएझैं मच्चाउन थाले ।।९।। त्यस बेला ब्रह्माजीका चारैमुखबाट डरलाग्दो हाँसो छुटिरहेको थियो । त्यस समयमा कुनै प्राणीले ब्रह्माजीको निन्दा गरिरहेका थिए भने कुनैले प्रशंसा पनि गरिरहेका थिए। कुनै प्राणीले ब्रह्माजीको सेवा गरिरहेका थिए, कसैले उहाँलाई डोरीले बाँधिरहेका थिए भने कसैले उहाँको बन्धन फुकाइरहेका थिए । कसैले बन्धनमुक्त भएका ब्रह्माजीलाई

आलिलिङ्गुश्च तं केचिच्चुचुम्बुः शिशुवत् परे ।
अष्टश्मश्रुषु तं धृत्वा ननर्त्त कोष्ठहस्तवान् ।।१२।।

एवं स परवान् ब्रह्मा चिन्ताशोकसमन्वितः ।
अखर्वं सृष्टिगर्वं तं तत्याज हृदि सङ्गतम् ।।१३।।

जगाम महतीं मूर्च्छां निराशः स्वस्य जीवने ।
मुहूर्त्तमात्रे तु गते सस्मार मनसा विभुम् ।।
प्रार्थयामास कारुण्याद् रुदन्निव गजाननम् ।।१४।।

ब्रह्मोवाच

न चायुष्यं स्वल्पं विविधजनने सक्तमनसो
न मे तत्त्वज्ञानं भवजलधितारं सुविमलम् ।
जनुर्भूमौ लब्ध्वा तव भजनतो यामि परमां
कदा भुक्तिं मुक्तिं निरुपमसुखां वाऽखिलगुरो।।१५।।

त्वत्कटाक्षामृतेनाक्तो भक्तः सीदति ते विभो ।
इयं लज्जा तवैवास्तां न मे मृत्युश्चिरायुषः ।।१६।।

भृगुरुवाच

इत्यसौ प्रार्थयन्नेव शुश्राव गगनेरिताम् ।
गिरं तपस्वेति ततः प्रार्थयामास तां पुनः ।।१७।।

अन्तर्हिताश्च ते विघ्नाः श्रुतायां नभसो गिरि ।
नानारूपा महावीर्या मुक्त्वा तं कमलासनम् ।।१८।।

स मुक्तश्चिन्तयामास पद्मयोनिर्महायशाः ।
विना मन्त्रं विना स्थानं कथं तप्स्ये तपो महत् ।।१९।।

इति व्याकुलचित्तोऽसौ बभ्राम जलमध्यतः ।
अनन्यमनसा ध्यायन् गजाननमनामयम् ।।२०।।

मुकुटेन विराजन्तं मुक्तारत्नयुजा शुभम् ।
रक्तचन्दनलिप्ताङ्गं सिन्दूरारुणमस्तकम् ।।२१।।

तानेर यता र उति गराइरहेका थिए ।।१०-११।। कसैले ब्रह्माजीलाई आलिङ्गन गर्दै थिए, कोही उहाँलाई बालकझैं मानी चुम्बन गरिरहेका थिए । पर्खालझैं ठूला पाखुरा भएका कुनै प्राणी ब्रह्माजीका चार मुखका चार दाह्री र चार जुङ्गा तानेर नाचिरहेका थिए ।।१२।। यस्तो विचित्रको विपत्ति भोगेपछि ब्रह्माजी पराधीन हुनुभयो । चिन्ता र शोकले युक्त भएका ब्रह्माजी म सम्पूर्ण सृष्टि गर्न सिपालु छु भन्ने मनमा जमेको ठूलो अभिमानबाट पनि मुक्त हुनुभयो ।।१३।। ब्रह्माजी आफ्नै जीवनबाट निराश भएपछि ठूलो मूर्च्छामा पर्नुभयो। मूर्च्छाको एक मुहूर्त बितेपछि होशमा आएर उहाँले मनबाट गजानन प्रभुलाई सम्झनुभयो। त्यसपछि रुँदै कारुणिक मुद्रामा श्रीगणेशको प्रार्थना गर्नुभयो।।१४।।

**ब्रह्माजीले भन्नुभयो -** संसारका गुरु हे श्रीगणेश प्रभु ! संसारको सृष्टिकार्यको अभिभारा बोकेर त्यसमा नित्य लागिरहने मेरा लागि विशाल आयु बाँच्नु एउटा विवशता हो । मेरो आयु छोटो छैन, संसारसागरबाट पारि तर्नसक्ने निर्मल तत्त्वज्ञान पनि ममा छैन । यस पृथिवीमा जन्मेर तपाईंको भजन गरी कहिले आनन्ददायक मुक्ति पाउन सकुँला ? र कहिले अनुपम आनन्दको साम्राज्य मुक्तिमा रम्न पाउँला ?।।१५।। हे विभु! तपाईंको कृपाकटाक्षबाट अभिषिक्त यो तपाईंको भक्त वेदनाले परिपूर्ण छ । तपाईंका भक्तले दुःख पाउनुभनेको तपाईंलाई नै लज्जादायक विषय हो । म चिरायु छु, त्यस कारण मेरा लागि मृत्युको विषय ठूलो कुरा होइन ।।१६।।

**भृगुले भन्नुभयो -** यसरी प्रार्थना गर्ने ब्रह्माजीले **तिमीले तपस्या गर** भन्ने आकाशवाणी सुन्नुभयो । त्यसपछि उहाँले फेरि गजानन प्रभुको प्रार्थना गर्नुभयो ।।१७।। आकाशवाणी भएपछि ती अनेक थरि ठूला विघ्नले ब्रह्माजीलाई छाडि-दिए।।१८।। चिन्तामुक्त हुनुभएका यशस्वी कमलासन ब्रह्माजीले विचार गर्नुभयो- विना मन्त्र र विना आधार मैले कसरी ठूलो तपस्या गरूँ?।।१९।। यसरी व्याकुल चित्त भएका ब्रह्माजी अनन्य मनबाट गजानन गुरु श्रीगणेशको ध्यान गर्दै पानीको बीचमा यताउति भ्रमण गर्न थाल्नुभयो ।।२०।। मोती र रत्नले जडित मुकुटले सुहाउनुभएका, अङ्ग-अङ्गमा

मुक्तादामलसत्कण्ठं सर्पयज्ञोपवीतिनम् ।
अनर्घ्यरत्नघटितबाहुभूषणभूषितम् ।।२२।।

स्फुरन्मरकतभ्राजदङ्गुलीयकशोभितम् ।
महाहिवेष्टितबृहन्नाभिशोभिमहोदरम् ।।२३।।

विचित्ररत्नखचितकटिसूत्रविराजितम् ।
सुवर्णसूत्रविलसद्रक्तवस्त्रसमावृतम् ।।२४।।

भालचन्द्रं लसद्दन्तशोभाराजत्करं परम् ।
एवं ध्यायति तस्मिँस्तु पुनरेव नभोवचः ।।२५।।

उदियाय वटं पश्य वटं पश्येति सुन्दरम् ।
श्रुत्वेति वचनं ब्रह्मा पुनश्चिन्तामवाप सः ।।२६।।

रातो चन्दन लेपन गर्नुभएका, सिन्दूर धारणका कारण रातो रङ्गले रङ्गिएको मस्तकद्वारा सुहाउनुभएका, घाँटीमा मोतीको हार धारण गरी अत्यन्त शोभायमान, सर्पको माला धारण गर्नुहुने, भुजामा बहुमूल्य रत्नजडित केयूर धारण गर्नुहुने, औँलामा चम्किलो मरकत मणिले बनेको औँठी धारण गर्नुहुने, ठूलो सर्पले वेष्टित सुन्दर नाभिबाट शोभायमान भएको विशाल पेट धारण गर्नुहुने, विचित्र रत्नमय कन्धनीले सुहाउनुभएका, सुनको धागोले सिएका राता रङ्गका वस्त्र धारण गर्नुहुने, एउटा दाँतले सुहाउनुभएका, आकर्षक सूँढ धारण गर्नुहुने र मस्तकमा धारण गरिएको चन्द्रमाद्वारा ज्योतिर्मय देखिनुभएका गजानन श्रीगणेशको ब्रह्माजीले ध्यान गर्नुभयो । यसरी उहाँले ध्यान गरेको समयमा वरको वृक्ष हेर, वरको वृक्ष हेर भन्ने आकाशवाणी उहाँले सुन्नुभयो । यस्तो आकाशवाणी सुनेपछि ब्रह्माजी फेरि चिन्तामा मग्न हुनुभयो ।।२१-२६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे ब्रह्मचिन्तावर्णनं नाम चतुर्दशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको ''विघ्नका कारण व्याकुल ब्रह्माजीलाई 'तिमीले तपस्या गर' भन्ने आकाशवाणी श्रवणपछि चिन्ता'' शीर्षकान्वित चौधौं अध्याय पूर्ण भयो ।।१४।।

ॐ

# पञ्चदशोऽध्यायः { १५ अध्याय }

भृगुरुवाच

व्यासायाकथयच्चाग्रे ब्रह्मा लोकपितामहः ।
सोमकान्त ! प्रवक्ष्यामि तां कथां शृणु सादरम् ।।१।।

ब्रह्मोवाच

ततोऽहं सुमहत् स्वप्नं ददर्श मुनिसत्तम ।
भ्रमता भ्रमता व्योमजले दृष्टो वटो महान् ।।२।।

महावातातपाद्भिस्तु नष्टे स्थावरजङ्गमे ।
अवशिष्टः कथमयमेक एव वटो महान् ।।३।।

एवं संशयमापन्नस्तत्पत्रे बालकं लघुम् ।
चतुर्बाहुं सुमुकुटं कुण्डलाभ्यां विराजितम् ।।४।।

मणिमुक्तामयं दाम बिभ्रत् कण्ठे सुशोभितम् ।
अर्धचन्द्रं रक्तवस्त्रं कटिसूत्रं तथैव च ।।५।।

एकदन्तं नरवपुर्गजास्यं तेजसा ज्वलत् ।
दृष्ट्वैवं तर्कयामास बालकं कथमत्र वै ।।६।।

पुष्करेण च बालोऽसौ जलं मन्मस्तकेऽक्षिपत् ।
ततोऽहमाजहासोच्चैश्चिन्तानन्दसमन्वितः ।।७।।

मय्याहसति बालः स उत्ततार वटात्ततः ।
स ममाङ्कं समागत्य मञ्जुवाक्यं जगाद ह ।।८।।

बाल उवाच

लघोर्लघुतरोऽसि त्वं वृथा वृद्धोऽपि मूढधीः ।
विघ्नैरभिहतोऽसि त्वं सृष्टिचिन्तासमावृतः ।।९।।

तपश्चिन्तापरो नित्यं विभ्रमञ्जलमध्यगः ।
सर्वचिन्ताहरं तेऽमुमुपायं चतुरानन ।।१०।।

उपादिशामि ते मन्त्रमेकाक्षरमिमं मम ।
पुरश्चरणमार्गेण दशलक्षं जपस्व तम् ।।११।।
ततः प्रत्यक्षतां यास्ये दास्ये सामर्थ्यमुत्तमम् ।

**भृगुले भन्नुभयो-** हे सोमकान्त ! लोकपितामह ब्रह्माजीले फेरि वेदव्यासलाई भन्नुभयो - त्यसपछिको कथा म तपाईंलाई सुनाउँछु । तपाईंले आदरपूर्वक त्यो कथा सुन्नुहोस् ।।१।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! त्यसपछि मैले ठूलो सपना देखें । अब म सपनामा देखेको विषय बताउँछु । म पानीमा घुमिरहेको बेला आकाशको जलमा ठूलो वरको रूख देखें ।।२।। महावात, अनन्त जलराशि र प्रचण्ड सूर्यको तेजबाट सबै चराचर नष्ट भएपछि यो वटवृक्ष कसरी बाँकी रह्यो ? यस्तो संशय मेरो मनमा उदायो ।।३।। संशयमा परेको बेला मैले वरको एउटा पातमा चतुर्बाहु, सुन्दर मुकुटधारी, कानमा धारण गरिएका कुण्डलले सुहाएका, कण्ठमा मणि र मोतीको हार पहिरेर अत्यन्त देदीप्यमान, मस्तकमा आधा चन्द्रमा धारण गर्ने, सुन्दर कन्धनी लगाएका, एकदन्तले शोभायमान र हात्तीको मुख एवं मानिसको शरीर भएका एउटा तेजस्वी बालकलाई देखें । त्यस बेला मेरो मनमा तर्क भयो - यस्ता बालक यहाँ कसरी आइपुगे ?।।४-६।। त्यसपछि ती बालकले आफ्नो सूँढबाट मेरो शिरमा जलले सेचन गरे । म चिन्ता र आनन्दले परिपूर्ण भई ठूलो अट्टहास गरेर हाँसे ।।७।। म हाँसेपछि ती बालक वरको रूखबाट भुइँमा ओर्लेर मेरो काखमा बस्न आए । त्यसपछि तिनले मीठा वचनद्वारा मलाई भने ।।८।।

**बालकले भने** - हे ब्रह्माजी ! तिमी बूढा भएर पनि सानो हृदयका छुद्र पुरुष रहेछौ, तिम्रो बुद्धि मूढ रहेछ, सृष्टि कसरी गरूँ भन्ने चिन्ताले चिन्तित तिमीले विघ्नहरूबाट पाइला-पाइलामा हण्डर खायौ, त्यसपछि तपस्या कसरी गरूँ भन्ने चिन्ताले जेलिएका तिमी पानीका बीचमा घुम्दै यता र उता गरिरहेका छौ। हे चतुर्मुख ! म तिमीलाई तिम्रा सबै चिन्ताबाट मुक्त गराउने एउटा उपाय बताउँछु । अब म तिमीलाई मेरो एकाक्षरी मन्त्रको उपदेश गर्दछु । तिमीले पुरश्चरणको विधिबाट त्यो एकाक्षरी मन्त्र दश लाख सङ्ख्यामा जप ।।९-११।। त्यसपछि मैले तिमीलाई प्रत्यक्ष दर्शन दिएर सृष्टि गर्ने सामर्थ्य प्रदान गर्नेछु ।

ब्रह्मोवाच

दृष्ट्वैवं स्वप्नमाश्चर्यं प्रतिबुद्धोऽभवं ह्यहम् ।।१२।।

शुशोच च कदा मे स्याद् दर्शनं परमेशितुः ।
दृष्टस्वप्नोऽभवं मग्न आनन्दमयसागरे ।।१३।।

ततः स्नात्वा परं मन्त्रं जजाप बहुवासरम् ।
एकपादेन कमले तिष्ठन् ध्यायन् गजाननम् ।।१४।।

जितेन्द्रियो जिताहारः काष्ठपाषाणवत् स्थिरः ।
दिव्यवर्षसहस्त्रं स तपस्तेपे परं महत् ।।१५।।

ततो मन्मुखतो ज्वालाः प्रादुरासन् दुरासदाः ।
ताभिः सर्वाणि भूतानि पीडामापुः सुदारुणाम् ।।१६।।

ततो गजाननो दृष्ट्वा तां निष्ठां मम सुदृढाम् ।
तुतोष परया भक्त्या प्रादुरासीत् ततः पुरः ।।१७।।

कोटिसूर्यसमानश्रीर्ज्वालामालीव हव्यभुक् ।
दहन्निव त्रिलोकीं स संहरन्निव रोदसी ।।१८।।

परशुकमलधारी दिव्यमायाविभूषः
सकलदुरितहारी सर्वसौन्दर्यकोशः ।
करिवरमुखशोभी भक्तवाञ्छाप्रपोषः
सुरमनुजमुनीनां सर्वविघ्नैकनाशः।।१९।।

तेजोराशिमहं दृष्ट्वा चकम्पे व्यास ! सन्मुने ।
चिन्तामवाप परमां व्यग्रचित्तो जपाच्च्युतः ।।२०।।

आच्छादितानीक्षणानि स्मृतिश्च विलयं गता ।
दृष्ट्वेदृशीमवस्थां तां शीघ्रं प्राहाऽथ विघ्नराट् ।।२१।।

गणेश उवाच

न भयं कुरु लोकेश ! स एवाहं समागतः ।
येन ते मन्त्र आदेशि स्वप्न एकाक्षरः शुभः ।।२२।।

**ब्रह्माजीले भन्नुभयो** - यस्तो आश्चर्यजनक सपना देखेपछि म जागेंछु । त्यस बेला मैले सपनामा देखेका परमेश्वर श्रीगणेशको विपनामा दर्शन कुन समयमा पाउँला भन्ने कुरा सोचें । विचित्र र सुन्दर सपना देखेकोमा म आनन्दको सागरमा मग्न पनि भएँ ।।१२-१३।। त्यसपछि दिनदिनै स्नान गरेपछि मैले धेरै दिनसम्म श्रीगणेशका महामन्त्रको जप गरिरहें । त्यो मन्त्रसाधना गर्दा म कमलमाथि एउटा पाउले टेकेर उभिएको थिएँ र भगवान् श्रीगणेशको ध्यान गरिरहेको थिएँ। मैले जितेन्द्रिय भई भोजन-पानी परित्याग गरी काठ र ढुङ्गाझैं निश्चल भएर दिव्य हजार वर्षसम्म एकाक्षरी मन्त्र जप्दै ठूलो तपस्या गरें ।।१४-१५।। त्यो दिव्य हजार वर्षको तपस्या पूरा भएपछि मेरा मुखबाट असह्य अनेक अग्निज्वाला प्रकट भए । ती अग्निज्वालाबाट सम्पूर्ण प्राणीहरूले प्रचण्ड पीडा भोग्नुपऱ्यो। त्यसपछि श्रीगणेश मेरो परमनिष्ठा र अविचल भक्ति देखेर अत्यन्त प्रसन्न हुनु भई मेरा सामु प्रकट हुनुभयो ।।१६-१७।। हे वेदव्यास ! कोटिसूर्यसमान आभाले सुहाउनुभएका, चरुको हवनबाट प्रसन्न भएका अग्निदेवताझैं तेजस्वी, आफ्नो तेजबाट स्वर्ग, मर्त्य र पाताललाई डढाउन लाग्नुभएझैं देखिनुभएका, पृथिवी र अन्तरिक्षको संहार गर्न लागेझैं तेजस्वी स्वरूपले सुहाउनुभएका, परशु र कमल धारण गर्नुभएका, दिव्यमालाद्वारा विभूषित सबै सौन्दर्यका खानी, सम्पूर्ण पाप नाश गर्ने, हात्तीको जस्तो मुखद्वारा शोभायमान, भक्तहरूको इच्छा पूरा गराउनुहुने र देवता, मुनि र मानिसहरूका सबै विघ्न सखाप पार्नुहुने, तेजोमय श्रीगणेशको दर्शन पाएर म डरले काँप्न थालें । व्यग्र भएर जपबाट च्युत भएँ, अनि ठूलो चिन्तामा परें । मेरा आँखा धमिला भए। मैले कतै केही देख्न सकिनँ। मसँग संझना गर्न सक्ने शक्ति पनि रहेन । मेरो यो अवस्था देखेर विघ्नराज श्रीगणेशले मलाई सम्बोधन गर्दै भन्नुभयो ।।१८-२१।।

**श्रीगणेशले भन्नुभयो** - हे लोकपितामह ब्रह्माजी ! तपाईं नडराउनुहोस् । जसले तपाईंलाई सपनामा मङ्गलमय एकाक्षरी मन्त्रको उपदेश गरेको थियो, त्यो उपदेशक म नै हुँ र यहाँ तपाईंका सामु आएको छु ।।२२।। हे ब्रह्माजी !

तेन सिद्धिरनुप्राप्ता वरं दातुं समागतः ।
सौम्यभावं प्रपन्नोऽस्मि वरं वरय सुव्रत ।।२३।।

दास्यामि ते प्रसन्नोऽहं यद् यत् ते हृदि वर्तते ।
मयि प्रसन्ने सर्वं तद् भविता नात्र संशयः ।।२४।।

मुनिरुवाच

इत्थं निशम्य गणनाथवचो विशुद्धं
ब्रह्मा जहर्ष परमं प्रसमीक्षमाणः ।
नत्वा चराचरगुरुं सकलैः शिरोभिः
प्राह प्रसन्नहृदयः सफलं जनुर्मे ।।२५।।

ब्रह्मोवाच

यो वेदानां सशास्त्राणां ज्ञानिनां योगिनामपि ।
सर्वोपनिषदां चैव गोचरो न कदाचन ।।२६।।

स पुण्यनिचयैर्मेऽद्य यातः प्रत्यक्षतां विभुः ।
अनादिनिधनोऽनन्तोऽप्रमेयो निर्गुणोऽपि च ।।२७।।

यदि प्रसन्नो देवेश ! विघ्नेश ! करुणाकर !
तव भक्तिं दृढां देहि यया दुःखं न नः स्पृशेत् ।।२८।।

इदानीं देहि सामर्थ्यं नाना निर्माणने मम ।
विघ्नानि च शमं यान्तु यदि तुष्टोऽसि मे प्रभो ।।२९।।

स्मृतमात्रः सदा मे त्वं सर्वं कार्यं समापय ।
अन्ते मुक्तिं स्थिरां देहि ज्ञानञ्च विमलं मम ।।३०।।

गजानन उवाच

एवमस्तु कुरुष्व त्वं सृष्टिं नानाविधां बहुम् ।
मां स्मृत्वा सर्वविघ्नानि नाशं यास्यन्ति सर्वतः ।।३१।।

दृढा भक्तिः शुभं ज्ञानं मत्प्रसादाद्भविष्यति ।
निःशङ्कं कुरु कार्याणि सर्वाणि चतुरानन ।।३२।।

मुनिरुवाच

एवं लब्धवरो ब्रह्मा पूजयामास तं विभुम् ।
यद् यच्चित्तेऽचिन्तयत् स तत् तदेवोपतिष्ठते ।।३३।।

जपद्वारा तपाइँले ठूलो सिद्धि प्राप्त गर्नुभएको छ । म वरदान दिन तपाइँका सामु आएको छु । म तपाइँको भक्तिबाट भावावेशमा प्राप्त भएको छु । हे सुव्रत ! तपाइँले मसँग वर माग्नुहोस् । म तपाइँसँग प्रसन्न छु ।।२३।। तपाइँको हृदयले जस्ता पदार्थहरूको चाहना गरेको छ, ती सबै पदार्थ प्रदान गर्न म तयार छु । म प्रसन्न भएपछि तपाइँका सबै चाहना पूरा हुनेछन् । यसमा कत्ति पनि शङ्का मान्नुपर्दैन ।।२४।।

**भृगुले भन्नुभयो** - यसरी श्रीगणेशका वचन सुनेपछि परमतत्त्व श्रीगणेशको प्रत्यक्ष दर्शनबाट आनन्दित हुनुभएका ब्रह्माजीको खुसीको सीमा रहेन । उहाँले आफ्ना सबै शिर झुकाएर चराचरगुरु श्रीगणेशको वन्दना गर्नुभयो र प्रसन्न हुँदै भन्नुभयो- आज मेरो जन्म सफल भएको छ ।।२५।।

**ब्रह्माजीले भन्नुभयो** - जुन श्रीगणेश प्रभु वेद, शास्त्र, ज्ञानी, योगी र सबै उपनिषद्का पनि गोचर हुनुहुन्न, आज ती परमदेवता, सर्वव्यापक, अनादिनिधन, अनन्त, अप्रमेय र निर्गुण प्रभु मेरा पुण्य प्रतापले प्रत्यक्ष हुनुहुन्छ ।।२६-२७।। हे विघ्नेश! हे देवेश! हे दयालु देवता श्रीगणेश! हजुर ममाथि प्रसन्न हुनुहुन्छ भने मलाई अविचल भक्ति प्रदान गर्नुहोस् । जसबाट मैले कहिले पनि दुःखभोग गर्न नपरोस् ।।२८।। हे प्रभु ! अहिले मलाई नानाथरिका सृष्टि निर्माण गर्ने शक्ति र सामर्थ्य प्रदान गर्नुहोस् । हे प्रभु ! यदि हजुर प्रसन्न हुनुहुन्छ भने मेरा सबै विघ्न र चिन्तालाई समाप्त तुल्याउनुहोस् ।।२९।। मैले सम्झनामात्र गर्दा मेरा सबै कार्यलाई सफल तुल्याउनुहोस् र अन्तमा मलाई निर्मल ज्ञान र स्थिर मुक्ति पनि प्रदान गर्नुहोस् ।।३०।।

**श्रीगणेशले भन्नुभयो** - तपाइँका सारा इच्छा पूरा हुनेछन् । तपाइँले अनेक थरि सृष्टि गर्नुहोस् । विघ्न आइलागेमा मलाई सम्झेपछि तपाइँका सबै विघ्न विलीन हुनेछन् ।।३१।। हे ब्रह्माजी! मेरो कृपाबाट तपाइँका हृदयमा मप्रति अविचल भक्ति जागा रहनेछ र तपाइँले निर्मल ज्ञान पनि पाउनुहुनेछ । हे चतुर्मुख ! सबै प्रकारका शङ्का, सन्देह पन्छाएर आफ्नो कर्तव्यपालन गर्नुहोस्।।३२।।

**भृगुले भन्नुभयो** - यसरी श्रीगणेशको कृपाबाट वरदान प्राप्त गरेका ब्रह्माजीले विभुरूप गजानन श्रीगणेशको पूजा गर्नुभयो। ब्रह्माजीले जे जे मनमा चिताउनुहुन्थ्यो ती ती पदार्थ उहाँका सामु उपस्थित हुने गर्दथे ।।३३।। देवताका

पूजार्थं देवदेवस्य गणेशस्य प्रसादतः ।
दक्षिणावसरे द्वे तु कन्यके समुपस्थिते ।।३४।।

चारुप्रसन्ननयनवदनैः सुविराजिते ।
अनेकरत्नखचितनानालङ्कारशोभिते ।।३५।।

दिव्यगन्धयुते दिव्यवस्त्रमालाविभूषिते ।
ते तस्मै दक्षिणार्थं स कल्पयामास पद्मभूः ।।३६।।

रम्भागर्भेण नीराज्य दिव्यं पुष्पाञ्जलिं ददौ ।
सहस्रनामभिः स्तुत्वा प्रदक्षिणमथाकरोत् ।।३७।।

नमस्य प्रार्थयामास दीनानां शङ्करो भव ।
एवं सम्पूजितस्तेन ब्रह्मणा परमेष्ठिना ।।३८।।

ततः प्रसन्नो भगवान् विघ्नहर्ता गजाननः ।
सिद्धिबुद्धी गृहीत्वा ते ह्यन्तर्धानमगाद् विभुः ।।३९।।

कस्ततः कारयामास सृष्टिं पूर्ववदायताम् ।
आज्ञया परमेशस्य प्रसादाच्च प्रसन्नधीः ।।४०।।

पनि देवता श्रीगणेशको पूजा गरी दक्षिणा दिन तयार हुँदा उहाँको कृपाले सुन्दर अनुहार र सुन्दर आँखा भएका दुई कन्या त्यहाँ उपस्थित भए । ती कन्याहरू अनेक रत्नले अलङ्कृत थिए र मूल्यवान् गहनाले सुहाएका थिए । तिनका शरीरबाट दिव्य सुगन्ध प्रवाहित भइरहेको थियो । तिनीहरू दिव्यमाला पहिरेर देदीप्यमान थिए। ब्रह्माजीले ती दुबै कन्यालाई श्रीगणेशका सामु दक्षिणाको रूपमा प्रदान गर्नेछु भन्ने सङ्कल्प गर्नुभयो ।।३४-३६।। त्यसपछि ब्रह्माजीले कपूरको आरती तयार गरी श्रीगणेशको आरती गर्नुभयो, दिव्य पुष्पाञ्जलि समर्पण गर्नुभयो र श्रीगणेशसहस्रनाम पाठ गरी श्रीगणेशको परिक्रमा पनि गर्नुभयो ।।३७।। ब्रह्माजीले श्रीगणेशलाई प्रणाम गरेपछि प्रार्थना गर्दै भन्नुभयो – 'हे श्रीगणेश! तपाईं दीन-दुःखीहरूका निमित्त कल्याणकारी हुनुहोस् ।' यसरी परमेष्ठी ब्रह्माजीद्वारा पूजा गरिएपछि प्रसन्न हुनुभएका विघ्नहर्ता गजानन पनि दक्षिणाका रूपमा प्राप्त गरेका सिद्धि र बुद्धिलाई साथ लिएर अन्तर्धान हुनुभयो ।।३८-३९।। त्यसपछि ब्रह्माजीले श्रीगणेश परमात्माको आज्ञा पाएर प्रसन्न हुँदै पहिलेको जस्तो विशाल र विस्तृत सृष्टि गर्नुभयो ।।४०।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे गजाननपूजानिरूपणं नाम पञ्चदशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'ब्रह्माजीको तपस्या, श्रीगणेशको दर्शन र ब्रह्माजीद्वारा श्रीगणेशको पूजा' शीर्षकान्वित पन्ध्रौं अध्याय पूर्ण भयो ।।१५।।

ॐ

# षोडशोऽध्याय: { १६ अध्याय }

### राजोवाच

श्रुत्वा कथां गणेशस्य हर्षश्चेतसि जायते ।
पुनश्च वद विप्रर्षे ! न तृप्यामि कथामृतात् ।।१।।

अन्तर्हिते भगवति गणेशे परमात्मनि ।
कथं विनिर्ममे सृष्टिं ब्रह्मा तद् वर्णय प्रभो ।।२।।

यच्चाग्रे कथयामास व्यासायाख्यानकं विधि: ।
तदहं विस्तरेणैव श्रोतुमिच्छामि सन्मुने ।।३।।

### भृगुरुवाच

सिद्धक्षेत्रस्य माहात्म्यं व्यासायाऽकथयत् प्रभु: ।
आनुपूर्व्येण तत् तेऽहं कथयिष्येऽसृजच्च यत् ।।४।।

स ब्रह्मा निर्ममे पूर्वं मनसा सप्तपुत्रकान् ।
आह तान् सृष्टिसाहाय्यं सृजध्वं स्वस्वबुद्धित: ।।५।।

ते तु तद्वचनं श्रुत्वा तपसे कृतनिश्चया: ।
तपस्तप्त्वाऽऽशु विपुलं परं ब्रह्म समागता: ।।६।।

ततोऽन्यान् कल्पयामास सप्त पुत्रान् प्रजापति: ।
तेऽत्यन्तज्ञानसम्पन्ना न चक्रु: सृष्टिमुत्तमाम् ।।७।।

तत: स्वयं समारेभे सनकादीन् विलोक्य तान् ।
मुखतो ब्राह्मणानग्निमसृजत् कमलासन: ।।८।।

बाहूरुपादतोऽन्यांस्त्रीन् वर्णांश्चन्द्रमसं हृद: ।
चक्षुर्भ्याञ्च रविं श्रोत्रान्मारुतं प्राणमेव च ।।९।।

अन्तरिक्षं तथा नाभे: शिरसो दिवमेव च ।
भूमिं पद्भ्यां दिश: श्रोत्रादन्याँल्लोकानकल्पयत् ।।१०।।

अन्यदुच्चावचं विश्वं स्थावरं जङ्गमञ्च यत् ।
समुद्रान् सरित: शैलाँस्तृणगुल्ममहीरुहान् ।।११।।

**सोमकान्तले भने** - हे भृगु महर्षि ! श्रीगणेशको कथा सुन्दा मनमा खुसी पैदा हुन्छ । हे विप्रर्षि ! फेरि पनि मलाई त्यो कथा सुनाउनुहोस् । श्रीगणेशको कथा सुनेर कहिले पनि तृप्त भइँदैन ।।१।। परमात्मा श्रीगणेश अन्तर्धान हुनुभएपछि ब्रह्माजीले कसरी सृष्टिको विस्तार गर्नुभयो ? हे प्रभो ! यस प्रश्नको उत्तर दिनुहोस् ।।२।। हे मुनिवर ! ब्रह्माजीले पहिले वेदव्यासलाई श्रीगणेशको जुन आख्यान सुनाउनुभएको थियो, म त्यसलाई विस्तारपूर्वक सुन्न र जान्न चाहन्छु ।।३।।

**भृगुले भन्नुभयो** - हे राजन् ! भगवान् ब्रह्माजीले वेदव्यासलाई सिद्धक्षेत्रको महिमा बताउनुभएको थियो । म क्रमश: त्यो बताउँछु र कसरी ब्रह्माजीले सृष्टि गर्नुभयो भन्नेसमेत बताउनेछु ।।४।। ब्रह्माजीले सर्वप्रथम मनबाट सात भाइ छोरा जन्माउनुभयो । तिनलाई सामु राखेर 'तिमीहरूले आफ्नो बुद्धिअनुसार सृष्टिकार्यमा सहयोग गर' भन्नुभयो।।५।। ती सात भाइ छोराले ब्रह्माजीको आदेशअनुसार सृष्टिकार्यमा सहयोगी हुनुको सट्टा तपस्या गर्न जाने निश्चय गरे । त्यसपछि दीर्घकालसम्म तपस्या गरी परब्रह्म परमात्मामा समाहित भए।।६।। छोराहरू तपस्या गर्न गएपछि ब्रह्माजीले तीभन्दा बाहेक अरू सनक, सनातन आदि सात भाइ छोरा जन्माउनुभयो। ती छोरा पनि ठूला ज्ञानी भएर निस्के । तिनले पनि सृष्टिकार्यमा रुचि देखाएनन् ।।७।। ती सनकादि ऋषिहरूलाई ज्ञानोन्मुख अवस्थामा देखेर ब्रह्माजीले स्वयं सृष्टिकार्य आरम्भ गर्नुभयो । त्यसपछि उहाँले मुखबाट ब्राह्मण र अग्निको सृष्टि गर्नुभयो ।।८।। उहाँले बाहुबाट क्षत्रिय, ऊरुबाट वैश्य र चरणबाट शूद्र वर्णको सृष्टि गर्नुभयो। ब्रह्माजीले हृदयबाट चन्द्रमा, आँखाबाट सूर्य, कानबाट वायु र प्राण, नाभिबाट अन्तरिक्ष, शिरबाट स्वर्ग, पाउबाट पृथिवी, कानबाट दिशा र लोकहरूको पनि सृष्टि गर्नुभयो ।।९-१०।। यसरी नै उहाँले अग्ला, गहिरा, समतल एवं उबड-खाबड भूभाग भएको संसारको सृष्टिका साथै चराचरको पनि सृष्टि गर्नुभयो । फेरि त्यसैगरी समुद्र, नदी, पर्वत, तृण, पोथ्रा, वनस्पति र वृक्षको पनि रचना गर्नुभयो।।११।।

ततः कतिपयाहःसु गतेषु मुनिसत्तमाः ।
निद्रितस्य महाविष्णोः श्रोत्राज्जातौ महासुरौ ।।१२।।

मधुकैटभनामानौ विख्यातौ भुवनत्रये ।
दंष्ट्राकरालवदनौ पिङ्गाक्षौ दीर्घनासिकौ ।।१३।।

महाकायौ महारावावत्युच्चौ पर्वताविव ।
वर्षामुदिरशब्दौ तौ गर्जन्तौ भृशगर्वितौ ।।१४।।

वचोभिर्बहुभिर्दुष्टौ धिक्कारं तस्य चक्रतुः ।
विप्रान् देवान् ऋषीन् साधून् शास्त्राणि च निनिन्दतुः।।१५।।

तयोः शब्देन धरणी चकम्पे शेष एव च ।
उद्विग्नमासीत् सकलं ब्रह्माण्डं स्वनतस्तयोः ।।१६।।

ततस्तौ क्रोधरक्ताक्षौ कं तं खादितुमुद्यतौ ।
ततोऽसौ वरदां देवीं विष्णुमोहनकारिणीम् ।।१७।।

विष्णुनेत्रगतां निद्रां तुष्टाव कमलासनः ।
मधुकैटभनाशाय प्रबोधाय हरेरपि ।।१८।।

गजाननप्रसादेन विष्णुहस्तात् तयोर्वधम् ।
ज्ञात्वा सम्यग्विचार्यैव चिन्ताहर्षसमन्वितः ।।१९।।

**ब्रह्मोवाच**

स्वाहास्वधारूपधरा सुधा त्वं
मात्रार्धमात्रास्वररूपिणी च ।
कर्त्री च हर्त्री जननी जनस्य
सतोऽसतः शक्तिरसि त्वमेव ।।२०।।

श्रुतिः स्वरा कालरात्रिरनादिनिधनाऽक्षया ।
जगन्माता जगद्धात्री सृष्टिस्थित्यन्तकारिणी ।।२१।।

सावित्री च तथा सन्ध्या महामाया तृषा क्षुधा ।
सर्वेषां वस्तुजातानां शक्तिस्त्वमसि पार्वति ।।२२।।

त्रैलोक्यकर्ता त्वन्नाथो दैत्यदानवसूदनः ।
निद्रया व्याप्तचित्तोऽसौ ज्ञानविज्ञानवान् हरिः ।।२३।।

सृष्टिका केही दिन बितेपछि निदाइरहेका विष्णुका कानबाट त्रिलोकीमा विख्यात मधु र कैटभ नामक दुई दैत्य पैदा भए। ती दैत्यहरू विशाल शरीर भएका, डरलाग्दा दाह्राका कारण विकराल अनुहारका देखिने, लामो नाक र पहेँला आँखा भएका, महाकाय, पहाडझैं अग्ला, घोर गर्जन गर्ने, अत्यन्त उग्र र शक्तिशाली थिए । वर्षाकालको मेघझैं गर्जन गर्ने अत्यन्त घमण्डी ती दानवहरूले भयङ्कर गर्जन गर्दै बारबार ब्रह्माजीलाई धिक्कार गरे । ब्राह्मण, देवता, ऋषि, सज्जन, महात्मा र शास्त्रहरूको घोर निन्दा पनि गरे ।।१२-१५।। मधु र कैटभको संसारै थर्काउने चर्को स्वर सुनेर पृथिवी र शेषनाग पनि कम्पित भए। तिनको ठूलो र डरलाग्दो स्वरबाट सम्पूर्ण ब्रह्माण्ड नै खिन्न र उद्विग्न भयो।।१६।। भयङ्कर गर्जनपछि रीसले राता आँखा गराएका ती दुष्ट दैत्यहरू ब्रह्माजीलाई खान खोज्दै अगाडि सरे । त्यस बेला तिनको त्यो उत्साह देखेर ब्रह्माजीले विष्णुलाई मूर्च्छामा पुर्‍याउने र विष्णुकै आँखामा बास गरिरहेकी वरदायिनी निद्रादेवीको स्तुति गर्नुभयो। उहाँले मधु-कैटभको नाश र विष्णुको जागरणका लागि पनि प्रार्थना गर्नुभयो ।।१७-१८।। श्रीगणेशको कृपाले विष्णुकै हातबाट ती दुष्ट दानवहरूको हत्या हुने कुरा थाहा पाएर त्यसबारे राम्ररी विचार गरी ब्रह्माजी चिन्ता र हर्षले युक्त हुनुभयो । केहीबेर पछि उहाँले भगवती निद्रादेवीको प्रार्थना गर्नुभयो ।।१९।।

**ब्रह्माजीले भन्नुभयो** - हे भगवती! तपाईं स्वाहा र स्वधाको रूपमा विराजमान हुनुहुन्छ । तपाईं मात्रा, अर्धमात्रा र स्वरका रूपमा पनि प्रकट हुनुहुन्छ । तपाईं अमृतमयी, सृष्टि, पालन र संहारक्रियाकी स्वामिनी पनि हुनुहुन्छ । हे भगवती! तपाईं सबैकी आमा हुनुहुन्छ । तपाईं नै सत् शक्ति र असत् शक्ति पनि हुनुहुन्छ।।२०।। हे भगवती! तपाईं नै श्रुति, स्वर, अनादिनिधन, अक्षय र कालरात्रि पनि हुनुहुन्छ। तपाईं जगन्माता, जगद्धात्री, सृष्टि, स्थिति र संहारकी हेतु, सावित्री, सन्ध्या, महामाया, तृषा र क्षुधा पनि हुनुहुन्छ। हे काली! तपाईं नै सम्पूर्ण वस्तुमा शक्ति र सत्त्वका रूपमा विराजमान हुनुहुन्छ ।।२१-२२।। त्रिलोकीका रचयिता, दैत्य र दानवका संहारक र ज्ञान-विज्ञानका आधार, तपाईंका स्वामी भगवान् नारायण अहिले निद्रामा मग्न हुनुहुन्छ ।।२३।।

जगदुत्पाद्यते येन पाल्यते ह्रियतेऽपि च ।
सोऽपि त्वयावताराणां सङ्कटे विनियोज्यते ।।२४।।

दुष्टात्मानौ मोहयैतौ त्वं दैत्यौ मधुकैटभौ ।
हन्तुमेतौ दुराधर्षौ ज्ञानमस्य प्रदीयताम् ।।२५।।

अहमाराधितश्चाभ्यां पूर्वजन्मन्यतन्द्रितम् ।
वरान् बहुविधान् प्रादामवध्यौ मम तावुभौ ।।२६।।

तयोरुच्चावचान् शब्दानतोऽहमहसं बहु ।।
मामेव हन्तुकामौ तौ स्तुतौ नानाविधैः स्तवैः ।।२७।।

तथापि मद्वधात् तौ न निवृत्तौ दुष्टभावतः ।
अतस्त्वां प्रार्थये देवि ! विष्णुबोधनहेतवे ।।२८।।

जगत्को उत्पत्ति, पालन र संहार यी तीन महत्त्वपूर्ण कार्य सम्पादन गर्ने देवता नारायणलाई निद्रामा पुऱ्याएर तपाईँले संसारलाई सङ्कटमा पार्नुभएको छ । हे भगवती ! तपाईँले यी दुरात्मा मधु र कैटभलाई आफ्नो मोहजालमा पार्नुहोस् । यी दैत्य अत्यन्त बलशाली, अविजेय र पराक्रमशाली छन् । यिनलाई मार्न भगवान् बिष्णुलाई आफ्नो शक्ति प्रदान गर्नुहोस् ।।२४-२५।। ब्रह्माजीले भन्नुभयो - पूर्वजन्ममा यी दुबैले जागरूक भएर मेरो आराधना गरेका थिए, मैले यिनलाई धेरै ठूला वरदान दिएको छु । मैले नै वरदान दिएका कारण म यिनलाई मार्न सक्दिनँ । जब यिनले अपलाप गरी जथाभावी बोलेका थिए, त्यस बेला खिसी गर्दै म हाँसेँ, अनि ती दुबै मलाई नै खान भनी ममाथि आइलागे । मैले ज्यान जोगाउन त्यस्ता दुष्ट दैत्यको पनि स्तुति गर्नुपऱ्यो । त्यति हुँदा पनि दुर्भावनादूषित ती दुबै दैत्य मलाई मार्ने उद्योगबाट निवृत्त भएनन् । तसर्थ हे भगवती ! भगवान् विष्णुको निद्राभङ्ग गराउन म हजुरसँग प्रार्थना गर्दछु ।।२६-२८।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे देवीप्रार्थनं नाम षोडशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'मधुकैटभको उत्पत्ति र योगनिद्राको वशमा परेका विष्णुको उद्बोधनका लागि ब्रह्माजीद्वारा देवीको स्तुति' शीर्षकान्वित सोह्रौँ अध्याय पूर्ण भयो ।।१६।।

ॐ

## सप्तदशोऽध्यायः { १७ अध्याय }

मुनिरुवाच

यावदुत्तिष्ठते विष्णुस्तावत्ताभ्यां त्रिविष्टपम् ।
आक्रान्तमिन्द्रसदनं याम्यं कौबेरमेव च ।।१।।

तौ दृष्ट्वा सर्वतो देवाः पलायनपरा बभुः ।
निपेतुर्बभ्रमुः केचिन्मुमूर्च्छुश्चस्खलुः परे ।।२।।

ततो देव्या विनिर्मुक्तो निद्रया हरिरीश्वरः ।
आश्वास्य सर्वदेवाँस्ताँस्ताभ्यां युद्धं चकार ह ।।३।।

आक्रमं सर्वदेवानां कृतं ताभ्यां निवारितुम् ।
शेषादिसर्वनागानां मुनीनां यक्षरक्षसाम् ।।४।।

शुशुभे स हरिस्तत्र शङ्खचक्रगदाधरः ।
किरीटकुण्डलधरो नीलमेघघनच्छविः ।।५।।

ततः स भगवान् शङ्खं प्रदध्मौ भृशवेगवान् ।
तेन शब्देन महता क्षोभयामास रोदसी ।।६।।

पाञ्चजन्यस्वनं श्रुत्वा विभिदे हृदयं तयोः ।
ततस्तौ भयसंविग्नौ परस्परमथोचतुः ।।७।।

भूमण्डलञ्च पातालं स्वर्गाणामेकविंशतिः ।
आक्रान्ताः सम्यगावाभ्यां तदाऽयं न श्रुतः स्वनः।।८।।

वज्रसारमयं येन चकम्पे हृदयं द्वयोः ।
तस्मादनेन योद्धव्यं पुरुषेण बलीयसा ।।९।।

रणकण्डूतिशान्त्यर्थं विजयायेतराय वा ।
रिपुमेनं हनिष्यावो गच्छावो वा पुनर्भवम् ।।१०।।

एवं तौ निश्चयं कृत्वा युयुत्सुं हरिमूचतुः ।
रणकण्डूतिशान्त्यर्थं दृष्टोऽसि पुरुषोत्तम ।।११।।
कथमुत्तमतां यासि ह्यावयोर्दृष्टिगोचरः ।

भृगुले भन्नुभयो- भगवान् विष्णु निद्रामुक्त नहुँदै ती दैत्यले स्वर्गमा आक्रमण गरे । इन्द्रको राजभवन, यमनिवास र कुबेरनिवासमा पनि आक्रमण गरे ।।१।। तिनलाई देखेर देवताहरू चारैतिर भाग्न थाले । भाग्ने क्रममा केही भुइँमा लडे, केही चक्कर लागेर थला परे, केही मूर्च्छित भए, केही लर्किएर लडे ।।२।। त्यसपछि देवीको कृपाबाट निद्रामुक्त हुनुभएका भगवान् नारायण ती सबै देवताहरूलाई आश्वासन दिँदै मधु र कैटभका साथ युद्ध गर्न लाग्नुभयो ।।३।। ती दैत्यले सबै देवतामाथि गरेको आक्रमण रोक्न शेष आदि सबै नाग, मुनि, यक्ष आदिका बीचमा शोभायमान शङ्ख, चक्र, गदा एवं पद्मद्वारा अलङ्कृत नारायणले किरीट र कुण्डल धारण गर्नुभयो र उहाँ नीलो बादलको जस्तो श्यामल कान्तिद्वारा आभामय बन्नुभएको थियो ।।४-५।। त्यस बेला भगवान् हरिले अत्यन्त वेगपूर्वक शङ्ख फुक्नुभयो । शङ्खको महान् स्वरबाट आकाश र धर्ती शब्दायमान भए ।।६।। पाञ्चजन्य शङ्खको त्यो स्वर सुनेर मधु र कैटभको पनि मुटु काँप्न थाल्यो । अत्यन्त भयभीत ती दैत्यले आपसमा भन्न लागे - एक्काइस प्रकारका स्वर्ग, भूमण्डल र पातालसम्म हामीले आक्रमण गर्‍यौं, ती आक्रमणहरूमा हामीले कहिल्यै पनि यस्तो भयङ्कर स्वर सुनेका थिएनौं ।।७-८।। यो स्वर वज्रभन्दा पनि कठोर छ । यस स्वरका कारण हामी दुबैको मुटु थर्थर काँपिरहेको छ । अब हामीले पनि शङ्ख फुकेर सबैलाई तर्साउने यो बलियो पुरुषसँग युद्ध गर्नुपर्दछ।।९।। युद्धको चिलचिलाहट मेटाउन, युद्धमा विजय प्राप्त गर्न अथवा पराजय नै भोग्नका लागि पनि हामीले नारायणमाथि आक्रमण गर्नुपर्छ । हामी कि त नारायणलाई मार्नेछौं, त्यसो नभए तिनका हातबाट मरेर पुनर्जन्म लिनेछौं ।।१०।। ती दैत्यले आपसमा यसरी निश्चय गरेर युद्ध गर्न चाहने भगवान् नारायणलाई सम्बोधन गर्दै भने - हे विष्णु ! युद्धरूपी लुतो चिलाएको हुँदा त्यसलाई कन्याउन तिमी हाम्रा सामु देखिएका छौ ।।११।। हाम्रो दृष्टि परेपछि तिमी अब कसरी पुरुषोत्तम बन्दछौ ? हामी त्यो हेर्नेछौं ।

मुनिरुवाच

इति वाक्यं तयोः श्रुत्वा जगाद विष्टरश्रवाः ।।१२।।

हरिरुवाच

सम्यगुक्तं महादैत्यौ यथेष्टं युध्यतं मया ।
न हि कामयते कश्चिन्मरणं स्वयमात्मनः ।।१३।।

तावूचतुः

चतुर्भुजोऽसि देवेश ! बाहुयुद्धं ददस्व नौ ।

मुनिरुवाच

एवमुक्तो हरिस्ताभ्यां तथेत्याह मुदान्वितः ।।१४।।

त्यक्त्वाऽऽयुधानि युयुधे द्वाभ्यामेकश्चतुर्भुजः ।
जघ्नतुस्तौ शिरो मूर्ध्ना जङ्घाभिरथ जङ्घयोः ।
कूर्परौ कूर्परैः स्वीयैर्बाहू बाहुभिरेव च ।।१५।।

गुल्फौ गुल्फैः कटिं ताभ्यां नासिकाभ्याञ्च नासिकाम् ।
मुष्टिभ्यां मुष्टिदेशं च पृष्ठाभ्यां पृष्ठमेव च ।।१६।।

आस्फोटनविकर्षाभ्यां बाहुभिर्मण्डलैरपि ।
एवं परस्परं युद्धं प्रावर्तत चिरं तदा ।।१७।।

सहस्रं पञ्चगुणितमतिक्रान्तं महामुने ।
वर्षाणां न तु तौ जेतुं शशाक हरिरीश्वरः ।।
ततो दधार रूपं स गान्धर्वं गीतकोविदम् ।।१८।।

गत्वा वनान्तरं चारु वीणागानं चकार सः ।
हरिणाः श्वापदा लोका देवगन्धर्वराक्षसाः ।।१९।।

स्वस्वव्यापाररहिताः सर्वे तत्परतां ययुः ।
आलापं तस्य गिरिशः कैलासे श्रुतवान् मुहुः ।।२०।।

निकुम्भं पुष्पदन्तञ्च जगाद भगनेत्रहा ।
एतमानयतं शीघ्रं योऽसौ गायति कानने ।।२१।।

तौ गत्वा दर्शनं तस्य गृहीत्वा वै तमूचतुः ।
तव गीतस्वनं श्रुत्वा शङ्करो हर्षनिर्भरः ।।२२।।

**भृगुले भन्नुभयो** - मधु र कैटभका यस्ता कुरा सुनेर भगवान् नारायणले भन्न थाल्नुभयो ।।१२।।

**हरिले भन्नुभयो**- हे दैत्यहरू ! तिमीहरूले आफू सुहाउँदो कुरा गरेका छौ । मसँग इच्छाअनुसार युद्ध गर । कुनै पनि मानिसले आफ्नो मरण आफै चाहन्न ।।१३।।

**मधु र कैटभले भने**- हे नारायण! तपाईं चतुर्भुज हुनुहुन्छ । तसर्थ हामीलाई बाहुयुद्ध गर्ने अवसर दिनुहोस् ।

**भृगुले भन्नुभयो** - यसरी प्रार्थना गरिएका श्रीहरिले प्रसन्न भई हुन्छ, बाहुयुद्ध नै गरौं भन्नुभयो ।।१४।। आफ्ना आयुधहरू पर सारेर चार बाहुले सुहाउनुभएका चतुर्भुज नारायण दुई भुजा भएका ती दानवसँग युद्ध गर्न थाल्नुभयो। ती दानवले शिरहरूद्वारा नारायणको शिरमा, जङ्घाहरूद्वारा नारायणको जङ्घामा, कुहिनाहरूद्वारा नारायणको कुहिनामा, घुँडाहरूद्वारा नारायणको घुँडामा, भुजाहरूद्वारा नारायणका भुजाहरूमा, गोलिगाँठाहरूद्वारा नारायणका गोलिगाँठाहरूमा, कटिहरूद्वारा नारायणको कटिमा, नाकहरूद्वारा नारायणको नाकमा, मुड्कीहरूद्वारा नारायणको मुड्कीमा र पीठ्यूँहरूद्वारा नारायणको पीठ्यूँमा प्रहार गर्दै भुजाहरूद्वारा ताल ठोकी मण्डल बनाएर खिचातानी गर्ने कामसमेत भएको त्यो भयङ्कर युद्ध चिरकालसम्म चलिरह्यो ।।१५-१७।। हे महामुनि ! पाँच हजार वर्षसम्म युद्ध चलिरहँदा पनि श्रीहरिले ती दानवहरूलाई पराजित गर्न सक्नु भएन । त्यसपछि उहाँले गीतिगायनकलामा कुशल गन्धर्वको स्वरूप धारण गरी वनमा गएर अत्यन्त सुरिलो स्वरमा वीणागान आरम्भ गर्नुभयो । गन्धर्वरूप हरिको त्यो वीणागान सुनेर जङ्गली जनावर, मानिस, देवता, गन्धर्व, राक्षस आदि सबै आ-आफ्ना काम छाडेर मुग्ध भई वीणागान सुन्न तत्पर भए । वीणाको त्यो मधुर गानलाई कैलासमा विराजमान भगवान् शङ्करले पनि सुन्नुभयो ।।१८-२०।। त्यसपछि उहाँले निकुम्भ र पुष्पदन्तलाई भन्नुभयो - तिमीहरू वनमा गएर वीणागान गरिरहेको गायकलाई मेरो समीपमा ल्याउने काम गर ।।२१।। यसरी शङ्करको आज्ञा पाएर वनमा गएका निकुम्भ र पुष्पदन्तले गन्धर्वरूप हरिको दर्शन गरेपछि सम्बोधन गर्दै भने - हे गन्धर्व ! तपाईंको गीतको नाद सुनेर भगवान् शङ्कर ज्यादै खुसी हुनुभएको छ ।।२२।। फेरि पनि

त्वां समाह्वयते देवो गानं श्रोतुं तवानघ ।
आवाभ्यां सह याहि त्वं शीघ्रं याम तदन्तिकम् ।।२३।।

तयोर्वाक्यमिति श्रुत्वा गन्धर्वो हरिभक्तिमान् ।
ताभ्यां सह ययौ तत्र यत्र देवो महेश्वरः ।।२४।।

ददर्श पार्वतीकान्तं चन्द्रार्धकृतशेखरम् ।
गजचर्मपरीधानं रुण्डमालाविभूषितम् ।।२५।।

राजत्पिङ्गजटाभारं सर्पयज्ञोपवीतिनम् ।
ननाम भुवि विश्वेशं प्रणतार्त्तिविनाशनम् ।।२६।।

उत्थाप्य गिरिशः स्वेन पाणिना तमधोक्षजम् ।
आसनञ्च ददौ तस्मै पूजयामास शङ्करः ।।२७।।

ततो जगाद स हरिरद्य मे सफलं जनुः ।
यतोऽद्य दर्शनं तेऽभूद् धर्मकामार्थमोक्षदम् ।।२८।।

तोषयामास तं देवं गन्धर्वो गानतत्परः ।
वीणारवैः कलपदैरालापैर्विविधैरपि ।।२९।।

स्कन्दं गणेश्वरं देवीं पार्वतीञ्च सुरानृषीन् ।
ततो महेश्वरः प्रीत्याऽऽलिलिङ्ग प्रकटं हरिम् ।।३०।।

शङ्खचक्रगदापद्मपीताम्बरधरं शुभम् ।
उवाच च हरे ! मत्तो वृणु कामानशेषतः ।।३१।।
दास्यामि तव गानेन परां मुदमुपागतः ।

भृगुरुवाच

तत ऊचे स्वभूस्तन्तु वृत्तान्तं दैत्ययोः परम् ।।३२।।

हरिरुवाच

मयि क्षीराब्धिशयने निद्रिते मधुकैटभौ ।
उत्पन्नौ कर्णमलतो ब्रह्माणं भक्षितुं गतौ ।।३३।।

त्यो मीठो वीणागान सुन्ने इच्छाले तपाईँलाई कैलासमा बोलाउनुभएको छ । हे निष्पाप गन्धर्व ! तपाईँ हामीहरूका साथ लागेर हिँड्नुहोस् । हामी सबै भगवान् शङ्कर विराजमान हुनुभएको ठाउँमा जाने काम गरौँ ।।२३।। यसरी तिनीहरूले भनेको कुरा सुनेर ती गन्धर्व तिनीहरूका साथ भगवान् शङ्कर विराजमान हुनुभएको दिव्य स्थानमा पुगे ।।२४।। त्यहाँ गएर ती गन्धर्वले पार्वतीपति, शिरमा अर्धचन्द्र धारण गर्नुहुने, हात्तीको छाला ओढ्नु भएका, मुण्डमालाद्वारा विभूषित, पहेँलो जटापुञ्जले सुहाउनुभएका, सर्पको यज्ञोपवीत धारण गर्नुहुने र शरणागत भक्तहरूका दुःखनाशक विश्वेश्वर भगवान् शङ्करलाई भुइँमा लम्पसार परेर प्रणाम गरे ।।२५-२६।। भगवान् शङ्करले गन्धर्वरूप हरिलाई आफ्नै हातले उठाएर आसन दिई सत्कार गर्नुभयो ।।२७।। सत्कार प्राप्त गरेपछि गन्धर्वरूप हरिले भन्नुभयो – आज मेरो जन्म सफल भएको छ किनकि मैले धर्म, अर्थ, काम र मोक्षजस्ता पुरुषार्थ प्रदान गर्ने हजुरको दुर्लभ दर्शन पाएँ ।।२८।। त्यस बेला गन्धर्वरूप हरिले वीणागानमा प्रवृत्त भएर मीठो गीतालापद्वारा भगवान् शङ्करलाई प्रसन्न तुल्याउनुभयो ।।२९।। गन्धर्वरूप हरिले भगवान् शङ्करलाई मात्र होइन भगवान् कार्तिकेय, गणनाथ, देवी पार्वती, देवता एवं ऋषिहरूलाई पनि प्रसन्न तुल्याउनुभयो । त्यसपछि हरिका रूपमा प्रकट भएका ती गन्धर्वलाई शिवजीले प्रेमपूर्वक आलिङ्गन गर्नुभयो ।।३०।। हातहरूमा शङ्ख, चक्र, गदा र पद्म धारण गर्नुहुने, पीताम्बरधारी, चतुर्बाहुका रूपमा प्रकट हुनुभएका नारायणलाई शङ्करले भन्नुभयो – हे नारायण ! मैले तपाईँलाई सम्पूर्ण इच्छा पूरा गराउने वर प्रदान गर्छु, स्वीकार गर्नुहोस् । हजूरको वीणागान सुनेर मैले परमानन्द पाएको छु र अत्यन्त हर्षित छु ।

**भृगुले भन्नुभयो** – शिवजीका यस्ता कुरा सुनेर स्वयम्भू हरिले मधु र कैटभ नामक दैत्यहरूको वृत्तान्त भगवान् शङ्करलाई सुनाउनुभयो ।।३१-३२।।

**हरिले भन्नुभयो** – हे शङ्कर ! म क्षीरसागरमा अवस्थित शेषशय्यामा निदाएपछि मेरो कानको मयलबाट मधु र कैटभ नामक दुई दैत्य उत्पन्न भए । ती दैत्यले ब्रह्माजीलाई खान खोज्दै आक्रमण गरे ।।३३।। हे भगवन् शिवजी ! ब्रह्माजीले

तेन निद्रा स्तुता भर्ग ! तयाऽहं प्रतिबोधित: ।
युद्धञ्च कृतवाँस्ताभ्यां मल्ललीलामुपागत: ।।३४।।

नास्मि शक्तो विजेतुं तौ तत एतत् कृतं मया ।
इदानीं तद्वधोपायं वद मे करुणानिधे ।।३५।।

भर्ग उवाच

विनायकमनर्च्यैव गतोऽसि रणभूमिकाम् ।
शक्तिहीनश्च तेनाऽसि सुभृशं क्लेशवानपि ।।३६।।

गणेशं पूजयित्वैव व्रज युद्धाय मारिष !
स च तौ माययाऽऽमोह्य वशतां प्रापयिष्यति ।।३७।।

मत्प्रसादेन दुष्टौ तौ वधिष्यसि न संशय: ।

हरिरुवाच

कथं विनायकं देवमुपासे भर्ग ! तद् वद ।।३८।।

ईश्वर उवाच

उक्ता गणेश्वरस्यैव मन्त्राणां सप्तकोटय: ।
तत्रापि च महामन्त्रास्तेष्वप्येकाक्षरो महान् ।।३९।।

षडक्षरश्च भगवँस्तयोरेकं वदामि ते ।
तत एकाक्षरं त्यक्त्वा सिद्धारिचक्रयोगत: ।।४०।।

ऋणं धनं शोधयित्वा तं जगाद षडक्षरम् ।
महामन्त्रं गणेशस्य सर्वसिद्धिप्रदं शुभम् ।।४१।।

अस्यानुष्ठानमात्रेण कार्यं ते सिद्धिमेष्यति ।
ततो जगाम स हरिरनुष्ठानाय सत्वर: ।।४२।।

निद्रादेवीको प्रार्थना गर्नुभयो र तिनले मलाई जगाइन् । मैले पनि मल्लयुद्धको कला स्वीकार गरी ती दुई दानवसित युद्ध गरें।।३४।। तर युद्धमा मैले ती दानवलाई परास्त गर्न सकिनँ। त्यसपछि गन्धर्वको रूप लिएर वनमा गई वीणागान गर्न थालें। त्यसको प्रभावले आज यसरी हजुरको दर्शन पाएको छु । हे करुणानिधि! मलाई ती दुष्ट दैत्यहरूको वध गर्ने उपाय बताउनुहोस् ।।३५।।

**शिवजीले भन्नुभयो** – हे विष्णु ! श्रीगणेशको आराधना नगरीकन तपाइँ रणभूमिमा जानुभयो । त्यस कारण अहिले तपाइँ शक्तिहीन अत्यन्त दुःखी हुनुहुन्छ ।।३६।। हे देव ! तपाइँ श्रीगणेशको विधिवत् पूजा गरेपछिमात्र युद्ध गर्न जानुहोस्। श्रीगणेशले ती दुबै दानवलाई आफ्नो मायाद्वारा मोहित बनाई वशीभूत तुल्याउनुहुनेछ ।।३७।। हे नारायण ! श्रीगणेशको विधिवत् पूजा गरेपछि मेरो कृपाबाट तपाइँले ती दुष्टहरूको वध गर्नुहुनेछ। यसमा कुनै सन्देह छैन ।

**हरिले भन्नुभयो** – हे भगवन् शिवजी ! मैले विनायक भगवान्को कुन विधिबाट उपासना गरूँ ? त्यो बताउनुहोस् ।।३८।।

**शिवजीले भन्नुभयो** – हे नारायण ! शास्त्रहरूमा श्रीगणेशका सात करोड मन्त्रहरू बताइएका छन् । तीमध्ये केही महामन्त्र मानिएका छन् । तिनमा पनि एकाक्षरी मन्त्र र षडक्षरी मन्त्रको ठूलो महिमा छ । हे विष्णु भगवान् ! म तपाइँका निमित्त ती दुईथरि मन्त्रमध्ये एउटाको उपदेश गर्दछु। त्यसपछि शिवजीले एकाक्षरी मन्त्र छोडेर सिद्धारिचक्रयोगबाट ऋण-धन-शोधन गरी सर्वसिद्धि प्रदान गर्ने श्रीगणेशको षडक्षरी मन्त्रको उपदेश गर्दै भन्नुभयो – हे नारायण ! यस मन्त्रको अनुष्ठानबाट तपाइँको कार्य सिद्ध हुनेछ। भगवान् शिवजीबाट मन्त्रोपदेश पाएपछि श्रीहरि पनि तीव्र गतिका साथ मन्त्रानुष्ठानका लागि प्रस्थान गर्नुभयो ।।३९-४२।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे मन्त्रोपदेशो नाम सप्तदशोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'शिवजीद्वारा विष्णुलाई भगवान् गजाननको षडक्षरी मन्त्रको उपदेश' शीर्षकान्वित सत्रौं अध्याय पूर्ण भयो ।।१७।।

ॐ

# अष्टादशोऽध्यायः { १८ अध्याय }

सोमकान्त उवाच

कथं जजाप स हरिः कुत्र वा मन्त्रमुत्तमम् ।
सिद्धिं चावाप स कथं वद मे तत् सविस्तरम् ।।१।।

भृगुरुवाच

सिद्धिक्षेत्रमिति ख्यातं भुवि सिद्धिकरं परम् ।
तत्र गत्वा महाविष्णुस्तताप परमं तपः ।।२।।

ध्यायन् विनायकं देवं षडक्षरविधानतः ।
आराधयामास तदा जित्वा खानि प्रयत्नतः ।।३।।

बाणास्त्रेण तु कृत्वैव पूर्वदिग्बन्धमादृतः ।
भूतशुद्धिं विधायैव प्राणानां स्थापनं तथा ।।४।।

कृत्वाऽन्तर्मातृकान्यासमाधारादिक्रमेण तु ।
बहिश्च मातृकान्यासं मस्तकादिक्रमेण च ।।५।।

प्राणानायम्य मूलेन ध्यात्वा देवं गजाननम् ।
आवाहन्यादिमुद्राभिः पूजयित्वा मनोमयैः ।।६।।

द्रव्यैर्नानाविधैश्चैव षोडशैश्चोपचारकैः ।
जजाप परमं मन्त्रं विष्णुर्योगेश्वरेश्वरः ।।७।।

गते वर्षशते काले परमात्मा गणाधिपः ।
प्रत्यक्षतां ययौ तस्य कोटिसूर्याग्निसन्निभः ।।८।।

अतिप्रसन्नहृदयो बभाषे गरुडध्वजम् ।
याचस्व त्वं वरान् मत्तो याँस्त्वं कामयसे हरे ।।९।।

ददामि तानहं सर्वांस्तपसाऽनेन तोषितः ।
पूर्वमेवार्चितः स्यां चेद् विजयस्ते ध्रुवं भवेत् ।।१०।।

हरिरुवाच

ब्रह्मेशानाविन्द्रमुख्याश्च देवा
यं त्वां द्रष्टुं नैव शक्तास्तपोभिः ।
तं त्वां नानारूपमेकस्वरूपं
पश्ये व्यक्ताऽव्यक्तरूपं गणेशम् ।।११।।

**सोमकान्तले भने** – श्रीहरिले त्यो उत्तम षडक्षरी मन्त्र कसरी र कहाँ जप्नुभयो? कसरी त्यस जपबाट सिद्धिलाभ गर्नुभयो ? मलाई यी प्रश्नहरूको उत्तर दिनुहोस् ।।१।।

**भृगुले भन्नुभयो** – पृथिवीमा परमसिद्धि प्रदान गर्ने प्रख्यात सिद्धिक्षेत्र रहेको छ । त्यहाँ गएर विष्णु भगवान्‌ले ठूलो तपस्या गर्नुभयो ।।२।। षडक्षरी मन्त्रको विधिअनुसार श्रीगणेश भगवान्‌को ध्यान गर्दै विष्णुले प्रयत्नपूर्वक इन्द्रियहरूलाई आफ्नो वशमा राखी श्रीगणेशको आराधना गर्नुभयो ।।३।। सर्वप्रथम श्रद्धापूर्वक उहाँले बाणास्त्रद्वारा दिग्बन्धन गरेर भूतशुद्धि गरेपछि प्राणस्थापना गर्नुभयो ।।४।। आधारादिक्रमले अन्तर्मातृका न्यास गरेपछि शिरदेखि आरम्भ गरी बाह्यमातृकान्यास पनि गर्नुभयो ।।५।। मूलमन्त्रले प्राणायाम गरी गजानन भगवान्‌को ध्यान गरेर आवाहनी आदि मुद्राका साथ मनोमय द्रव्य र षोडशोपचारबाट पूजा गरी योगेश्वर भगवान् विष्णुले श्रीगणेशका परममन्त्रको जप गर्नुभयो ।।६-७।। मन्त्र जप गर्दागर्दै सय वर्ष बितेपछि करोडौं सूर्यको कान्तिले सुहाउनुभएका परमात्मा श्रीगणेशले अत्यन्त प्रसन्न भएर विष्णुलाई प्रत्यक्ष दर्शन दिंदै भन्नुभयो – हे हरि ! तपाईंले मबाट जस्तो वरदान चाहनुहुन्छ त्यो माग्नुहोस् ।।८-९।। तपाईंको यस तपस्याबाट म प्रसन्न भएको छु। तसर्थ म तपाईंका सबै इच्छा पूर्ण गर्न तत्पर छु । युद्ध गर्नुभन्दा पहिले यसरी नै आराधना गर्नुभएको भए मैले खुसी भएर पहिले नै वरदान दिइसक्ने थिएँ र तपाईंको विजय भइसक्ने थियो ।।१०।।

**हरिले भन्नुभयो** – ब्रह्मा, शिव, इन्द्र आदि देवताहरू पनि तपस्याबाट जुन हजुरको दर्शन गर्न समर्थ हुँदैनन् त्यस्ता नानारूप र एकरूप, व्यक्त र अव्यक्तरूप श्रीगणेशको ध्यान गर्दछु ।।११।। हे श्रीगणेश ! हजुर अणुभन्दा अणुरूप र महान् आकाशभन्दा पनि महान् सत्त्वरूप हुनुहुन्छ । हजुरले

त्वं योऽणुभ्योऽणुस्वरूपो महद्भ्यो
व्योमादिभ्यस्त्वं महान् सत्त्वरूपः ।
सृष्टिं चान्तं पालनं त्वं करोषि
वारंवारं प्राणिनां दैवयोगात् ।।१२।।
सर्वस्यात्मा सर्वगः सर्वशक्तिः
सर्वव्यापी सर्वकर्ता परेशः ।
सर्वद्रष्टा सर्वसंहारकर्ता
पाता धाता विश्वनेता पिताऽपि ।।१३।।
एतादृशस्य ते देव ! दर्शनान्मम सिद्धयः ।
सम्भविष्यन्ति सर्वत्र तथाऽप्येकं वदामि ते ।।१४।।
ममैव योगनिद्रान्ते श्रुतेर्मलसमुद्भवौ ।
मधुकैटभौ महासत्त्वौ कन्तौ खादितुमुद्यतौ ।।१५।।
ताभ्यामहं ततो युद्धं कृतवान् बहुवत्सरम् ।
ततः क्षीणबलस्त्वाऽहं शरणं समुपागतः ।
अतो यथा तयोर्मत्तो वधः स्यात् तद् विचार्यताम् ।।१६।।
अन्येषामपि दैत्यानां जयेन यश उत्तमम् ।
देहि मे परमेशान ! भक्तिं ते ह्यनपायिनीम् ।।१७।।
यया मे कीर्तिरतुला त्रैलोक्यं पावयिष्यति ।

गणेश उवाच

यद् यत् ते प्रार्थितं विष्णो! तत् तत् ते भविता ध्रुवम्।।१८।।
यशो बलं परा कीर्तिरविघ्नश्च भविष्यति ।

मुनिरुवाच

एवमुक्त्वा महाविष्णुं तत्रैवाऽन्तर्दधे विभुः ।।१९।।
तत आनन्दपूर्णोऽसौ मेने तावसुरौ जितौ ।
प्रासादं निर्ममे तत्र स्फाटिकं भूरिरत्नकम् ।।२०।।
लसत्काञ्चनशिखरं चतुर्द्वारं सुशोभनम् ।
प्रतिमां स्थापयामास गण्डकीयोपलैः कृताम् ।।२१।।
देवाश्च मुनयः सिद्धविनायक इति प्रथाम् ।
चक्रुरत्र यतः सिद्धिः प्राप्तेयं हरिणा शुभा ।।२२।।

दैवयोगबाट प्राणीहरूको सृष्टि, पालन र संहार गर्नुहुन्छ ।।१२।। हे श्रीगणेश! हजुर सर्वात्मा, सर्वत्र विचरणशील, सर्वशक्ति-सम्पन्न, सर्वव्यापक, सर्वकर्ता र सर्वद्रष्टा महान् ईश्वर हुनुहुन्छ। हजुर सकल सृष्टिका संहारक, सर्वपालक, सर्वरक्षक, विश्वनायक र विश्वका जनक पनि हुनुहुन्छ ।।१३।। यस्ता सर्वगुणसम्पन्न हजुरको दर्शनबाट मैले जहाँ गए पनि सबै प्रकारका सिद्धि प्राप्त गर्नेछु तर अहिले म हजुर सामु एउटा कुरा निवेदन गर्न चाहन्छु ।।१४।। मेरो योगनिद्रा समाप्त भएपछि मेरै कानको मयलबाट उत्पन्न भएका अत्यन्त शक्तिशाली मधु र कैटभ नामक दानवहरूले ब्रह्माजीलाई खान खोजे ।।१५।। ती दुष्ट दानवहरूका साथ मैले धेरै वर्षसम्म युद्ध गरें, त्यसबाट मेरो शक्ति क्षीण भयो । अहिले म हजुरका शरणमा आएको छु । तसर्थ जसरी मबाट ती दुई दानवको वध हुनसक्छ, त्यो उपाय बताउनुहोस् ।।१६।। हे प्रभु ! हजुरको कृपाबाट म अरू दैत्यहरूमाथि पनि विजयी हुन सकूँ र उत्तम कीर्ति प्राप्त गर्न सकूँ । हे परमेश्वर ! मलाई हजुरले अविनाशी भक्ति पनि प्रदान गर्नुहोस् ।।१७।। जुन अनपायिनी भक्तिको साधनाबाट संसारमा मेरो अतुलनीय कीर्ति हुनेछ र त्यस कीर्तिले त्रिलोकीलाई नै पवित्र तुल्याउने छ ।

**श्रीगणेशले भन्नुभयो** - हे विष्णु ! तपाईंले जुन प्रार्थना गर्नुभएको छ, त्यो पाउनु हुनेछ । त्यसका साथै तपाईंले यश, बल र कीर्ति पनि पाउनुहुनेछ । तपाईंको कुनै पनि कार्यमा विघ्न हुने छैन ।

**भृगुले भन्नुभयो** - यसरी नारायणलाई भन्नुभएपछि भगवान् श्रीगणेश त्यहीं अन्तर्धान हुनुभयो ।।१८-१९।। भगवान् श्रीगणेशबाट वरदान पाएर प्रसन्न र आनन्दित हुनुभएका श्रीहरिले उहाँको अन्तर्धानपछि मैले अब ती दुई दानवलाई जित्न सक्छु भन्ने विश्वास गर्नुभयो । श्रीगणेशमा भक्ति भएका कारण श्रीनारायणले स्फटिक मणिद्वारा निर्मित, अनेक रत्नसम्पन्न, सुनको शिखरले सुहाएको, चार ढोका भएको, अत्यन्त रमणीय श्रीगणेशको मन्दिर बनाउनुभयो । त्यस मन्दिरमा कृष्णा गण्डकीको शिलाबाट बनेको विनायकको प्रतिमा स्थापित गर्नुभयो ।।२०-२१।। त्यस मन्दिरमा स्थापना गरिएको मूर्तिलाई देवता र मुनिहरूले सिद्धविनायक भनेर सम्बोधन एवं प्रचार गरे, किनकि त्यहीं नै भगवान् नारायणले मङ्गलदायक सिद्धि

सिद्धं क्षेत्रं ततस्तत् तु पप्रथे भुवि सर्वशः ।
ततो जगाम स हरिर्यत्र तौ मधुकैटभौ ।।२३।।

दृष्ट्वा तौ हरिमायान्तं जहसतुर्निनिन्दतुः ।
मेघश्यामं मुखं तेऽद्य दर्शितं नौ कुतः पुनः ।।२४।।

आवान्तु ते महामुक्तिं दास्यावोऽतः पुनः किल ।
लघुताञ्च प्रयातोऽसि किमर्थं रणमागतः ।।२५।।

हरिरुवाच

सहसा दहते सर्वं लघुरेव हुताशनः ।
लघुदीपो महद्रात्रौ यथा संहरते तमः ।।२६।।

तथा वामहमद्यैव शक्तो नाशाय दुर्मदौ ।

मुनिरुवाच

इति तस्य वचः श्रुत्वाऽतिक्रुद्धौ मधुकैटभौ ।।२७।।

सहसा जघ्नतुर्विष्णुं मुष्टिभ्यां हृदये भृशम् ।
ततः पुनर्मल्लयुद्धं तयोस्तस्य व्यवर्द्धत ।।२८।।

युद्ध्वा बहुदिनं ताभ्यां वरं दातुं समुत्सुकः ।
उवाच श्लक्ष्णया वाचा हरिस्तौ मधुकैटभौ ।।२९।।

मम प्रहारान् हि युवां सहाथे बहुलाः समाः ।
युवयोः पुरुषार्थेन प्रीतोऽहं दैत्यपुङ्गवौ ।।३०।।

युवयोः सदृशौ नैव सम्भूतौ न भविष्यतः ।

तावूचतुः

अस्मत्तस्त्वं वरान् ब्रूहि दास्यावस्तान् हरे बहून् ।।३१।।

आवां हि तव युद्धेन सन्तुष्टौ च भृशं त्वयि ।

मुनिरुवाच

तयोर्वचनमाकर्ण्य मायामोहितयोर्हरिः ।।३२।।

श्रुत्वा बभाण दैत्यौ मे वरान् दातुं समुद्यतौ ।
तदा मे वध्यतां यातं वर एष वृतो मया ।।३३।।

तदा सर्वं जलमयं दृष्ट्वा तौ मधुकैटभौ ।
ऊचतुः परमप्रीतौ तव हस्तात् मृतिः शुभा ।।३४।।

प्राप्त गर्नुभएको थियो ।।२२।। त्यसपछि त्यो ठाउँ पनि संसारमा सिद्धिक्षेत्रका नामबाट प्रसिद्ध भयो। श्रीगणेशको प्रतिष्ठा गरेपछि भगवान् हरि पनि मधु र कैटभ रहेको ठाउँमा पुग्नुभयो ।।२३।। हरिलाई आउनुभएको देखेर मधु र कैटभले उहाँको उपहास र निन्दा गर्दै भने - हामीलाई तिमीले आफ्नो बादलजस्तो कालो मुख देखाउन किन आयौ ? फेरि जोरी खोजेर आएका छौ भने हामीले तिमीलाई महामुक्तिको वरदान दिनेछौं । युद्धबाट भागेर हिंड्दा तिमीले आफ्नो लघुता आफै देखाइसकेका छौ । फेरि यस रणभूमिमा किन आयौ ? ।।२४-२५।।

**हरिले भन्नुभयो -** सानो आगोले पनि छिटै पोल्दछ, सानै बत्तीले पनि अन्धकारमय रातको समयमा घोर अन्धकारको नाश गर्दछ ।।२६।। हे मदमत्त दानवहरू ! म सानै भए तापनि मदोन्मत्त तिमी दुबै दानवको भर्खरै नाश गर्न सक्दछु।

**भृगुले भन्नुभयो -** श्रीहरिका यस प्रकारका वचन सुनेर अत्यन्त रिसाएका मधु र कैटभले अचानक विष्णुका छातीमा मुड्कीले प्रहार गरे । त्यसपछि ती दुवैका साथ श्रीहरिको मल्लयुद्ध प्रारम्भ भई दीर्घकालसम्म निरन्तर चलिरह्यो ।।२७-२८।। धेरै दिनसम्म मधु र कैटभका साथ युद्ध गरेपछि तिनीहरूलाई वरदान दिन उत्सुक हुनुभएका श्रीहरिले मीठो वचनद्वारा सम्बोधन गर्दै भन्नुभयो - 'हे मधु र कैटभ ! तिमीहरूले मेरा अनेक कठोर प्रहारलाई सजिलै सहन गर्‍यौ ! हे दैत्यश्रेष्ठहरू! तिमी दुबैको पुरुषार्थबाट म प्रसन्न भएको छु ।।२९-३०।। फेरि हरिले भन्नुभयो - 'तिमीहरूजस्ता बलवान् वीर संसारमा जन्मिएका थिएनन् र भविष्यमा पनि जन्मिने छैनन्।'

**मधु र कैटभले भने -** हे हरि ! हामी पनि तिम्रो पुरुषार्थबाट अत्यन्त प्रसन्न छौं । हामीसँग तिमीले चाहे जति वर माग, हामी पूरा गर्नेछौं ।

**भृगुले भन्नुभयो -** श्रीहरिले मायामोहित दैत्यहरूका वचन सुनेर भन्नुभयो - तिमीहरू मलाई वरदान दिन तयार छौ भने तिमी दुबैले मबाट मृत्यु प्राप्त गर । मैले माग्ने उत्तम वर यही हो ।।३१-३२।। भगवान् विष्णुले वर मागेपछि ती दुबै दैत्यले संसारको चारैतिर जलै जल देखी अत्यन्त हर्षित हुँदै परम प्रीतिले युक्त भएर भने - हे हरि ! तपाईंको हातबाट मर्न पाउनु हाम्रा लागि मङ्गलमय हुनेछ । अन्त्य अवस्थामा तपाईंको

अन्ते त्वच्चिन्तनात् सद्यो मुक्तिं यान्ति सनातनीम् ।
यत्र नोर्वी जलमयी तत्र नौ जहि माधव ।।३५।।
सर्वं त्यजावो नौ सत्यं सत्ये सर्वं प्रतिष्ठितम् ।

मुनिरुवाच

तयोरित्थं वचः श्रुत्वा जघने तौ दधार ह ।।३६।।
चक्रेण क्षुरधारेण चिच्छेद शिरसी तयोः ।
ततो देवा मुमुदिरे ववर्षुः कुसुमानि च ।।३७।।
गन्धर्वा ननृतुः सर्वे जगुरप्सरसाङ्गणाः ।
ततस्तु विष्णुरभ्येत्य ब्रह्माणं परमेष्ठिनम् ।।३८।।
कथयामास वृत्तान्तं सर्वं हर्षविनिर्भरः ।

हरिरुवाच

यदाऽशक्तो विजेतुं तौ तदाहं गिरिशं गतः ।।३९।।
शङ्करेणोपदिष्टोऽहं षडर्णं मन्त्रमुत्तमम् ।
आराधयमहं तेन देवं विघ्नेश्वरं विभुम् ।।४०।।
तेन दत्ता वरा मह्यं नानाकामफलप्रदाः ।
तत्प्रभावान्मया दुष्टौ निहतौ मधुकैटभौ ।।४१।।
स्तुतः संपूजितः सोऽथ तदैवाऽन्तर्दधे विभुः ।
विज्ञातो महिमा तस्य गणेशस्य महात्मनः ।।४२।।
शङ्करस्य प्रसादेन हनिष्ये दैत्यदानवान् ।
देवाश्च मुनयः सर्वे स्तुत्वा देवं गजाननम् ।।४३।।
ब्रह्माणं शङ्करं माञ्च ययुः स्वं स्वं निकेतनम् ।
य इदं शृणुयान्नित्यं माहात्म्यं पापनाशनम् ।।४४।।
कस्मादपि भयं न स्याल्लभते सार्वकामिकम् ।।४५।।

चिन्तन गरेर प्राणीहरू छिटै सनातन मुक्तिमा प्राप्त हुन्छन् । हे माधव! जुन जमिनमा पानी छैन, त्यहाँ लगेर हाम्रो वध गर्नुहोस्। हामी सबै कुरा त्यागिदिन्छौं । हाम्रो यो भनाइ सत्य हो र सबै कुरा सत्यमा टिकेको छ भन्ने कुरामा पनि हामी विश्वस्त छौं ।

**भृगुले भन्नुभयो -** मधु र कैटभका यी कुरा सुनेर हरिले ती दुवैलाई आफ्नो जघनमा धारण गर्नुभयो।।३३-३६।। त्यसपछि श्रीहरिले छुराको झैं तीखो धार भएको चक्रद्वारा ती दुबै दानवका शिर काटिदिनुभयो । मधु र कैटभका शिर काटिएका देखेर खुसी भएका देवताहरूले पुष्पवर्षा गरे, गन्धर्वहरू गाउन थाले र अप्सराहरू नाच्न थाले । आफ्नो सफलताका कारण अत्यन्त प्रसन्न मुद्रामा विराजमान हुनुभएका नारायणले ब्रह्माजीका नजिकमा आई सबै वृत्तान्त सुनाउनुभयो।

**हरिले भन्नुभयो-** हे विधाता ! जुन बेला मधु र कैटभलाई परास्त गर्न म असमर्थ भएँ, त्यस बेला भगवान् शङ्करका नजिकमा पुगें । उहाँले मलाई श्रीगणेशको उत्तम षडक्षरी मन्त्र प्रदान गर्नुभयो । मैले त्यस मन्त्रको जप गरेर विघ्नेश्वर एवं विभु श्रीगणेशको आराधना गरें ।।३७-४०।। प्रसन्न हुनुभएका श्रीगणेशले मलाई अनेक थरि कामनापूरक वर प्रदान गर्नुभयो। उक्त वरदानका प्रभावबाट मैले दुष्ट दानव मधु र कैटभको वध गरें ।।४१।। मबाट गरिएका स्तुति र पूजाले प्रसन्न हुनुभएका श्रीगणेश वरदान दिएपछि अन्तर्धान हुनुभयो । आज मैले मधु र कैटभको वध गरेपछि श्रीगणेशको महिमा साक्षात्कार गर्ने अवसर पाएँ ।।४२।। भगवान् शङ्करको कृपाबाट मैले अरू दानवहरूको पनि वध गर्नेछु । मधु र कैटभको वधबाट प्रसन्न भएका सबै मुनिहरू भगवान् गणेश, ब्रह्मा, शिव र नारायणको स्तुति गरी आ-आफ्ना धामतर्फ लागे । जसले मधु- कैटभको वधमा आधारित पापनाशक यो श्रीगणेशमाहात्म्य सुन्दछ, त्यसलाई कुनै कालमा पनि कसैबाट भय हुने छैन र त्यसले चिताएका सबै कामना परिपूर्ण हुनेछन् ।।४३-४५।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे सिद्धक्षेत्रोत्पत्तिकथनं नामाष्टादशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'मधुकैटभको वध र सिद्धक्षेत्रको उत्पत्ति' शीर्षकान्वित अठारौं अध्याय पूर्ण भयो ।।१८।।

ॐ

# एकोनविंशोऽध्यायः { १९ अध्याय }

भृगुरुवाच

श्रुत्वाख्यानमिदं व्यासः षडर्णविधिमप्यथ ।
पुनरूचे विधातारं नातिपूर्णाशयो यथा ।।

व्यास उवाच

सिद्धक्षेत्रस्य माहात्म्यं गणनाथस्य चैव हि ।
श्रुतं पापहरं सर्वं कामपुण्यविवर्धनम् ।।१।।
पुनश्च वद मे ब्रह्मन् विनायककथानकम् ।
तृप्तिं न याति परमां पिबन्नपि कथामृतम् ।।२।।

ब्रह्मोवाच

पाराशर्य ! महाख्यानं कथयामि तवाग्रतः ।
सर्वदेवाधिदेवस्य गणेशस्य विभोः शुभम् ।।३।।
विदर्भदेशे राजाऽभूद् दानशूरो महाबली ।
नाम्ना भीम इति ख्यातो दाता भीमपराक्रमः ।
कौण्डिन्यनगरे तस्य निवासोऽभून्महामते ।।४।।
सामन्ताः करदा यस्य करदा इतरे नृपाः ।
वाजिनां वारणानां च पत्तीनां कोटयो दश ।।५।।
रथानामग्रतो यान्ति यान्ति तत्पृष्ठतोऽपि च ।
ब्राह्मणानां सहस्राणि यमाश्रित्य मुदं ययुः ।।६।।
तस्य भार्या महाभागा नाम्नाऽभूच्चारुहासिनी ।
विकसत्पद्मवदना मृगशावकलोचना ।।७।।
ब्रह्मण्या दैवतपरा नित्यं धर्मपरायणा ।
पतिव्रता पतिप्राणा पतिवाक्यरता सदा ।।८।।
अपुत्रा दैवयोगेन जाता सा वरवर्णिनी ।
तां निरीक्ष्य तदा भीमश्चारुसर्वाङ्गशोभिनीम् ।।९।।
अवदद् दुःखितो वाक्यं पुत्रहीनो नृपोत्तमः ।
सर्वं राज्यं परित्यज्य गन्तव्यं वनमुत्तमम् ।।१०।।
अपुत्रस्य गतिर्नैव स्वर्गो वा सुखमेव च ।
देवा हव्यं न गृह्णन्ति पितरः कव्यमेव च ।।११।।
वृथा मे जननी जन्म पिता गेहं धनं कुलम् ।
विफलं सकलं कर्म विना पुत्रेण निश्चितम् ।।१२।।

**भृगुले भन्नुभयो** - ब्रह्माजीका मुखबाट यो आख्यान र षडक्षरी मन्त्रको विधिसमेत सुनेर नअघाएका वेदव्यासले फेरि उहाँसँग निवेदन गर्नुभयो ।

**व्यासले भन्नुभयो** - मैले हजुरका मुखारविन्दबाट सिद्धक्षेत्रको महिमा र पापनाशक, कामनापूरक एवं पुण्यवर्धक श्रीगणेशको माहात्म्य सुनें । हे विधाता ! फेरि पनि मलाई श्रीगणेशका कथा सुनाउनुहोस् । कथारूपी अमृतलाई जति पटक पान गर्दा पनि म अघाएको छैन ।।१-२।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! अब म तपाईँलाई देवताहरूका पनि देवता, अन्तर्यामी श्रीगणेशको पवित्र कथा सुनाउँछु।।३।। अघि विदर्भ देशमा दानशूर, महाबली, उदार र पराक्रमी भीमनामक राजा थिए । अत्यन्त बुद्धिमान् ती राजाको बसाइँ कौण्डिन्यनगरमा थियो ।।४।। ती भीम राजालाई सामन्त र अरू राजाले पनि कर तिर्ने गर्दथे। दश करोड हात्ती सेना, घुडसवार सेना र पैदल सेना यिनका अघि-पछि लाग्दथे । हजारौं ब्राह्मण भीम राजाको आश्रयमा बस्न पाएर प्रसन्न थिए ।।५-६।। ती राजाकी भाग्यवती रानीको नाम चारुहासिनी थियो । ती रानी विकसित कमलसमान सुन्दर अनुहार भएकी, मृगका बच्चाका जस्ता चञ्चल र सुन्दर आँखाले सुहाएकी, ब्राह्मणमा भक्ति गर्ने, देवाराधनामा तत्पर, धर्मपरायण, पतिव्रता, पतिकी पियारी र पतिकी आज्ञापालिका थिइन् ।।७-८।। ती रानी दैवयोगले पुत्रहीन थिइन् । अङ्गप्रत्यङ्गमा सौन्दर्य भरिएकी ती रानीलाई पुत्रहीन र चिन्तित देखेर दुःखित राजा भीम भन्न लागे - हे रानी ! अब सबै राज्य परित्याग गरी वन जानु नै सर्वोत्तम उपाय हो। पुत्रहीन मानिसको गति हुँदैन, स्वर्गप्राप्ति हुँदैन र सुख पनि हुँदैन । हवन गरेको हव्य देवताले ग्रहण गर्दैनन् र श्रद्धापूर्वक दिएको कव्य पितृहरूले स्वीकार गर्दैनन् ।।९-११।। पुत्र नहुनाले मजस्तो अभागीलाई जन्म दिने आमा र बुबाको प्रयास पनि विफल भयो । मेरो जन्म विफल भयो । वास्तवमा मेरा घर, धन, कुल र कर्मसमेत विफल भए ।।१२।। यसरी

स एवं निश्चयं कृत्वा द्वावमात्यौ समाह्वयत् ।
मनोरञ्जननामैकः सुमन्तुनामकोऽपरः ।।१३।।
आन्वीक्षिकीं त्रयीं वार्त्तां जानन्तौ षोडशीः कलाः ।
आगत्य तत्क्षणादेव नृपन्तं नेमतुर्मुने ।।१४।।
तावुवाच ततो भीमो राज्यं मे परिपाल्यताम् ।
मम वा मम पत्न्या वा दुरितं पूर्वजन्मजम् ।।१५।।
तेन नौ नास्ति सन्तानमुभयत्र सुखावहम् ।
यद्यहं पुनरागन्ता तदा तन्मम दीयताम् ।।१६।।
नो चेदुभाभ्यां मे राज्यं विभज्य परिगृह्यताम् ।
एवं निश्चित्य स नृपः स्वस्तिवाचनपूर्वकम् ।।१७।।
कृत्वा दानानि बहुशो ब्राह्मणेभ्यो ययौ पुरात् ।
सपत्नीको नृपवरोऽमात्याभ्यां सह नागरैः ।।१८।।
गव्यूतिमात्रं गत्वा तु विससर्जाखिलाँस्तदा ।
अमात्यावूचतू राजन्नावां याव: सहैव ते ।।१९।।
सुहृदो नागराश्चैव रुरुदुर्भृशदुःखिताः ।
तानुवाच न भीः कार्याऽमात्यौ वोऽधिपतीकृतौ ।।२०।।
यथाहं वस्तथैवैतौ पालनं सङ्करिष्यतः ।
इति तान् समनुश्वास्य तावुवाच पुनर्नृपः ।।२१।।
दत्तं राज्यं भवद्भ्यां मे रक्षतं सर्वथा पुरम् ।
इति सर्वान् विसृज्यैव सपत्नीको ययौ पुरात् ।।२२।।
भ्रममाणो ददर्शैकं कासारं कमलैर्युतम् ।
पुष्पितद्रुमसंशोभि नानाजलचरान्वितम् ।।२३।।
ततोऽस्य निकटे रम्यमाश्रमं पश्यतः शुभम् ।
राजा च राजपत्नी च सर्वानन्दविवर्धनम् ।।२४।।
यत्र वैरं न चक्रुस्ते जातिवैरा गजादयः ।
सिंहाश्च नकुलाः सर्पा बिडाला मूषकादयः ।।२५।।
ददृशतुस्तत्र मुनिं विश्वामित्रं कुशासने ।
शिष्यैः परिवृतं शान्तं वेदाध्ययनतत्परैः ।।२६।।

निश्चय गरेर ती राजाले मनोरञ्जन र सुमन्तु नामक आफ्ना दुई जना मन्त्रीलाई आफ्नो समीपमा बोलाए ।।१३।। श्रुति, आन्वीक्षिकी, वाणिज्य एवं कलाशास्त्रका ज्ञाता ती मन्त्रीहरूले तुरुन्तै राजाको समक्षमा आएर प्रणाम गरे ।।१४।। राजा भीमले तिनलाई सम्बोधन गर्दै भने- अब तिमी दुबैले राज्यको पालन गर । मेरो अथवा मेरी रानीको पूर्वजन्मको कुनै पाप रहेछ। त्यसले गर्दा हाम्रा लागि दुबै लोकमा सुख दिने सन्तान भएन । म वनमा जान्छु । कुनै समयमा वनबाट फर्केर आएँ भने तिमीहरूले यो राज्य मलाई फिर्ता गर्नेछौ ।।१५-१६।। म नआएमा तिमी दुबैले यो राज्य आपसमा बाँडेर भोग गर्नेछौ। यसरी मन्त्रीहरूको जिम्मामा राज्य सुम्पेर वन जाने निश्चय गरी ती राजा भीमले स्वस्तिवाचनपूर्वक अनेक ब्राह्मणहरूलाई दान दिएर राजधानीबाट पत्नी, दुई मन्त्री र केही नगरवासीहरूका साथ वनका लागि प्रस्थान गरे ।।१७-१८।। दुई कोश बाटो हिंडेपछि राजा भीमले ती सबै प्रजा, मित्र र मन्त्रीहरूलाई बिदा गरे । त्यस बेला ती मन्त्रीहरूले भने- हे राजन्! हामीहरू पनि हजुरसँगै वन जान्छौं ।।१९।। मित्र र नगरवासीहरू पनि वियोगका दुःखले साह्रै रोए । राजाले प्रजाजनलाई भने - तिमीहरूले कुनै डर नमान । यी दुबै मन्त्रीलाई मैले तिमीहरूका शासक बनाएको छु। जसरी मैले राज्यको रक्षा गरिरहेको थिएँ त्यसैगरी यिनले पनि राज्यको रक्षा गर्नेछन् । यसरी प्रजालाई सान्त्वना दिएपछि राजा भीमले ती मन्त्रीहरूलाई भने - 'मैले मेरो राज्य तिमीहरूलाई सुम्पेको छु । अब तिमीहरूले सर्वात्मना समर्पित भएर राज्यको रक्षा गर ।' यसरी अह्राएपछि ती राजाले सबैसँग बिदावारी भई नगरबाट सपत्नीक प्रस्थान गरे ।।२०-२२।। वनमा घुम्दै जाँदा भीम राजाले एक दिन कमलका फूलले भरिएको, फुलिरहेका फूलका वृक्षले शोभायमान र अनेक थरि जलचर प्राणीको क्रीडाभूमिका रूपमा रहेको तलाउ देखे ।।२३।। ती दम्पतीले त्यस तलाउकै नजिकमा एउटा मङ्गलमय र हृदयमा आनन्दसञ्चार गराउने सुन्दर आश्रम पनि देखे ।।२४।। जुन आश्रममा रहेका जाति वैरी- सिंह, न्याउरीमूसो, सर्प, बिराला, मूसा आदि जनावरले आपसमा वैर गर्दैनथे । त्यस आश्रममा ती राजा-रानीले कुशको आसनमा विराजमान, वेदाध्ययनमा तत्पर शिष्यहरूले घेरिएका र शान्त स्वभावका विश्वामित्र मुनिलाई देखे ।।२५-२६।। हात

प्रणिपत्य महात्मानं कृताञ्जलिपुटावुभौ ।
पुनः पुनर्नमस्कारान् पादौ धृत्वा प्रचक्रतुः ।।२७।।
उत्थाप्य मुनिशार्दूलो विश्वामित्रस्तपोनिधिः ।
उवाच श्लक्ष्णया वाचा विज्ञातार्थो नृपं तदा ।।२८।।

विश्वामित्र उवाच

भविता ते सुतो राजन् गुणयुक्तो महायशाः ।
कुतस्त्वमागतः किं ते नगरं नाम तद् वद ।।२९।।
ततस्ते पापनाशार्थं यतिष्ये नृपसत्तम ।

भीम उवाच

विदर्भविषये स्वामिन् ! कौण्डिन्यं नगरं मम ।।३०।।
भीम इत्येव मे नाम पत्नीयं चारुहासिनी ।
पुत्रार्थं च कृतो यत्नस्तपोदानव्रतादिभिः ।।३१।।
नागता करुणा देवे पूर्वजन्मकृतादघात् ।
त्यक्त्वा राज्यं वने यातौ दृष्टौ त्वच्चरणौ मुने ।।३२।।
भ्रमन् वनानि बहुशो दैवेनेहोपसादितः ।
साधूनां सङ्गतिः सद्यो ददाति फलमुत्तमम् ।।३३।।
अतो मे भवदाशीर्भिर्जातः पुत्रो न संशयः ।
विद्याव्रततपोदानयज्ञस्वाध्यायकारिणः ।।३४।।
दयादमवतस्तेऽद्य नाशीर्व्यर्था भवेन्मुने ।
परन्तु कलुषं मे किं पूर्वजन्मकृतं मुने ।।३५।।
वद तत्र प्रतीकारं सर्वज्ञोऽसि मतो मम ।।

ब्रह्मोवाच

इति तस्य वचः श्रुत्वा विश्वामित्रो महामुनिः ।
तस्मै राज्ञे पूर्वकथां कथयामास सादरम् ।।३६।।

विश्वामित्र उवाच

कुलधर्मास्त्वया त्यक्ताः श्रीमदान्धेन दुर्मते ।
वेदे शास्त्रे पुराणे च लौकिके च प्रतिष्ठिताः ।।३७।।
ते सर्वे पूर्वजा नित्यं पुपूजुर्गणनायकम् ।
तस्य क्रोधवशान्नैव सन्ततिस्तव जायते ।।३८।।
येन ते कुलदेवत्वं सम्प्राप्तोऽसौ गजाननः ।
भणैतत्ते महावीर! शृणु सादरमादितः ।।३९।।

जोडेका ती राजदम्पतीले झुकेर पाउ स्पर्श गरी उनलाई बारबार प्रणाम गरे ।।२७।। मुनिश्रेष्ठ र तपोनिधि विश्वामित्र ऋषिले राजाको आशय बुझी राजालाई भुइँबाट उठाएर मधुरवाणीद्वारा सम्बोधन गर्दै भन्नुभयो ।।२८।।

**विश्वामित्रले भन्नुभयो -** हे राजन् ! तपाईं कहाँबाट आउनुभयो ? तपाईंको नगरको नाम के हो ? तपाईंले चिन्ता मान्नुपर्दैन । यसपछि तपाईंको कोखमा गुणवान् र यशस्वी पुत्रको जन्म हुनेछ । म तपाईंको पापनाश गर्न प्रयत्न गर्नेछु।

**भीम राजाले भने -** हे महर्षि ! विदर्भ देशमा रहेको कौण्डिन्यनगर मेरो नगर हो ।।२९-३०।। मेरो नाम भीम हो भने मेरी पत्नीको नाम चारुहासिनी हो । हामीले पुत्रप्राप्तिका लागि तपस्या, दान र व्रत गर्‍यौं । पूर्वजन्ममा गरेको पापका कारण हामीप्रति परमेश्वरको हृदयमा दया जागेन । त्यस कारण हामी पुत्रहीन छौं । अहिले राज्यत्याग गरी हामी वनमा आएका छौं र सौभाग्यले हजुरका चरणकमलको दर्शन गर्ने अवसर प्राप्त गर्‍यौं ।।३१-३२।। वन-वनमा घुम्दाघुम्दै दैवले हामीलाई यहाँ ल्याइपुर्‍यायो । सज्जनको सङ्गतिले छिटै उत्तम फल दिने कुरामा म विश्वस्त छु ।।३३।। हजुरको आशीर्वादबाट छोरा जन्मिने छ भन्ने कुरामा पनि मैले कत्ति सन्देह मानेको छैन । विद्या, व्रत, तपस्या, दान, यज्ञ र स्वाध्यायमा अखण्डरूपमा लागिरहने दया र इन्द्रियदमनजस्ता गुणहरूबाट सुहाउनुभएका हजुरको आशीर्वाद खेर जाँदैन । परन्तु मैले पूर्वजन्ममा गरेको पाप कुन हो ? र त्यसको प्रतिकार गर्ने उपाय के हो ? त्यसबारे मलाई जानकारी गराइदिनुहोस् । किनकि हजुर सर्वज्ञ हुनुहुन्छ।

**ब्रह्माजीले भन्नुभयो -** राजा भीमका ती कुरा सुनेर महामुनि विश्वामित्रले राजालाई आदरपूर्वक पूर्वकथा सुनाउन आरम्भ गर्नुभयो ।।३४-३६।।

**विश्वामित्रले भन्नुभयो-** हे राजन् ! पूर्वजन्ममा तपाईंले ऐश्वर्यमत्त भएर वेद, शास्त्र, पुराण र लोकपरम्परामा आश्रित कुलधर्मको त्याग गर्नुभयो। तपाईंका पूर्वजहरूले नित्य गणनायक भगवान्‌को पूजा गर्ने गर्दथे, तपाईंले गर्नुभएन । तपाईंप्रति श्रीगणेश रिसाउनुभयो र तपाईंलाई सन्तान भएनन् । किनकि भगवान् श्रीगणेश तपाईंका कुलदेवता हुनुहुन्थ्यो । उहाँको तिरस्कारबाट कल्याण हुने कुरा भएन । हे वीर ! अब म तपाईंको पूर्वजन्मका विषयमा शुरुदेखि नै बताउँछु।।३७-३९।। हे राजा भीम !

सप्तमः पुरुषस्त्वत्तः पूर्वं भीमो नृपोऽभवत् ।
रूपबान्धवसम्पन्नो वल्लभो नाम सत्तमः ।
तस्यापि बहुकालेन शिशुरेकोऽभवन्नृप ।।४०।।

अथ तस्याऽभवद् देहो मूको बधिर एव च ।
अतिदुर्गन्धवत्पूयस्त्राववान् कुब्ज एव च ।।४१।।

तं दृष्ट्वा जननी तस्य कमला दुःखिता भृशम् ।
अचिन्तयत् स्वान्तमध्ये लोके सम्यगपुत्रता ।।४२।।

नैतादृशं पुत्रवत्त्वं श्लाघ्यं दुःखकरं भृशम् ।
मरणं मे विधात्रा किं नास्य वा क्रियतेऽधुना ।।४३।।

कथं वा मुखमद्याऽहं दर्शयिष्ये सुहृज्जनान् ।
एवं विलपती दुःखाद् रुरोद भृशदारुणम् ।।४४।।

श्रुत्वा तद् रुदितं भर्ता सूतिकागारमागमत् ।
दृष्ट्वा तथाविधं बालं भृशं पत्नीं च दुःखिताम् ।।४५।।

बभाण मृदुवाक्येन सान्त्वयन् कर्ममार्गवित् ।
मा दुःखं कुरु कल्याणि कर्मणां गतिरीदृशी ।।४६।।

पूर्वजन्मकृतात् पापाज्जायते दुःखभाङ् नरः ।
दुःखवान् सुखमाप्नोति सुखवानपि तत् पुनः ।।४७।।

न हि शोच्यो हि बालोऽयं समीचीनो भविष्यति ।
यथास्य पूर्ववृत्तं स्यात् तथैवास्य भविष्यति ।।४८।।

वयं च प्रयतिष्यामो मणिमन्त्रमहौषधैः ।
तपोभिश्च जपैर्देवपूजायात्राविधानतः ।।४९।।

सम्यक्कर्तुं शिशुं सुभ्रूः प्रस्तुतं यत्समाचर ।
एवं प्रबोधिता साध्वी त्यक्त्वा शोकं शिशुं ततः ।।५०।।

क्षालयित्वा जलैस्तं तु जहर्ष सखीभिः सह ।
सर्वमाभ्युदयं चक्रे पुत्रस्य जननोचितम् ।।५१।।

पूजयामास विप्रान् स सा तत् पत्न्यो ह्यनेकशः ।।५२।।

तपाईंदेखि सात पुस्ता अघिका राजपुरुषको नाम वल्लभ थियो । उनी स्वरूप र इष्ट-मित्रले सम्पन्न थिए। विवाहका अनेकौं वर्ष बितेपछि मात्र तिनलाई एउटा छोरा जन्मियो । परन्तु त्यो बालक लाटो, बहिरो र कुजो थियो । त्यतिमात्र होइन त्यो शरीरबाट दुर्गन्ध आउने रोगले ग्रस्त पनि थियो । त्यसका शरीरबाट निरन्तर रगत र पीप बगिरहन्थ्यो । बालकलाई त्यस रूपको देखेर आमा कमला अत्यन्त दुःखित थिइन् । उनले मनमा विचार गरेकी थिइन्- 'संसारमा अपुत्र भएर रहन बरु वेस हुन्छ तर यस्तो पुत्रबाट पुत्रवान् अथवा पुत्रवती हुनु कलङ्कित हुनु हो र दुःख पाउनुमात्र हो। विधाताले मलाई अथवा बालकलाई किन मार्दैनन् ? मैले आफन्त र मित्रका सामु अब कसरी मुख देखाऊँ?' यसरी सूतिकागारमा बसी विलाप गर्ने ती रानी एकान्तमा धेरै बेरसम्म रोइरहिन्।।४०-४४।। रानीको रोदन सुनेर राजा वल्लभ सूतिकागारमा आए । कर्ममार्गका ज्ञाता राजा वल्लभले विरूप बच्चा देखेर रोइरहेकी रानीलाई मीठा वचनद्वारा सम्झाउँदै भने – हे कल्याणी ! तिमीले दुःख नमान । कर्महरूको गति यस्तै हुन्छ । पूर्वजन्ममा गरेका पापका कारण मानिसले दुःख भोग गर्नुपर्दछ । संसारमा कर्मका कारण नै दुःखी मानिस सुखी बन्न सक्छ र सुखी मानिस पनि दुःखमा पर्न सक्दछन्।।४५-४७।। यस बालकलाई देखेर तिमीले चिन्ता नगर, पछि यो बालक राम्रो हुनेछ । हे सुन्दरी! यसले पूर्वजन्ममा जस्तो आचरण गरेको छ त्यस्तै फल प्राप्त गर्नेछ । हामी मणि, मन्त्र, औषधि, तपस्या, जप, देवार्चना, देवयात्रा आदि विधानबाट यसलाई राम्रो तुल्याउन प्रयास गर्नेछौं । अहिले तिमीले माताले गर्नुपर्ने कर्तव्यको पालन गर। यसरी श्रीमान्बाट उपदेश पाएपछि ती रानीले चिन्ता छाडेर पानीले शिशुलाई स्नान गराइन् र सखीहरूका साथ खुसी पनि मनाइन्। राजाले पुत्रजन्मको उपलक्ष्यमा सबै माङ्गलिक कार्य सम्पन्न गरे । राजा, रानी र अरू रानीहरूले समेत ब्राह्मणहरूको स्वागत, सत्कार र सम्मान पनि गरे ।।४८-५२।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे कमलापुत्रवर्णनामैकोनविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'रानी कमलाको कोखबाट विरूप पुत्रजन्म' शीर्षकान्वित उन्नाइसौं अध्याय पूर्ण भयो ।।१९।।

ॐ

## विंशोऽध्यायः { २० अध्याय }

ब्रह्मोवाच

ततः स ब्राह्मणान् साधून् दैवज्ञान् वेदनिष्ठितान् ।
आकार्य प्रतिपूज्यादौ रत्नवासोधनादिभिः ।।१।।

पृष्ट्वा तान् दक्ष इत्येव नाम चक्रे सुतस्य सः ।
जपमन्त्रप्रयोगाँश्च चकारौषधसञ्चयान् ।।२।।

स्वयञ्च द्वादशाब्दानि चकार परमं तपः ।
पुत्ररोगविमुक्त्यर्थं स्वसन्तानस्य वृद्धये ।।३।।

नापश्यद् रोगनिर्मुक्तं पुत्रं तं स यदा नृपः ।
तदा निर्वेदमापन्नो जगाद क्रोधमूर्च्छितः ।।४।।

गच्छ मे भवनाद् राज्ञि कमले ! पुत्रसंयुता ।
नेमं पुत्रं न च त्वाहं द्रष्टुं शक्त इतः परम् ।।५।।

इति निर्भर्त्सिता तेन वल्लभेन तदा सुतम् ।
आदाय कमला तस्मान्नगरात् प्रस्थिता वनम् ।।६।।

रुदती शोकसंविग्ना दुःखिताश्रु प्रमार्जती ।
वहन्ती पृष्ठभागे तं क्षुत्तृट्श्रमविकर्षिता ।।७।।

ग्रामाद् ग्रामान्तरं याता भिक्षाचारा भृशातुरा ।
तस्करैर्लुण्ठितं तस्या वसनं भूषणादिकम् ।।८।।

ततो ग्रामान्तरं गत्वा न्यस्य पुत्रं शिवालये ।
भिक्षार्थं पुरमध्ये सा बभ्राम नृपवल्लभा ।।९।।

कदाचित् सह पुत्रेण भिक्षितुं सा पुरं ययौ ।
कस्यचिद् द्विजमुख्यस्य वायुस्पर्शेन सोऽर्भकः ।।१०।।

भक्तेरतिशयात् साक्षात्कृतो लम्बोदरेण सः ।
चक्षुष्मान् श्रुतिसम्पन्नो दिव्यदेहोऽभवत् तदा ।।११।।

जहर्ष कमला त्यक्त्वा सर्वं दुःखं निरीक्ष्य तम् ।
मञ्जुलां सुखदां वाचमुच्चरन्तं मुहुर्मुहुः ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि राजा वल्लभले ब्राह्मण, साधु, ज्योतिषी र श्रोत्रियहरूलाई निमन्त्रित गरी रत्न, वस्त्र, धन आदिद्वारा स्वागत-सत्कार गरेर तिनकै निर्देशनअनुसार भर्खर जन्मेका बालकको दक्ष भन्ने नामकरण गरे । त्यस बालकलाई स्वस्थ र सुन्दर तुल्याउन जप, मन्त्रको प्रयोग र औषधोपचार पनि गरे ।।१-२।। स्वयं राजा वल्लभले छोराको रोगमुक्ति र सन्तानको वृद्धिका लागि बाह्र वर्षसम्म परम तपस्या पनि गरे। त्यति गर्दा पनि छोराको रोग निर्मूलन नहुँदा उनलाई ठूलो निर्वेद भयो । अनि रिसाएर उनले रानीलाई भने - हे कमला ! तिमी मेरो घरबाट छोरा लिएर बाहिर निस्क । म अब तिमीलाई र तिमीले जन्माएको यो विरूप छोरालाई हेर्न चाहन्नँ ।।३-५।। राजा वल्लभले यसरी गर्जेर तर्जना गरेपछि कमला पनि छोरालाई साथमा लिएर त्यस नगरबाट वनतर्फ लागिन् ।।६।। रोइरहेकी, शोकले सुकेकी, दुःखित, आँखाबाट बगिरहेका आँसु पुछ्दै गरेकी, छोरालाई पीठ्यूँमा राखेर भौंतारिंदा भोक र प्यासले व्याकुल भएकी ती कमला एउटा गाउँबाट अर्को गाउँमा घुमिरहेकी थिइन् । तिनले भिक्षा मागेर पेटको आगो निभाइरहेकी थिइन् र साह्रै आतुर अवस्थामा थिइन् । त्यो विपत्तिको अवस्थामा पनि वनका बीचमा तिनीमाथि डाँकाहरूले आक्रमण गरी तिनीसँग भएका वस्त्र र गहना लुटे ।।७-८।। त्यसपछि ती कमला कुनै गाउँमा पुगिन् र त्यहाँको शिवालयमा छोरालाई राखेर भिक्षा माग्न नगरमा डुलिन् ।।९।। कुनै दिन रानी कमला आफ्नो छोरालाई पीठ्यूँमा राखेर भिक्षा माग्न नगरमा गएकी थिइन् । त्यस बेला कुनै उत्तम ब्राह्मणका शरीरको हावाको स्पर्श र भगवान् श्रीगणेशमा अतिशय भक्तिका कारण प्रभु श्रीगणेशको कृपादृष्टि पर्नाले त्यो बालक आँखाले देख्न सक्ने र कानले सुन्न सक्ने हुनुका साथै सुन्दर स्वरूपले सम्पन्न पनि भयो ।।१०-११।। दिव्य देहसम्पन्न बालकले मीठो वाणी उच्चारण गरिरहेको देखेर कमलाले सबै दुःख बिर्सी परम हर्षको अनुभव गरिन् ।।१२।। त्यस बेला तिनले तर्कना गर्न

तर्कयामास कमला मणिमन्त्रमहौषधैः ।
अनुष्ठानैर्महाहोमैर्न सम्यग् यो बभूव ह ।।१३।।

स कथं मारुतस्पर्शात् समीचीनोऽभवत् सुतः ।
अथ तं पुरुषं क्वाहं द्रक्ष्ये दुष्कर्मनाशनम् ।।१४।।

इत्युक्त्वा सुतमालिङ्ग्य सा तस्थौ विगतज्वरा ।
तमादाय गता भिक्षां कर्तुं तन्नगरे पुनः ।।१५।।

नागरा भोजयामासुरुभावामन्त्र्य सादरम् ।
नानापक्वान्नशाकाद्यैः शर्कराघृतपायसैः ।।१६।।

एवं प्रतिदिनं तौ तु भुक्त्वानुदिवसं मुदा ।
आपतुर्धनवस्त्राणि नूतनानि वराणि च ।।१७।।

तमपृच्छन्नागरिकः पितुस्ते नाम मे वद ।
को देशः किं पुरं ज्ञातिः का च ते वृत्तमेव च ।।१८।।

इति तद्गिरमाकर्ण्य दक्षो नाम तमब्रवीत् ।
ततो मातरमागम्य पितरं नगरं कुलम् ।।१९।।

वृत्तञ्च परिपप्रच्छ ततस्तं पुनरब्रवीत् ।
कर्नाटे भानुनगरे वल्लभो मे पिता महान् ।।२०।।

क्षत्रियो बलसम्पन्नः ख्यातो रिपुबलार्दनः ।
तस्येयं कमला जाया सुतोऽहं दक्षसंज्ञकः ।।२१।।

उत्पन्नोऽहं यदा ब्रह्मन्नन्धो बधिर एव च ।
अनेकक्षतसम्पन्नो माता त्यक्तुं तदोद्यता ।।२२।।

पित्रा निषेधिता सा च यत्नं बहु तथाऽकरोत् ।
द्वादशाब्दं तपस्तप्त्वा पिता पुण्यं न्यवेदयत् ।।२३।।

न च मे पाटवं देहे पश्यति स्म पिता यदा ।
तदा विसर्जयामास मातरं माञ्च नागर ।।२४।।

इति सर्वं जगौ तस्मै दक्षो मातृमुखोद्गतम् ।
अत्राऽहं सुभगो जातो वायुस्पर्शेन कस्यचित् ।।२५।।

थालिन् - 'मणि, मन्त्र, औषधिको प्रयोग, मन्त्रको अनुष्ठान र होमबाट पनि यो बालक स्वस्थ हुन सकेन तर आज कुनै ब्राह्मणका शरीरको हावाको स्पर्शबाट मात्र कसरी सुन्दर र स्वस्थ भयो ? ती पवित्र र दुष्कर्मनाशक ब्राह्मणलाई कहाँ गएर भेटूँ ।' यसरी तर्कना गर्दै तिनले छोरालाई आलिङ्गन गरिन् र चिन्तामुक्त भइन् । एक दिन ती भिक्षा गर्न नगरमा पुगिन् ।।१३-१५।। नगरवासी सज्जनहरूले आमा-छोरा दुवैलाई आदरपूर्वक आमन्त्रण गरी मीठा-पकवान, उत्तम व्यञ्जन, चिनी, घ्यू र खीर टक्र्याई राम्ररी भोजन गराए।।१६।। यो रीति दिनदिनै चल्यो । यसरी प्रतिदिन आनन्दले भोजन गर्दै ती दुवैले धन, नयाँ र उत्तम वस्त्र पनि प्राप्त गरे ।।१७।। कुनै दिन त्यहाँ एउटा नागरिकले बालकलाई तिम्रो पिताको नाम के हो ? तिमी कुन देशका मानिस हौ ? तिम्रो कुन परिवार हो ? र तिमीहरू यहाँ किन आएका छौ ? भनेर सोध्यो ।।१८।। नागरिकको प्रश्न सुनेर त्यो बालकले मेरो नाम दक्ष हो भन्यो । त्यसपछि आफ्नी आमाका नजिक आएर पिता, नगर, कुल र घुम्नुको कारणबारे जिज्ञासा प्रकट गर्‍यो । आमाले सबै कुरा बताएपछि त्यस बालकले प्रश्न सोध्ने नागरिकलाई भन्यो- हे भद्रजन! कर्नाटक देशको भानुनगरमा बसोवास गर्ने महान् राजा वल्लभ मेरा पिता हुनुहुन्छ।।१९-२०।। उहाँ क्षत्रियश्रेष्ठ, बलवान्, विख्यात र शत्रुनाशक राजा हुनुहुन्छ । उहाँकी रानी अर्थात् मेरी आमाको नाम कमला हो। म उहाँको पुत्र दक्ष हुँ।।२१।। जुन बेला म जन्मेँ, त्यस बेला अन्धो र बहिरो पनि थिएँ । मेरा शरीरमा धेरै घाउ थिए । मेरी आमाले मलाई विरूप जानेर फ्याँक्न खोज्नुभयो, त्यस बेला मेरा पिताले निषेध गर्नुभयो। मेरा पिता वल्लभले मलाई निको गराउन धेरै उपायका साथै बाह्र वर्षसम्म तपस्या पनि गर्नुभयो र आफूले प्राप्त गरेको पुण्य मेरो स्वास्थ्यका लागि सुम्पनु भयो ।।२२-२३।। त्यसरी पुण्य दान प्राप्त गर्दा पनि मेरो शरीरमा कुनै अन्तर नआएको देखेर उहाँले मेरी आमाका साथ मलाई पनि घरबाट निकाला गरिदिनुभयो ।।२४।।' यी सबै कुरा माताबाट थाहा पाएर त्यो बालक दक्षले ती नागरिकलाई बताएको थियो । बालकले फेरि भन्यो- 'हे नागरिक सज्जन! यहाँ आउँदा कुनै तपस्वी ब्राह्मणका शरीरको वायुस्पर्श पाएर म सुन्दर भएको छु ।।२५।।'

श्रुत्वैवं तु गते तस्मिन् पुरुषे पुरवासिनि ।
दक्षो जगाम त्वरितो मातरं प्रतिनन्दयन् ।।२६।।

ततस्तन्नगरे तौ द्वावुपदिष्टौ द्विजन्मना ।
गणेशाराधनविधौ करुणायुतचेतसा ।।२७।।

ततः सा कमला दक्षो निर्वाणं परमास्थितौ ।
एकाङ्गुष्ठेन तपसा गणेशाराधने रतौ ।।२८।।

देवनामचतुर्थ्यन्तमोङ्कारपल्लवान्वितम् ।
अष्टाक्षरं परं मन्त्रं जपन्तौ भक्तितत्परौ ।।२९।।

वायुभक्षौ शुष्कतनू निरीक्ष्य भगवाँस्तदा ।
आविरासीत् तयोरग्रे करुणाब्धिर्विनायकः ।।३०।।

चतुर्भुजो महाकायो वारणास्योऽतिसुन्दरः ।
अनेकसूर्यसङ्काशो निशि सूर्य इवोदितः ।।३१।।

रत्नकाञ्चनमुक्तावन्मुकुटभ्राजिमस्तकः ।
पीतकौशेयवसनो हाटकाङ्गदभूषणः ।।३२।।

एकजानुनिपातेन सन्निविष्टो महासने ।
कटिसूत्रं काञ्चनीयं मुद्रिकां रत्नसंयुताम् ।।३३।।

महाहिं जठरे बिभ्रदेकदन्तं गजार्धकम् ।
एवं रूपं ददृशतुः पुनश्च द्विजरूपिणम् ।।३४।।

जगाद स द्विजस्तौ तु भवन्निर्वाणतोषितः ।
आगतोऽहं वरं दातुं वृणु तं मनसीप्सितम् ।।३५।।

विश्वामित्र उवाच

एवं प्रसन्ने विघ्नेशे प्रत्यक्षे द्विजरूपतः ।
ननाम परया भक्त्याऽभणद् बद्धाञ्जलिश्च तम्।।३६।।

दक्ष उवाच

पूर्वजन्मकृतं पुण्यं फलितं मे द्विजोत्तम ।
यन्मयाऽदर्शि रूपं ते द्विविधं परमं महत् ।।३७।।

वैनायकञ्च वैप्रञ्च जन्म मेऽजनि सार्थकम् ।
कारणानां परं त्वञ्च कारणं छन्दसामपि ।।३८।।

यसरी बालकले बताएपछि त्यो नागरिक कतै लाग्यो । बालक दक्ष पनि हतारिँदै सहर्ष आफ्नी आमाका सामु आयो ।।२६।। त्यसपछि त्यस नगरमा बस्ने कुनै दयालु ब्राह्मणले ती आमा-छोरालाई भगवान् श्रीगणेशको आराधना गर्ने विधि सिकाए ।।२७।। ब्राह्मणबाट आराधना विधिको उपदेश पाएपछि ती दुबैले परम आनन्दको अनुभव गरे । त्यसपछि ती दुबै आ-आफ्ना खुट्टाको एउटा बूढी औँलाले मात्र जमिनमा टेकेर ॐ गं गणपतये नमः यस्तो रूप भएको ॐकारसहित चतुर्थी विभक्ति अन्तमा रहेको आठ अक्षरको परम मन्त्र जप्दै श्रीगणेशको भक्तिमा तत्पर भए ।।२८-२९।। यसरी केवल वायुपान गरी जप गरिरहेका र दुर्बल शरीर भएका ती आमा-छोरालाई देखेर करुणासागर भगवान् श्रीगणेश तिनका सामु प्रकट हुनुभयो ।।३०।। ती दुबैले त्यस बेला चतुर्बाहु, विशालकाय, गजानन, अतिमोहक, अनेक सूर्यको तेजले सम्पन्न, रातमा उदाएका सूर्यका समान, रत्न, सुवर्ण र मोतीको हारले अलङ्कृत मुकुटका कारण रमणीय मस्तक भएका, पहेँला रेशमी वस्त्र धारण गर्नुहुने, स्वर्णमय केयूरद्वारा विभूषित, एउटा घुँडा मारेर महासनमा विराजमान, स्वर्णमय कन्धनी र रत्नमय औँठी धारण गर्नुहुने, ठूलो सर्पलाई कम्मरमा बेर्नुभएका, एकदन्त, हात्तीको मुख र सूँढले शोभायमान भगवान् श्रीगणेशको दर्शन गरे । श्रीगणेशको त्यो रूप तत्कालै एउटा ब्राह्मणका रूपमा परिणत भयो । ब्राह्मणले भने - तिमीहरूको आराधनाबाट प्रसन्न भई वर प्रदान गर्न म समीपमा आएको छु । आफ्नो मनले चाहेको कुरा माग ।।३१-३५।।

**विश्वामित्रले भन्नुभयो-** प्रसन्न भई ब्राह्मणरूप भगवान् श्रीगणेशको साक्षात् दर्शन पाएपछि दक्ष नामक बालकले परम भक्तिपूर्वक उहाँलाई प्रणाम गरी हात जोडेर भने ।।३६।।

**दक्षले भने -** हे उत्तम ब्राह्मण ! मेरा पूर्वजन्मको पुण्य फलीभूत भएको छ । तसर्थ मैले हजुरका महत्त्वपूर्ण दुई स्वरूपको साक्षात्कार गर्न पाएँ । तीमध्ये एउटा स्वरूप विनायकरूप हो भने अर्को स्वरूप ब्राह्मणरूप । ती दुबैको दर्शन गरेर मेरो जन्म सार्थक भएको छ । हे श्रीगणेश ! हजुर

परं ज्ञेयं परं ब्रह्म श्रुतिमृग्यं सनातनम् ।
त्वमेव साक्षी सर्वस्य सर्वस्यान्तर्बहिस्तथा ।।३९।।

त्वमेव कर्ता कार्याणां लघुस्थूलशरीरिणाम् ।
नानारूप्येकरूपी त्वं नीरूपश्च निराकृतिः ।।४०।।

त्वमेव शङ्करो विष्णुस्त्वमेवेन्द्रोऽनलोऽर्यमा ।
भूवायुखस्वरूपोऽपि जलसोमर्क्षरूपवान् ।।४१।।

विश्वकर्ता विश्वपाता विश्वसंहारकारकः ।
चराचरगुरुर्गोप्ता ज्ञानविज्ञानवानपि ।।४२।।

भूतं भावि भवच्चैव त्वमेवेन्द्रियदेवताः ।
कलाः काष्ठा मुहूर्ताश्च श्रीर्धृतिः कान्तिरेव च ।।४३।।

त्वमेव साङ्ख्यं योगश्च शास्त्राणि श्रुतिरेव च ।
पुराणानि चतुःषष्टिकला उपनिषत्तथा ।।४४।।

त्वमेव ब्राह्मणो वैश्यः क्षत्रियः शूद्र एव च ।
देशो विदेशस्त्वं क्षेत्रं पुण्यक्षेत्राणि यान्युत ।।४५।।

त्वं प्रमेयोऽप्रमेयश्च योगिनां ज्ञानगोचरः ।
त्वमेव स्वर्गः पातालं वनान्युपवनानि च ।।४६।।

ओषध्योऽथ लतावृक्षकन्दमूलफलानि च ।
अण्डजा जारजा जीवाः स्वेदजा उद्भिजा अपि।।४७।।

कामः क्रोधः क्षुधा लोभो दम्भो दर्पो दया क्षमा ।
निद्रा तन्द्रा विलासश्च हर्षः शोकस्त्वमेव च ।।४८।।

विश्वामित्र उवाच

इति दक्षवचः श्रुत्वा सुप्रसन्नो विनायकः ।
मेघगम्भीरया वाचा स्मयन्निव जगाद तम् ।।४९।।

गजानन उवाच

प्रीतोऽहं ते महाभाग ! स्तुत्या गम्भीरयाऽनया ।
वरं दातुं समुत्कण्ठस्तथापि न ददामि ते ।।५०।।

यद्यहं वरदः स्यां ते क्रुध्येद् भक्तो ममोपरि ।
स एव दास्यति वरं यदङ्गस्य प्रभञ्जनात् ।।५१।।

कारणका पनि कारण, वेदभन्दा पनि पर रहेका, परम ज्ञेय र वेदद्वारा अनुशीलन गर्न योग्य सनातन देवता हुनुहुन्छ । हजुर नै सबैका साक्षी, भित्र-बाहिर एवं सर्वत्र विराजमान, लघु एवं स्थूल शरीर धारण गर्नुहुने, सबै प्राणीहरूका रचयिता, अनेकरूप, एकरूप, नीरूप र निराकार पनि हुनुहुन्छ ।।३७-४०।। हजुर नै शङ्कर, विष्णु, इन्द्र, अग्नि र अर्यमा हुनुहुन्छ । हे श्रीगणेश! हजुर नै पृथिवी, वायु, आकाश, जल, चन्द्रमा, तारा र नक्षत्रका रूपमा विराजमान हुनुहुन्छ । हजुर नै विश्वकर्ता, विश्वपालक, विश्वसंहारक, चराचरगुरु, विश्वरक्षक र ज्ञान-विज्ञानसम्पन्न पनि हुनुहुन्छ ।।४१-४२।। हे विनायक ! हजुर नै भूत, भविष्य र वर्तमान हुनुहुन्छ। हजुर नै इन्द्रियका अधिष्ठाता, कला, काष्ठा, मुहूर्त, श्री, सम्पत्ति, धृति र कान्तिरूप पनि हुनुहुन्छ ।।४३।। हे श्रीगणेश! हजुर नै साङ्ख्य, योग, शास्त्र, वेद, पुराण, चौसठ्ठी कला र उपनिषद्का रूपमा विराजमान हुनुहुन्छ ।।४४।। हे प्रभु! हजुर नै ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्रजस्ता वर्णका रूपमा हुनुहुन्छ । हे परमेश्वर ! हजुर नै देश, परदेश, क्षेत्र र पुण्यक्षेत्रका रूपमा रहनुहुन्छ ।।४५।। हे श्रीगणेश ! हजुर नै प्रमेय, अप्रमेय र योगिज्ञेय हुनुहुन्छ । हे श्रीगणेश ! हजुर नै स्वर्ग, पाताल, वन, उपवन, औषधि, लता, वृक्ष, कन्द, मूल र फलका रूपमा हुनुहुन्छ । हे श्रीगणेश हजुर नै अण्डज, जरायुज, स्वेदज र उद्भिजका रूपमा रहनुहुन्छ ।।४६-४७।। हे गजानन! हजुर नै काम, क्रोध, क्षुधा, लोभ, दम्भ, दर्प, दया, क्षमा, निद्रा, तन्द्रा, विलास, हर्ष र शोकका रूपमा रहनुहुन्छ।।४८।।

**विश्वामित्रले भन्नुभयो** - दक्षका यस्ता वचन सुनेर प्रसन्न हुनुभएका श्रीगणेशले मेघगम्भीर वाणीबाट मुस्कुराउँदै भन्नुभयो ।।४९।।

**श्रीगणेशले भन्नुभयो** - हे महाभाग दक्ष ! तिम्रो यस गम्भीर स्तुतिबाट म प्रसन्न छु । म तिमीलाई वर दिन चाहन्छु ता पनि म त्यसो गर्दिनँ ।।५०।। यदि मैले वर दिएँ भने मेरा ती भक्त मसँग रिसाउने छन् । जसका अङ्गको वायुस्पर्शबाट तिमीले सुन्दर रूप र आँखा एवं कानका शक्तिसमेत प्राप्त गरेका छौ । ती भक्तले तिमीलाई वर दिनेछन्।

दिव्यदेहमनुप्राप्तश्चक्षुश्रोत्रसमन्वितः ।
जातस्त्वं तस्य नामाऽपि वदामि मुद्गलेति च ।।५२।।
स ध्यातमात्रो विप्रेशः स्वरूपं दर्शयिष्यति ।
यान् यान् कामयसे कामान् स ते सर्वान् प्रदास्यति ।।५३।।
इत्युक्त्वा परमात्माऽसौ तत्रैवाऽन्तरधीयत ।
तस्मिन्नन्तर्हिते दक्षो रुरोद भृशदुःखितः ।।५४।।
दरिद्रेण निधौ लब्धे गते तस्मिन् यथैव सः ।
गतायां गवि वत्सो वा रोरवीति यथा भृशम् ।।५५।।
मुञ्चन्नश्रूणि नेत्राभ्यां पपात धरणीतले ।
क्व गतः क्व गत इति मुहुर्जल्पन् विनायकः ।।५६।।

म ती मेरा भक्तको नाम बताउँछु । तिनको नाम मुद्गल हो। तिमीले ध्यानमात्र गर्दा ती मुद्गलले आफ्नो रूप तिम्रा सामु देखाउने छन् । तिमीले कुन कुन कामना गरेका छौ, ती सबैलाई तिनले पूर्ण गराउने छन् ।।५१-५३।। यस्तो उपदेश दिएर परमात्मा श्रीगणेश त्यहीं अन्तर्धान हुनुभयो । द्विजरूप श्रीगणेशको अन्तर्धानपछि ती दक्ष दुःखी भएर रोए ।।५४।। दरिद्रले खजाना भेट्टाएर हराउँदा जस्तो दुःखको अनुभव गर्दछ, गाई मरेपछि जसरी बाच्छो रुन्छ, त्यसैगरी दक्ष आफ्ना आँखाबाट आँसु खसाउँदै भुईंमा लडे र तिनले मेरा आराध्य ईश्वर विनायक कहाँ जानुभयो भनी विलाप गरे ।।५५-५६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे दक्षस्तुतिर्नाम विंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'कमलापुत्र दक्षद्वारा भगवान् श्रीगणेशको आराधना र स्तुति' शीर्षकान्वित बीसौं अध्याय पूर्ण भयो ।।२०।।

ॐ

# एकविंशोऽध्याय: { २१ अध्याय }

विश्वामित्र उवाच

इतस्ततो भ्रमन् धावन् वल्लभस्यात्मजस्तदा ।
न विवेद गतं वस्त्रं भूषणं चातिविह्वलः ।।१।।

पप्रच्छ ब्राह्मणान् मार्गे वृक्षाँश्चैव विनायकम् ।
विनायको गतः कुत्र क्वचिद् दृष्टो गदन्तु मे ।।२।।

स एवं भ्रान्तहृदयोऽभ्रमच्चक्षुर्नृपोत्तमः ।
निपपात धरापृष्ठे क्षणं विगतचेतनः ।।३।।

एतस्मिन्नन्तरे स्वप्नेऽपश्यद् ब्राह्मणमग्रतः ।
दत्तं तवेप्सितं बाल! मुद्गलेन मया हि तत् ।।४।।

यत् त्वया याचितं पूर्वं विघ्नेशाद् दृष्टिगोचरात् ।
इत्युक्त्वा प्रस्थिते तस्मिन् ब्राह्मणे नृपसत्तम ।।५।।

सुप्तोत्थित इव प्रायो दक्षो हृष्टमनाऽभवत् ।
कस्मैचित् परिपप्रच्छ त्वरिताय द्विजातये ।।६।।

अन्तिकं दर्शितं तेन बहुशिष्योपशोभितम् ।
मुद्गलस्यातिभक्तस्य गजाननरतस्य च ।
आश्रमं परमं दिव्यं सर्वसत्त्वाऽभयप्रदम् ।।७।।

मुद्गलं मनसा ध्यायन् भ्रमन् यातस्तदाश्रमम् ।
नानाश्चर्ययुतं रम्यमलकानन्दनातिगम् ।।८।।

ददर्श मुद्गलं तत्र पराध्यासनगं द्विजम् ।
वेदवेदाङ्गतत्त्वज्ञं सर्वशास्त्रविशारदम् ।।९।।

योगाभ्यासबलैर्नानारूपिणं सूर्यतेजसम् ।
वैनायकीं महामूर्तिं रत्नकाञ्चननिर्मिताम् ।।१०।।

चतुर्भुजां त्रिनयनां नानालङ्कारशोभिनीम् ।
उपचारैः षोडशभिः पूजयन्तं विधानतः ।।११।।

ननाम दक्षस्तं दृष्ट्वा दण्डवत् पृथिवीतले ।
मुञ्चन्नश्रूणि नेत्राभ्यां निश्वसँश्च मुहुर्मुहुः ।।१२।।

**विश्वामित्रले भन्नुभयो** - त्यस बेला वल्लभका छोरा बालक दक्ष अत्यन्त विह्वल भई चारैतिर घुम्दै जाँदा तिनलाई आफ्नो सुधी पनि रहेन । तिनले वस्त्र र अलङ्कार भुइँमा खस्दा पनि थाहा पाएनन् ।।१।। तिनले बाटोमा हिंड्दा ब्राह्मणहरू र रूखहरूसँग पनि श्रीगणेशको विषयमा सोधे । विनायक भगवान् कहाँ जानुभयो ? कतै तपाईँले देख्नुभएको छ कि? मलाई बताउनुहोस् भन्दै चारैतिर डुल्दा कहीं नदेखेर भ्रान्तिमा परेका र चारैतिर आँखा घुमाई श्रीगणेशको खोजी गर्ने ती बालक दक्ष केहीबेर बिहोश भई भुइँमा लडे ।।२-३।। केही बेरपछि अचेत अवस्थामा दक्षले सपनामा आफ्ना सामु एउटा ब्राह्मणलाई देखे । ती ब्राह्मणले उनलाई भने- हे बाबु! तिमीले जुन वरदान श्रीगणेशसँग मागेका थियौ त्यो वरदान म मुद्गल ऋषिले तिमीलाई दिनेछु । यति भनेर ती ब्राह्मणले प्रस्थान गरेपछि भर्खर सुतेर उठेजस्ता दक्ष ज्यादै प्रसन्न भए । कुनै मानिससँग दक्षले भर्खरै अन्तर्धान भएका मुद्गलको आश्रम कहाँ हो भनेर सोधे ।।४-६।। त्यो मानिसले उनलाई नजिकैमा रहेको मुद्गलको आश्रम देखाइदियो । त्यो आश्रम अनेक शिष्यहरूले शोभायमान थियो । गजाननका परमभक्त मुद्गलको त्यो आश्रम दिव्य थियो । सबै प्राणीलाई अभय प्रदान गर्ने विलक्षण धाम थियो ।।७।। बाहिरबाट आश्रमको दर्शन गरेपछि मनद्वारा मुद्गलको ध्यान गर्दै दक्षले अनेक थरि आश्चर्यजनक विशेषता भएको, सौन्दर्यले अलका र नन्दनलाई पनि परास्त गर्ने त्यस आश्रममा प्रवेश गरे ।।८।। त्यहाँ तिनले बहुमूल्य आसनमा बिराजमान, वेदवेदाङ्गका तत्त्वज्ञाता, सबै शास्त्रका विशेषज्ञ, योगाभ्यासको सामर्थ्यबाट अनेकरूप धारण गर्न समर्थ, सूर्यसमान तेजस्वी मुद्गल ऋषिको रत्न र सुवर्णद्वारा निर्मित चार हात र तीन आँखाले शोभायमान, अनेक अलङ्कारद्वारा अलङ्कृत श्रीगणेशको मूर्तिमा विधिपूर्वक षोडशोपचारद्वारा पूजा गरिरहेको अवस्थामा दर्शन गरे ।।९-११।। दक्षले मुद्गलको दर्शन पाएपछि आँखाबाट आँसुका धारा बगाउँदै लामो श्वास लिएर भुइँमा लम्पसार परेर प्रणाम गरे ।।१२।।

विश्वामित्र उवाच

पप्रच्छ मुद्गलस्तं तु कस्त्वं कस्मादिहागतः ।
नुदामि दुःखं किं तेऽस्ति वद सर्वमशेषतः ।।१३।।

एवं विप्रवचः श्रुत्वा कमलानन्दनस्तदा ।
सावधानमना भूत्वा जगाद द्विजपुङ्गवम् ।।१४।।

दक्ष उवाच

सत्यमेव वदे ब्रह्मन्नभिप्रायं तवान्तिके ।
कर्णाटदेशे राजाभून्नगरे भानुसंज्ञके ।।१५।।

वल्लभो नाम नीतिज्ञो ज्ञानी दाता दयान्वितः ।
तस्य पत्नी तु कमला जनयामास मां यदा ।।१६।।

तदा दुर्गन्धिक्षतयुक् शोणितस्राविनासिकः ।
अन्धः कुब्जः कर्णहीनः शब्दहीनः श्वसन् बहु ।।१७।।

अभवं नागरा दृष्ट्वा त्यजैनमिति चाब्रुवन् ।
पिता मे द्वादशाब्दानि नानायत्नमथाऽकरोत् ।।१८।।

शरीरपाटवार्थं मे नालभत् तन्महेश्वरात् ।
उपायं स ततो माञ्च मातरं कमलाञ्च मे ।।१९।।

बहिर्निष्कासयामास निर्दयेनाऽन्तरात्मना ।
ततो मे जननी खेदादटमाना पुरं पुरम् ।।२०।।

आगत्य कौण्डिन्यपुरं मया सह क्षुधार्दिता ।
भिक्षाटने क्रियमाणे पूर्वपुण्यप्रभावतः ।।२१।।

अभवद् दर्शनं ते वामन्धस्येव यथा दृशिः ।
तव गात्रभवाद् वायोः स्पर्शाद् दोषा गता मम ।।२२।।

रघुनाथाङ्घ्रिसंस्पर्शादहल्यायाा यथा पुरा ।
दिव्यदेहं समापन्नः प्रसादात् तव सुव्रत ।।२३।।

न मया विदितं किञ्चिज्जनन्या मे निवेदितम् ।
अहञ्च विस्मितो भूत्वा निश्चयं कृतवान् हृदि ।।२४।।

यदङ्गवायुस्पर्शेन दिव्यदेहमहङ्गतः ।
तद्दर्शनं यदा स्यान्मे तदा देहं धराम्यहम् ।।२५।।

विश्वामित्रले भन्नुभयो- मुद्गल ऋषिले दक्षलाई देखेर सोधे- तिमी को हौ ? र के कारणले यहाँ आयौ? मैले तिम्रो कुन दुःखलाई हटाऊँ ? सबै कुरा खुलाएर भन ।।१३।। मुद्गलका यस्ता वचन सुनेर कमलाका छोरा दक्षले सावधानचित्त भई उत्तम ब्राह्मण मुद्गलसामु निवेदन गरे ।।१४।।

दक्षले भने - हे ब्राह्मण देवता ! म हजुरका सामु साँचो कुरा निवेदन गर्दछु । कर्णाटक देशको भानु नगरमा वल्लभ नामक नीतिज्ञ, ज्ञानी, दाता र दयालु राजा हुनुभयो । उहाँकी भार्या कमलाले मलाई जन्म दिनुभएको हो । म जन्मदा दुर्गन्धिमय घाउ भएको, नाकबाट रगतका धारा बगाउने, अन्धो, बहिरो, कुजो र लाटो पनि थिएँ । मेरो मुखबाट तीव्र श्वासप्रश्वास चलिरहेको थियो । मानिसहरूले मेरो रूप देखेर यस्तो बच्चालाई फ्याँकिदिनुहोस् भनी राजासँग आग्रह गरे । मेरा पिता वल्लभ राजाले मेरो स्वास्थ्य सुधार्नका लागि बाह्र वर्षसम्म कठोर तपस्या गर्नुभयो । अनेक यत्न र परिश्रम पनि गर्नुभयो । तर परमेश्वरबाट मेरा शरीरको सुधारका लागि केही पनि उपाय पाउनुभएन । त्यसपछि उहाँले आफ्नो मनलाई कठोर एवं निर्दय तुल्याएर मेरी आमा कमला र मलाई निर्दयतापूर्वक घरबाट निकालिदिनुभयो । पतिद्वारा घरबाट निकालिएकी मेरी आमा खिन्न भएर भिक्षाटन गर्दै एउटा नगरबाट अर्को नगरमा मलाई पीठ्यूँमा बोकी घुम्नुभयो ।।१५-२०।। एक दिन भोक र प्यासले व्याकुल मेरी आमा मलाई साथ लिएर कौण्डिन्यपुरमा आई भिक्षाटन गर्दा पूर्वजन्मका पुण्यका प्रतापले हामी आमा-छोराले हजुरको दर्शन गर्ने अवसर पायौं । यो दर्शन हामीहरूका लागि अन्धाले आँखा पाएजस्तो भयो । हजुरका शरीरको हावाको स्पर्श पाएर मेरा शरीरका सबै रोग र दोष समाप्त भएका छन्।२१-२२।। हे उत्तम व्रतमा निष्ठा राख्नुहुने ऋषि ! जसरी पहिले श्रीराम भगवान्को पाउको स्पर्श पाएर शिलारूपकी अहल्याको रूपान्तरण भएको थियो, त्यसैगरी हजुरको कृपाबाट मेरो शरीर पनि दिव्य बन्यो ।।२३।। हे ऋषि ! मलाई त केही पनि थाहा थिएन, तर मैले मेरो शरीरमा परिवर्तन आएको कुरा आमाबाट थाहा पाएँ । त्यसपछि म सारै चकित भएँ र मनले निश्चय गरें - जुन महानुभावका शरीरका हावाको स्पर्श पाएर मेरो देह दिव्य भयो, तिनको दर्शन पाएमा मात्र म बाँच्ने छु , अन्यथा देहत्याग गर्नेछु ।।२४-२५।। उक्त लक्ष्य

एवं भ्रमन् बहुदिनं ततोऽसौ करुणानिधिः ।
आविरासीन् मत्पुरतः कोटिसूर्यसमप्रभः ।।२६।।
उभयोस्तपसा तुष्टो देवदेवो गजाननः ।
तं दृष्ट्वा कमला कामान् सम्प्राप्ता मनसीप्सितान् ।।२७।।
ततो मामब्रवीद् देवः प्रसन्नो मञ्जुलाङ्गिरम् ।
यदर्थं नियमं कृत्वा भ्रमन् खेदमुपागतः ।।२८।।
सोऽहन्ते दर्शनं यातो मुद्गलो ब्राह्मणोत्तमः ।
श्रुत्वा तद्वचनं हृष्टमभवन् मानसं मम ।।२९।।
ततो गजाननमहं स्तुतवान् विविधैः स्तवैः ।
उवाच सुप्रसन्नात्मा वरं वृणु महामते ।।३०।।
अहञ्चाकथयं तस्मै यद् यन्मे मनसीप्सितम् ।
ततो ब्राह्मणरूपं तत् त्यक्त्वाऽन्यद् रूपमादधे ।।३१।।
चतुर्भुजं महाकायं मुकुटाटोपमस्तकम् ।
परशुं कमलं मालां मोदकानावहत् करैः ।।३२।।
दिव्याम्बरधरं भ्राजद्विषाणकरपुष्करम् ।
कुण्डले प्रावहच्छ्रुत्योः सूर्यबिम्बे इवापरे ।।३३।।
दिव्यालङ्कारसंयुक्तं भुजङ्गवलयोदरम् ।
देवर्षिगन्धर्वगणैः किन्नरैरुपशोभितम् ।।३४।।
तत आनन्दपूर्णोऽहं दृष्ट्वा रूपं तथाऽभवम् ।
पूर्णचन्द्रं यथा दृष्ट्वा पूर्णो भवति वारिधिः ।
तेनोक्तं मुद्गलः सर्वान् कामाँस्ते परिपूरयेत् ।।३५।।
तदेवाऽन्तर्हितं रूपं दृष्टं यावन्न सादरम् ।
यथा स्वप्नगतं सर्वं जागरैर्नैव दृश्यते ।।३६।।
ततोऽहं नितरां खिन्नो न्यपतं भुवि मूर्च्छितः ।
प्रतिलभ्य ततः संज्ञां वरं वृण्विति संस्मरन् ।।३७।।
ययाचे देवदेवेशं सर्वव्यापिनमीश्वरम् ।
गृहे मे सुस्थिरा लक्ष्मीर्भक्तिर्मे तादृशी तव ।।३८।।
दृष्टश्चेत् पूर्वपुण्येन द्वयमेतत् प्रदीयताम् ।
ततोऽहं श्रुतवान् दत्तमिति वाचं नभोगताम् ।।३९।।

राखेर घुम्दाघुम्दै जाँदा एक दिन करुणासागर, कोटिसूर्यसमान कान्तिले सुहाउनुभएका हामी आमा–छोराको तपस्याबाट प्रसन्न हुनुभएका देवताहरूका पनि परमदेवता श्रीगणेश मेरा सामु प्रकट हुनुभयो । उहाँलाई देखेर मेरी आमा कमला आफ्ना मनमा रहेका अनेक कामनाको विषयमा चिन्तन गर्दै हुनुहुन्थ्यो। त्यस बेला हजुरले मलाई मीठो स्वरले भन्नुभयो– जुन उद्देश्यको पूर्तिका लागि प्रतिज्ञा गरेर मलाई खोजिरहेका छौ, न भेटाएर खिन्न छौ, आज म मुद्गल ब्राह्मण तिम्रा सामु प्रकट भएको छु। मुद्गल ऋषिको वचन सुनेर मेरो मन प्रसन्न भयो ।।२६-२९।। त्यसपछि मैले गजानन भगवान्‌को अनेक स्तुतिद्वारा स्तवन गरें । उहाँले प्रसन्न भएर भन्नुभयो– 'हे बुद्धिमान् बालक ! म तिमीलाई वरदान दिन्छु, तिमीले माग ।' उहाँका वचन सुनेर मैले पनि मेरा मनमा लागेका सबै कुरा निवेदन गरें । त्यसपछि उहाँले ब्राह्मणरूप छाडेर अर्कै रूप लिनुभयो ।।३०-३१।। उहाँको परिवर्तित स्वरूप चतुर्बाहु, विशालकाय, मुकुटसुशोभित मस्तकद्वारा रमणीय , हातमा परशु, कमल, माला र लड्डू धारण गर्ने, दिव्य वस्त्रले शोभायमान, एकदन्तद्वारा आकर्षक, सूँढ भएको, दुबै कानमा सूर्यमण्डलसमान कुण्डल धारण गर्ने, दिव्य अलङ्कारसम्पन्न, पेटमा सर्पवलय धारण गर्ने, देवता; ऋषि; किन्नर; गन्धर्व आदिद्वारा शोभायमान र सुन्दर थियो ।।३२-३४।। त्यो दिव्यरूप देखेपछि म पूर्णचन्द्रको उदयपछि महासागर उर्लिएझैं आनन्दसागरमा डुबुल्की मार्न थालें । त्यस बेला श्रीविनायक भगवान्‌ले भन्नुभयो – 'हे दक्ष ! मुद्गल ऋषिले तिम्रो कामना पूरा गर्नेछन् ।' यति भनेर उहाँको रूपलाई राम्ररी दर्शन गर्न नपाउँदै श्रीविनायक अन्तर्धान हुनुभयो । हुन पनि सपनामा देखिएका सबै रूपलाई विपनामा देख्न सकिँदैन।।३५-३६।। भगवान्‌को अन्तर्धानपछि म अत्यन्त खिन्न भएर मूर्च्छित भएँछु। होशमा आउँदा 'वरदान स्वीकार गर' भन्ने कुरा सम्झें। अनि मैले सर्वव्यापक ईश्वरसँग मेरा घरमा लक्ष्मी स्थिर होऊन् र गजानन भगवान्‌मा मेरो भक्ति पनि स्थिर होस् भन्ने याचना गरें। यदि पूर्व पुण्यले मलाई केही स्पर्श गरेको छ भने ती दुबै कुरा मलाई प्रदान गर्नुहोस् भन्ने प्रार्थना गरें। त्यसपछि "मैले तिमीलाई ती दुबै कुरा दिएँ" भन्ने आकाशवाणी सुनें ।।३७-३९।। हे महर्षि ! त्यो सुनेर म प्रसन्नमुद्रामा हजुरको आश्रममा आएको

ततो हृष्टमना विप्र ! तव सान्निध्यमागतः ।
मुद्गलस्त्वं द्विपास्योऽसौ द्विपास्यस्त्वं स मुद्गलः ।।४०।।
इति मे मनसि स्पष्टं भाति सर्वं गजाननः ।

भृगुरुवाच

इति तद्वचनं श्रुत्वा मुद्गलो वाक्यमब्रवीत् ।।४१।।
सभाग्यः कृतकृत्योऽसि भक्तिमान् कमलासुत !
महिमा तव भक्तेर्हि वक्तुं शक्यो न केनचित् ।।४२।।
तपामि सुदृढं चाहं दशवर्षशतं तपः ।
न म एतादृशो देवो दृष्ट आसीत् कदाचन ।।४३।।
यः सर्वजगतां नाथश्चराचरगुरोर्गुरुः ।
यो रजःसत्त्वतमसां नेता नित्यं गुणाश्रयः ।।४४।।
यो ब्रह्मशिवविष्णूनां शरीराणि करोति हि ।
भूतानाञ्च विभूतीनां मात्रेन्द्रियधियामपि ।।४५।।
यं न देवा विदुः सम्यङ् न वेदा नर्षयोऽपि च ।
एवं गजाननं त्वं हि प्रत्यक्षं दृष्टवान् स्फुटम् ।।४६।।
अहं त्वच्चरणौ वन्दे यतस्त्वं भक्तिमान् परः ।
ततः परस्परं तौ तु नेमतुश्चालिलिङ्गतुः ।।४७।।
गुरुबन्धू चिरं कालमेकचित्तौ समागतौ ।
तत एकाक्षरं मन्त्रं सजपध्यानपूर्वकम् ।।४८।।
मुद्गलो राजपुत्राय नम्रायोपदिदेश ह ।
उवाच चैनं भूयोऽपि मन्त्रस्याऽस्य दिने दिने ।।४९।।
अनुष्ठानं कुरुष्व त्वं प्रसन्नस्ते भविष्यति ।
गजाननो ददेत् कामान् मनसा वाञ्छिताँस्त्वया।।५०।।
एनं चेत् त्यजसे मन्त्रं सर्वशो नाशमेष्यसि ।
यद्यस्य भक्तिं सुचिरं लोकेऽस्मिन् विचरिष्यसि ।।५१।।
इन्द्रादिलोकपालानां गणो वश्यत्वमेष्यति ।
इह भुक्त्वाऽखिलान् भोगानन्ते मोक्षमवाप्स्यसि ।।५२।।

छु । हजुर श्रीगणेशरूप मुद्गल ऋषि हुनुहुन्छ र श्रीगणेश पनि मुद्गलरूप श्रीगणेश हुनुहुन्छ । यस्तो मेरो मनमा लाग्छ । मैले हजुर र श्रीगणेशलाई एउटै गजाननका दुई रूप सम्झेको छु ।

**भृगुले भन्नुभयो-** दक्षका यी कुरा सुनेपछि मुद्गल ऋषिले भने - कमलापुत्र! तिमी भाग्यवान् छौ, कृतकृत्य छौ र भक्तिमान् छौ। तिम्रो भक्तिको महिमा कसैले वर्णन गर्न सक्दैन।।४०-४२।। मैले हजारवर्षसम्म तपस्या गरें त्यहाँ श्रीगणेशसमान देवता अरू कुनै देखिनँ । उहाँ सबै जगत्का नाथ हुनुहुन्छ र चराचरस्वामीका पनि स्वामी हुनुहुन्छ । गुणाश्रय भए पनि रजोगुण, सत्त्वगुण र तमोगुणका नायक हुनुहुन्छ ।।४३-४४।। उहाँले ब्रह्मा, शिव र विष्णुका शरीरको निर्माण गर्नुहुन्छ । उहाँ पञ्चमहाभूत, विभूति, तन्मात्रा, इन्द्रिय र बुद्धिका पनि स्वरूप-निर्माता हुनुहुन्छ ।।४५।। श्रीगणेशका स्वरूपका विषयमा देवता, वेद र ऋषिहरूले पनि राम्ररी बताउन सक्दैनन् । हे दक्ष ! तिमीले यस्ता विलक्षण देवता श्रीगणेशलाई प्रत्यक्षरूपमा दर्शन गर्ने सौभाग्य पायौ ।।४६।। तिम्रो यसै विशेषताका कारण म तिम्रो चरणमा प्रणाम गर्दछु । किनकि तिमी श्रीगणेशका परमभक्त छौ । यी कुरा गरेपछि मुद्गलले दक्षलाई प्रणाम गरेर आलिङ्गन गरे भने दक्षले पनि मुद्गललाई आलिङ्गन गरे ।।४७।। एउटै देवताका उपासक र आराध्यका अत्यन्त प्रीतिपात्र दुवै चिरकालसम्म एकचित्त भए। त्यसपछि ऋषि मुद्गलले राजपुत्र दक्षलाई जप र ध्यानविधिको निर्देशसहित श्रीगणेशको एकाक्षरी मन्त्रको उपदेश गरे । उपदेशको क्रममा मुद्गलले भने - हे दक्ष ! तिमीले फेरि पनि दिनदिनै यस एकाक्षरी मन्त्रको अनुष्ठान गर । भगवान् श्रीगणेश प्रसन्न हुनुहुनेछ र तिम्रा सबै कामना पूर्ण तुल्याउनुहुनेछ ।।४८-५०।। फेरि मुद्गलले भने - यदि तिमीले यस मन्त्रको त्याग गर्‍यौ भने तिम्रो सर्वनाश हुनेछ । मन्त्र जप गरिरह्यौ भने तिमी दीर्घकालसम्म यस संसारमा सानन्द विचरण गर्नेछौ। इन्द्र आदि लोकपालहरूको समुदाय तिम्रो अधीनमा रहनेछ। यस लोकमा सम्पूर्ण भुक्तिसुखको अनुभव गरी अन्तमा मुक्तिसुख पाएर रमाउने छौ ।।५१-५२।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे मन्त्रोपदेशवर्णनं नामैकविंशतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'महर्षि मुद्गलद्वारा दक्षलाई श्रीगणेशमन्त्रको उपदेश' शीर्षकान्वित एक्काइसौं अध्याय पूर्ण भयो ।।२१।।

ॐ

# द्वाविंशोऽध्यायः { २२ अध्याय }

राजोवाच

आश्चर्यभूतं कथितं दक्षपुत्रस्य चेष्टितम् ।
विस्मयो मे महाँस्तत्र सञ्जातो मुनिसत्तम ।।१।।

अन्धः कुब्जः स्रवद्रक्तः पूतिगन्धसमन्वितः ।
वाचा विहीनोऽमेध्यश्च श्वासमात्रावशेषितः ।।२।।

कथं मुद्गलदेहोत्थवायुना दिव्यदेहभाक् ।
सञ्जातः केन पुण्येन मुक्तो वा पातकात् कुतः ।।३।।

दिव्यवर्षसहस्रं यस्तताप परमन्तपः ।
कथं तस्याभवन्नैव दर्शनं देव! काङ्क्षितम् ।।४।।

कथं वल्लभपुत्राय देवदेव इभाननः ।
प्रत्यक्षोऽभूद् विना क्लेशैः स च कः पूर्वजन्मनि ।।५।।

एतत् संशयजातं मे नुद सर्वज्ञ ते नमः ।
न तृप्यामि पिबन् नित्यं गजाननकथामृतम् ।।६।।

विश्वामित्र उवाच

सम्यक् पृष्टं त्वया राजन् ! संशयच्छेदनाय ते ।
वदामि निखिलं सम्यक् शृणुष्वैकमना नृप ।।७।।

सिन्धुदेशेऽतिविख्याता पल्ली नाम्नाऽभवत् पुरी ।
तस्यामासीद् धनी वैश्यः श्रेष्ठः कल्याणसंज्ञकः ।।८।।

वदान्यः कुशलो धीमान् द्विजदेवपरायणः ।
इन्दुमतीति विख्याता पत्नी तस्य शुभानना ।।९।।

पतिव्रता पतिप्राणा पतिवाक्यपरायणा ।
तयोः कालेन सञ्जातो गुणवान् पुत्र उत्तमः ।।१०।।

कल्याणः प्रददौ धेनूर्वस्त्रालङ्करणानि च ।
ब्राह्मणेभ्योऽथ रत्नानि काञ्चनं भूरिदक्षिणाम् ।।११।।

ज्योतिर्विद्भिर्निगदितं नाम चक्रे सुतस्य सः ।
बल्लाल इति विख्यातं बलवत्त्वाच्छुभं तदा ।।१२।।

स च कालेन महता वयस्यैश्च समन्वितः ।
देवपूजारतो नित्यं ग्रामाद् बहिरयान्मुदा ।।१३।।

**भीमले भने -** हे मुनिश्रेष्ठ ! हजुरले आश्चर्यमय चरित्र सुनाउनुभयो । मलाई यो कथा सुनेर साह्रै आश्चर्य लागिरहेको छ ।।१।। अन्धो, कुजो, शरीरबाट निरन्तर रगत र पीपका धारा बग्नाले दुर्गन्धित, लाटो, अपवित्र, सासमात्र बाँकी रहेको त्यो दक्षनामक बालक मुद्गल ऋषिका शरीरको हावाले स्पर्श गर्दामात्र कसरी दिव्य देहले सम्पन्न भयो ? कुन पुण्यले त्यस्तो घटना घट्यो ? कसरी त्यो पापबाट मुक्त भयो ? कसैले दिव्य एक हजार वर्ष तपस्या गर्दा पनि श्रीगणेशको दर्शन पाउँदैनन् भने वल्लभको छोरा दक्षलाई गजानन भगवान्‌ले कसरी प्रत्यक्ष दर्शन दिनुभयो ? त्यो दक्ष पूर्वजन्ममा को थियो? हे सर्वज्ञ ! हजुरले मेरो यो सन्देह मेटाइदिनुहोस् । हजुरलाई बारबार नमस्कार छ । श्रीगणेश भगवान्‌का कथामृतको नित्य पान गर्दा पनि म तृप्त हुन सकेको छैन ।।२-६।।

**विश्वामित्रले भन्नुभयो-** हे राजा ! तपाईँले राम्रो जिज्ञासा गर्नुभएको छ । तपाईँको सन्देहनिवारण गर्न म सबै कुरा राम्रोसँग खुलाउँछु। तपाईँ एकाग्रचित्त भएर सुन्नुहोस् ।।७।। सिन्धु देशमा पल्लीनामक नगरी थियो । त्यहाँ धनी, उदार, कार्यकुशल, बुद्धिमान्, ब्राह्मण एवं देवताका उपासक र उत्तम गुणस्वभावले सम्पन्न कल्याण नाम गरेका वैश्य थिए।।८-९।। ती वैश्यकी पत्नीको नाम इन्दुमती थियो र ती पतिकी पियारी, आज्ञापालिका र पतिव्रता थिइन् । समय भएपछि ती दुवैबाट उत्तम एवं गुणी पुत्र पैदा भयो ।।१०।। पुत्रजन्मको उपलक्ष्यमा ती कल्याण वैश्यले ब्राह्मणहरूलाई गाई, वस्त्र, गहना, रत्न र सुवर्णका साथ धेरै दक्षिणा पनि दिए । त्यस बेला ज्योतिर्विद्हरूले बताएअनुसार कल्याणले आफ्नो छोराको नाम बल्लाल राखे। भोलि यो बालक बलवान् हुनेछ भन्ने अर्थमा त्यो नामलाई शुभ मानियो ।।११-१२।। उमेर बढ्दै गएपछि ती बल्लाल बालक आफ्ना समवयस्क साथीहरूका साथ दिनहुँ गाउँदेखि बाहिर गई श्रीगणेशको पूजाकार्यमा नित्य लागिरहन्थे ।।१३।। एक दिन बल्लालसहित सबै

एकदा ते वनं याता बल्लालप्रमुखाः सुताः ।
नानाक्रीडारताः स्नाता उपलं स्थाप्य सुन्दरम् ।।१४।।

गणेशबुद्ध्या सम्पूज्य दूर्वाङ्कुरसुपल्लवैः ।
केचिद् ध्यानरतास्तस्य नामजाप्यं प्रचक्रिरे ।।१५।।

केचिच्च ननृतुस्तत्र यथेष्टं देवभक्तितः ।
केचिच्च गानकुशला जगुर्देवस्य तुष्टये ।।१६।।

केचित् काष्ठैः पल्लवैश्च मण्डपं चक्रुरोजसा ।
केचिद् भित्तिपरीवेषं केचित् प्रासादमुत्तमम् ।।१७।।

केचिन्मानसपूजाभिः केचित् पुष्पलतादिभिः ।
धूपं दीपञ्च नैवेद्यं फलताम्बूलदक्षिणाः ।।१८।।

निवेद्य पुपूजुस्तस्मै मुदा परमयायुताः ।
केचिच्च पण्डिता भूत्वा पुराणान्यब्रुवंस्तथा ।।१९।।

व्याचक्रुर्धर्मशास्त्राणि ग्रन्थानन्याँश्च केचन ।
एवं देवरताः सर्वे निन्युर्वै दिवसान् बहून् ।।२०।।

न क्षुधां न तृषां कोऽप्य जानाद् देवस्य भक्तितः ।
एकदा जनकास्तेषां कल्याणवैश्यमन्वयुः ।।२१।।

अब्रुवन् रोषिताः सर्वे स्वबल्लालं निवारय ।
शिशून् सर्वान् समाहूय वनं याति दिने दिने ।।२२।।

नायान्ति प्रातराशाय न मध्याह्ने निशामुखे ।
कृशा नो बालका जाताः स्वसुतं शिक्षयाधुना ।।२३।।

नो चेद् वयं निबद्ध्वैनं ताडयाम इतः परम् ।
पुराधिपमथाभ्येत्य त्वां बहिः करवामहे ।।२४।।

इति तेषां वचः श्रुत्वाऽश्रुतपूर्वं कदाचन ।
रोषावेशात् स कल्याणो जपाकुसुमलोचनः ।।२५।।

महान्तं दण्डमादाय ताडनार्थं सुतं ययौ ।
दण्डाघातेन गत्वैव मण्डपं प्रबभञ्ज ह ।।२६।।

किशोरहरू वनमा गए । त्यहाँ नानाथरि क्रीडा गरेपछि नुहाएर तिनीहरूले सुन्दर शिला स्थापित गरी श्रीगणेशको भावना राखी दूर्वाङ्कुर र पल्लवहरूद्वारा पूजा गरे । कसैले श्रीगणेशको ध्यान गरे, कोही श्रीगणेशको नामजपमा प्रवृत्त भए, कुनै श्रीगणेशमा भक्ति गर्दै नृत्य गर्न लागे र कुनै गायनकलामा कुशल किशोरहरू श्रीगणेशको प्रसन्नताका लागि भक्तिगीत गाउन थाले ।।१४-१६।। ती बालकहरूमध्ये कसैले काठ, पालुवा आदि सामग्रीद्वारा उत्साहका साथ मण्डप तयार गरे, कसैले भित्तामा श्रीगणेशको चित्र बनाए, कसैले सुन्दर मन्दिर तयार गरे, कसैले मानसविधिले श्रीगणेशको पूजा गरे, कुनैले पुष्प र लता टक्र्याएर पूजा गरे र कोही धूप, दीप, नैवेद्य, फल, ताम्बुल र दक्षिणा निवेदन गरी प्रसन्नमुद्रामा श्रीगणेशको पूजा गर्दै थिए । तीमध्ये कुनैले आफूलाई पण्डित बनाएर पुराण भन्न थाले, कसैले धर्मशास्त्रको व्याख्या गर्न थाले र कसैले अरू पुण्यग्रन्थहरूको पारायण गरे। यसरी श्रीगणेशदेवको पूजामा लागेका ती किशोरहरूले धेरै दिन बिताए ।।१७-२०।। भगवान् श्रीगणेशप्रति तीव्र भक्तिभावका कारण ती किशोरहरूले भोक र प्यासको वेदना अनुभव गर्नु परेन । एक दिन बल्लालका गाउँले साथीका पिताहरू बल्लालका पिता कल्याण वैश्यका घरमा आए ।।२१।। ती सबैले रिसाएर कल्याण वैश्यलाई भने – तिम्रो छोरा बल्लाललाई वन जानबाट रोक, हाम्रा सबै बालकहरू जुटाएर त्यो दिनदिनै वन जान्छ ।।२२।। बिहानको भोजन, दिउँसोको खाजा र साँझको भोजनको बेला पनि ती कुनै बालक घरमा हुँदैनन् । तिम्रा छोरा बल्लालको सङ्गमा लागेर हाम्रा छोराहरूको लत बिग्र्यो र दुब्ला पनि भए । तिमीले आफ्ना छोरालाई तुरुन्त राम्रो पाठ पढाऊ । यदि त्यसो गर्दैनौ भने अब हामी आफैले तिम्रा छोरालाई बाँधेर पिट्छौं र नगरका स्वामीलाई भनेर तिमीलाई सपरिवार नगरबाट बाहिर निकाला गराउँछौं ।।२३-२४।। गाउँलेहरूका कहिल्यै पनि नसुनिएका ती गुनासा सुनेर ती कल्याण वैश्य बाह्रमासे फूलझैं राता आँखा गराई हातमा लौरो लिएर आफ्नो छोरा बल्लाललाई पिट्ने उद्देश्यले वनमा गए । त्यहाँ पुग्नासाथ तिनले सर्वप्रथम छोरालाई लौराले हिर्काएर श्रीगणेशपूजाको मण्डप भताभुङ्ग पारे ।।२५-२६।। पूजामण्डप भताभुङ्ग भएको देखेर त्यहाँ

बालकाश्च ततः सर्वे जग्मुर्दशदिशो नृप ।
एक एव स बल्लालो दृढभक्त्या स्थिरोऽभवत्।।२७।।
दृढमुष्ट्या स तं धृत्वा दण्डेनाऽताडयत् भृशम् ।
यथा सर्वशरीरात् तु धाराः शोणितसम्भवाः ।।२८।।
प्रादुरासन् वारिधारा वर्षाकाले यथा गिरेः ।
चिक्षेप दूरतः पश्चाद् देवं सिन्दूरसुन्दरम् ।।२९।।
बबन्ध तं सुतं वृक्षे वल्लीपाशशतैर्दृढम् ।
पुत्रस्नेहं परित्यज्य यमदूत इवापरः ।।३०।।
मुक्तो दन्तैर्न हस्ताभ्यां पादाभ्यां स यथा भवेत् ।
उवाच पश्चात् तं पुत्रं देवस्त्वां मोचयिष्यते ।।३१।।
स दाता भोजनं पानं गोपनञ्च करिष्यति ।
यदि चेद् गृहमायासि तदा सत्यं मरिष्यसि ।।३२।।

मुनिरुवाच

विभज्य देवालयमाशु यातः
कल्याणवैश्योऽतिरुषा निविष्टः ।
स्वमन्दिरं बध्य वने स्वपुत्रं
दैवस्य योगादभवत्सुदुष्टः ।।३३।।
तस्मिन् प्रयाते स च वैश्यपुत्रः
शुशोच देवं मनसा विचिन्त्य ।
विघ्नारिरित्येव कथं नु देव-
नामाऽभवत् सर्वजनेषु गीतम् ।।३४।।
दुष्टांश्च विघ्नानि न नाशयेस्त्वं
दुष्टान्तकत्वेन कथं प्रसिद्धः ।
शेषोऽवनिं वा सविताऽथ दीप्तिं
चन्द्रोऽमृतं वह्निरथोष्णताञ्च ।।३५।।
त्यजेत् स्वभक्तात्र च सन्त्यजेथा
वेदेषु शास्त्रेषु कथं प्रसिद्धिः ।
एवं विलप्याऽथ निजं शशाप
कल्याणसंज्ञं पितरं सुदुष्टम् ।।३६।।
येनेदं मम विध्वस्तं देवालयमनुत्तमम् ।
गणेशमूर्तिविक्षेपं ताडनं च ममाऽकरोत् ।।३७।।

श्रीगणेशको आराधना गरिरहेका ती गाउँले बालकहरु डरले दश दिशामा तितर-बितर भए । तर बल्लाल भने श्रीगणेशमा दृढ भक्तिका कारण नडराई स्थिर भएर बसिरहे ।।२७।। कल्याणले आफ्ना हातले समातेर तिनलाई लौराले सयौं पटक प्रहार गरे। लौराको निरन्तर प्रहारका कारण वर्षाको समयमा पर्वतबाट जलधारा प्रवाहित भएझैं बल्लालका शरीरबाट रगतका धारा बग्न थाले । कल्याण वैश्यले लहराको डोरीले बल्लाललाई रूखमा बाँधे र डोरीलाई दाँतले टोकेर, हातले छिनालेर अथवा खुट्टाले तानेर कुनै रूपमा पनि बन्धन फुकाई भाग्न नसकोस् भन्ने अभिप्रायले पुत्रस्नेह बिर्सेर यमदूतसमान बनी डोरीले राम्ररी कसेर बल्लाललाई बाँधे। त्यसपछि तिनले छोरालाई भने- अब तेरा श्रीगणेशले कसरी तँलाई बन्धनबाट छुटाउँदा रहेछन् ? म पनि हेर्छु । तेरा श्रीगणेश दाता छन्, अब तिनले तँलाई कसरी भोजन खुवाउँछन् र कसरी पानी पियाउँछन्, त्यो पनि म हेर्छु । अब फर्केर घरमा आइस् भने तँ मर्नेछस् ।।२८-३२।।

मुनिले भने- अत्यन्त रिसाएका कल्याण वैश्य श्रीगणेशको मन्दिर भत्काएर घर फर्के । आफ्नो छोरा बल्लाललाई वनमा बाँधेर घर फर्किने ती वैश्य दैवयोगले अत्यन्त दुष्ट मानिसका रूपमा परिणत भए ।।३३।। कल्याण वैश्य वनबाट फर्केपछि बल्लालले मनले भगवान् श्रीगणेशको चिन्तन गर्दै विचार गरे - हे भगवन् श्रीगणेश ! तपाइँको नाम विघ्नारि भनेर जगत्मा किन जपिन्छ ? यदि तपाइँले दुष्ट र विघ्नहरूको नाश गर्नुहुन्न भने तपाइँलाई दुष्टान्तक भनेर किन पुकारिन्छ ? शेषनागले पृथिवी त्याग गर्न सक्छन्, सूर्यले प्रकाश त्याग गर्न सक्छन्, चन्द्रमाले अमृत त्याग गर्न सक्छन् र अग्निले तातोपन त्याग गर्न सक्छन् तर श्रीगणेशले आफ्ना भक्तहरूको त्याग गर्नुहुन्न भनेर वेद र शास्त्रहरूमा किन भनिएको छ ? यसरी विलाप गरेर बल्लालले आफ्ना दुष्ट पिता कल्याणलाई सराप दिए ।।३४-३६।। जुन पिताले मैले बनाएको श्रीगणेशको मन्दिर भत्काए र श्रीगणेशको मूर्ति फ्याँकि ती कार्यका साथै मलाई पनि नराम्ररी पिटे ती

स चान्धो बधिरः कुब्जो मूको भवति निश्चितम् ।
यदि मे सुदृढा भक्तिर्द्विरदानन उत्तमा ।।३८।।

तदोक्तं मम सत्यं स्यात्तस्य सर्वं मयोदितम् ।
न बद्धे भक्तिमनसी शक्तोऽसौ देहबन्धने ।।३९।।

अनन्यबुद्ध्या परिचिन्त्य देवं
त्यजामि देहं विजने वनेऽस्मिन् ।
पलायनं नैव कृतं यदैव
तदैव देहोऽर्पित एष देवे ।।४०।।

तस्यैवं निश्चयं बुद्ध्वा प्रादुरासीद् गजाननः ।
ब्राह्मणस्य स्वरूपेण बल्लालस्य प्रभावतः ।।४१।।

यथा निशातमोऽपाये श्रीसूर्य उदयाचले ।
तथैव बन्धनान्यस्य तेजसा शिथिलानि च ।।४२।।

जातानि तत एनं स नमश्चक्रेऽथ दण्डवत् ।
देहस्य चारुता जाता न क्षतं न च शोणितम् ।।४३।।

ज्ञानञ्च निर्मलं जातं देवदेवस्य दर्शनात् ।
तुष्टाव विविधैर्वाक्यैर्यथामति गजाननम् ।।४४।।

बल्लाल उवाच

त्वमेव माताऽसि पिताऽसि बन्धुः
त्वमेव कर्ताऽसि चराचरस्य ।
निर्मासि दुष्टाँश्च खलाँश्च साधून्
योनौ वियोनौ विनियुङ्क्ष्यथापि ।।४५।।

त्वमेव दिक्चक्रनभोधराब्धि-
गिरीन्द्रकालानलवायुरूपः ।
रवीन्दुताराग्रहलोकपाल-
वर्णेन्द्रियार्थौषधिधातुरूपः ।।४६।।

मुनिरुवाच

इति स्तुतिं समाकर्ण्य सुप्रसन्नो गजाननः ।
आलिङ्ग्य निजभक्तं तमुवाच घननिस्वनः ।।४७।।

गजानन उवाच

प्रासादो येन भग्नो मे नरके स पतिष्यति ।
तव शापोऽपि तस्यैवं भविष्यति ममाज्ञया ।।४८।।

अन्धा, बहिरा, कुजा र लाटा हुनेछन् । यदि मेरो श्रीगणेशमा उत्तम भक्ति छ भने मैले भनेको कुरा सत्य होस् । यद्यपि मेरा पिता मेरो शरीरलाई बन्धनमा पार्न सफल भएका छन् । तर तिनले मेरो श्रीगणेशमा रहेको भक्ति र श्रीगणेशमा अर्पित मनलाई बाँध्न सक्दैनन्।।३७-३९।। अनन्यबुद्धिबाट श्रीगणेशको चिन्तन गर्दै यही वनमा मैले मेरो शरीरत्याग गरिदिन्छु । जुन बेला कल्याण वैश्यले लौराले प्रहार गर्दै थिए, त्यस बेला पनि म भागिन किनकि मैले त्यस बेला नै यो शरीरत्याग गरी आत्मालाई श्रीगणेशमा अर्पिसकेको थिएँ । बल्लालको यो निश्चय बुझेर भगवान् गजानन बल्लालको भक्तिका प्रभावले ब्राह्मणको स्वरूप लिएर प्रकट हुनुभयो ।।४०-४१।। श्रीसूर्य उदयाचलमा आउनुभएपछि अन्धकारको नाश हुँदा जसरी रातको पनि नाश हुन्छ, त्यसरी श्रीगणेशका तेजको उदय हुँदा बल्लालका बन्धन पनि शिथिल भए । त्यसपछि तिनले श्रीगणेशलाई दण्डवत् प्रणाम गरे । क्रमशः बल्लालको शरीरमा सौन्दर्य भरियो । घाउबाट रगत बग्न छाड्यो, घाउका टाटा रहेनन् र देवदेव गजानन प्रभुको दर्शनबाट मनमा निर्मल ज्ञानको उदय भयो । यो परिवर्तनपछि बल्लालले आफ्नो बुद्धिअनुसार गजानन भगवान्को अनेक वाक्यहरूद्वारा स्तुति गरे ।।४२-४४।।

**बल्लालले भने** - हे श्रीगणेश ! हजुर नै मेरा माता-पिता र बन्धु हुनुहुन्छ । हजुर नै यो समस्त चराचरमय सृष्टिका कर्ता हुनुहुन्छ, हजुरले नै दुष्ट, खल र साधुहरूको रचना गर्नुहुन्छ र तिनलाई कर्मअनुसार उत्तम योनि र अधम योनिमा पुऱ्याउनुहुन्छ।।४५।। हे भगवन् ! हजुर नै दिङ्मण्डल, आकाश, पृथिवी, सागर, पर्वत, इन्द्र, अग्नि र वायुका रूपमा रहनुहुन्छ। हजुर नै सूर्य, चन्द्र, तारा, ग्रह, नक्षत्र, लोकपाल, इन्द्रिय, इन्द्रियग्राह्य विषय र औषधिका रूपमा रहनुहुन्छ ।।४६।।

**मुनिले भने**- बल्लालले गरेको यो स्तुति सुनेर श्रीगणेश प्रसन्न हुनुभयो । आफ्ना भक्त बल्लाललाई गाढ आलिङ्गन गरेर मेघगर्जनसमान गम्भीर स्वरले भन्नुभयो ।।४७।।

**श्रीगणेशले भन्नुभयो** - जसले मेरो मन्दिर भत्काएको छ, त्यो नरकमा जानेछ । मेरो आज्ञाअनुसार तिमीले त्यसलाई दिएको सराप पनि त्यसैगरी लाग्नेछ । मन्दिर भत्काउने र अरू धेरै अपराध गर्ने मानिस तिमीले भनेजस्तै अन्धो, बहिरो,

अन्धोऽथ बधिर: कुब्जो मूकोऽसृक्स्त्रावसंयुत: ।
मम शापं समासाद्य भविष्यति न संशय: ।।४९।।

पिता समातृकं चैनं करिष्यति गृहात् बहि: ।
अन्यत् ते वाञ्छितं ब्रूहि दुष्प्रापमपि ते ददे ।।५०।।

मुनिरुवाच

बल्लालोऽथाऽब्रवीद् देवं त्वयि भक्तिर्दृढास्तु मे ।
अस्मिन् क्षेत्रे स्थिरो भूत्वा लोकान् रक्षस्व विघ्नत: ।।५१।।

गणेश उवाच

त्वन्नामपूर्वं मन्नाम भविष्यति जने शुभम् ।
बल्लालविनायकेति नगरे सुप्रतिष्ठितम् ।।५२।।

मयि चित्तं स्थिरं ते स्याद् भक्तिरव्यभिचारिणी ।
यात्रां मम करिष्यन्ति नगरे पल्लिसंज्ञके ।।५३।।

भाद्रशुक्लचतुर्थ्यां ये तेषां कामान् ददाम्यहम् ।।५४।।

भृगुरुवाच

इति दत्वा वरं देवस्तत्रैवाऽन्तरधीयत ।
ततो विनायकं स्थाप्य बल्लालो ब्राह्मणै: सह ।।५५।।

प्रासादं कारयामास नानाशोभासमन्वितम् ।

विश्वामित्र उवाच

बल्लालवैनायकेति कथितं ते कथानकम् ।।५६।।
यच्छ्रुत्वा सर्वपापेभ्यो मुक्त: कामानवाप्नुयात् ।।५७।।

कुजो, लाटो र शरीरबाट रगतका धारा बगाउने दुर्गन्धले युक्त हुनेछ । यो मेरो पनि सराप हो र अवश्य लाग्नेछ । त्यो अपराधीलाई त्यस घृणित रूपमा देखेपछि त्यसका पिताले आमाका साथ घरबाट निकालिदिनेछ । हे बल्लाल ! अरू तिमीले के चाहन्छौ ? त्यो भन । म दुर्लभ वरदान दिन पनि तयार छु ।।४८-५०।।

**मुनिले भने -** भगवान् श्रीगणेशका कुरा सुनेपछि बल्लालले भने - हे प्रभु! हजुरमा मेरो भक्ति स्थिर रहोस् । हजुरले यस क्षेत्रमा स्थिर भएर अनेक विघ्नहरूबाट संसारको रक्षा गर्नुहोस् ।।५१।।

**श्रीगणेशले भन्नुभयो -** यस क्षेत्रमा तिम्रो नामसित जोडिएर मेरो नाम प्रचलित हुनेछ । यस नगरमा बल्लालविनायकका नामबाट मेरो दिव्य मन्दिर रहनेछ । ममा तिम्रो चित्त सदा लागोस् र अनपायिनी भक्ति पनि रहोस् । पल्लीनगरमा जुन मानिसले भाद्रशुक्ल चतुर्थीका दिन बल्लालविनायकको नामबाट मेरो यात्रा चलाउने छन् तिनका कामनाहरू मैले परिपूर्ण तुल्याउने छु ।।५२-५४।।

**भृगुले भन्नुभयो -** यसरी वरदान दिएर भगवान् श्रीगणेश अन्तर्धान हुनुभयो । त्यसपछि बल्लालले ब्राह्मणहरूको परामर्शअनुसार अत्यन्त सुन्दर एवं भव्य बल्लालविनायकको मन्दिर निर्माण गरे ।

**विश्वामित्रले भन्नुभयो -** मैले तपाईंलाई बल्लालविनायकको कथा सुनाएँ । जुन कथा सुनेर मानिसहरू सबै पापबाट मुक्त भई आफ्ना कामना पूरा गराउन सफल हुनेछन् ।।५५-५७।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे बल्लालविनायककथनं नाम द्वाविंशोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'कल्याण वैश्यको कथाप्रसङ्गमा कल्याणपुत्र बल्लालको श्रीगणेशाराधना र बल्लालविनायक मन्दिरको स्थापना' शीर्षकान्वित बाइसौं अध्याय पूर्ण भयो ।।२२।।

ॐ

# त्रयोविंशोऽध्यायः { २३ अध्याय }

भृगुरुवाच

विश्वामित्रवचः श्रुत्वा भीमः पप्रच्छ तं पुनः ।
वैश्याचरितवार्तायाः श्रवणे परमोत्सुकः ।।१।।
सोमकान्त ! नृपश्रेष्ठ ! कथयामि शृणुष्व तत् ।

भीम उवाच

श्रुतं दक्षस्य चरितं विश्रान्तं मम मानसम् ।।२।।
कथं कल्याणवैश्यस्य गतिरासीद् वदस्व ताम् ।

विश्वामित्र उवाच

शृणुष्वैकमना भीम ! कथामेतां वदामि ते ।।३।।
बल्लालशापात् कल्याणदेहात् सुस्राव शोणितम् ।
असङ्ख्यक्षतसंयुक्तः स्रावो बाधिर्यमन्धता ।।४।।
मूकता पूतिगन्धित्वं जातं तस्य दुरात्मनः ।
ददर्शेन्दुमती तस्य दशामाकस्मिकीं ततः ।।५।।
किमिदं किमिदं कस्माज्जातमेवं शुशोच तम् ।
ज्ञानिनोऽस्य वदान्यस्य देवद्विजरतस्य च ।।६।।
धर्मशास्त्रार्थनिष्ठस्य स्वदारपरितोषिणः ।
अवस्थेयं कथं जाता मम भर्त्तुर्निरनसः ।।७।।

मुनिरुवाच

एवं विलप्य बहुधा निश्वसन्ती पुनः पुनः ।।८।।
तेन बद्धं वने पुत्रं निशम्य रुदती मुहुः ।
पौरैः सह ययौ तत्र यत्र बद्धो वने सुतः ।।९।।
तत्र देवालयं देवं ददर्श गणनायकम् ।।१०।।
चतुर्भुजं त्रिनयनं सिन्दूरारुणविग्रहम् ।
बल्लालञ्च सुतं तत्र पूजयन्तङ्गजाननम् ।।११।।
मुक्तं निर्व्रणमव्यङ्गं निरीक्ष्य पुरवासिनः ।
उवाचेन्दुमती क्रुद्धा भर्त्सयन्ती पुनः पुनः ।।१२।।

**भृगुले भन्नुभयो** - विश्वामित्र ऋषिको वचन सुनेपछि राजा भीमले कल्याण वैश्यसम्बन्धी घटनाका विषयमा उहासँग सोधे। हे सोमकान्त ! म तपाईंका सामु उक्त प्रश्नसँग सम्बद्ध कल्याण वैश्यसम्बन्धी कथा सुनाउँछु, तपाईं सुन्नुहोस् ।।१।।

**राजा भीमले भने** - दक्षको त्यो चरित्र सुनेर मेरो मन शान्त भएको छ । कल्याण वैश्यको कस्तो गति भयो ? त्यस विषयमा पनि आज्ञा गर्नुहोस् ।

**विश्वामित्रले भन्नुभयो**- हे भीम राजा ! एकचित्त भएर सुन्नुहोस्, म कल्याण वैश्यको कथा सुनाउँछु ।।२-३।। बल्लालको सरापले कल्याण वैश्यका शरीरबाट रगत बग्न थाल्यो । असङ्ख्य घाउ, खटिरा निस्के । ती घाउ-खटिराबाट पनि पीप र रगत बग्न थाल्यो । कल्याण बहिरा, अन्धा र लाटा पनि भए, ती दुरात्माको शरीरबाट दुर्गन्ध फैलन थाल्यो। कल्याणकी पत्नी इन्दुमती अकस्मात् आफ्ना पतिको त्यो अवस्था देखेर के हो ? के भयो ? कसरी भयो ? कसबाट भयो ? भन्दै चिन्ता गर्न लागिन् । उनले मनमनै भन्न थालिन्- मेरा पति ज्ञानी, दाता, उदारमना, देवता र ब्राह्मणको सेवामा तत्पर, धर्मशास्त्रमा निष्ठा राख्ने, आफ्नी पत्नीमा सन्तुष्ट र निष्पाप हुनुहुन्छ । उहाँको यो अवस्था कसरी भयो ? ।।४-७।।

**मुनिले भने** - इन्दुमतीले यसरी धेरै बेरसम्म आलाप-विलाप गरेपछि पटक-पटक लामो सास फेरिन् । आफ्नै छोरा बल्लाललाई वनमा बाँधेको कुरा सुनेर बारबार रोइकराई गर्दै नगरवासीहरूका साथ छोरालाई जहाँ बाँधिएको थियो, त्यस वनमा पुगिन् ।।८-९।। त्यहाँ उनले श्रीगणेशको मन्दिरका साथै चतुर्बाहु, त्रिनयन, सिन्दूरद्वारा शोभायमान श्रीगणेशको स्वरूप र उहाँको पूजा गरिरहेका आफ्ना छोरा बल्लाललाई पनि देखिन् ।।१०-११।। त्यस बेला इन्दुमतीले आफ्नो छोरालाई बन्धनमुक्त, घाउ-खत नभएको र सुन्दर अङ्ग-प्रत्यङ्गसम्पन्न देखेर पुरवासीहरूप्रति क्रुद्ध हुँदै गाली गर्न लागिन्- मलाई मेरा श्रीमान्का सामु छोराका विषयमा गलत जानकारी दिएर यी मानिसले ठगे, तिनको झूटो समाचारबाट म आफ्ना श्रीमान्को

कथं प्रतारिताऽतथ्यवादिभिर्भर्तृसन्निधौ ।
तादृशं तं परित्यज्य पुत्रस्नेहादिहागता ।।१३।।

पश्यन्तु देवभक्तिं मे पुत्रं कुर्वन्तमीदृशीम् ।

मुनिरुवाच

विस्मिताः सर्व एवैते न किञ्चित् प्रोचुरण्वपि ।।१४।।

केचिदूचुर्महाभक्तेर्महिमा केन गम्यते ।
वीक्ष्य सिन्दूररक्ताङ्गं रक्तचन्दनचर्चितम् ।।१५।।

रक्ताम्बरं रक्तपुष्पमालाभिरुपशोभितम् ।
निर्ममं निरहङ्कारमशुण्डमिव विघ्नपम् ।।१६।।

निरीक्ष्य तादृशं पुत्रं त्यक्त्वा शोकं ननन्द सा ।
आलिलिङ्ग तदा तं तु स्नेहस्नुतपयोधरा ।।१७।।

आह तं स्वगृहं यावः पितुस्ते व्यसनं महत् ।
उत्थितं तत्र किञ्चित् त्वं कुरूपायं महामते ।।१८।।

आवां धन्यतमौ लोके ययोः पुत्रस्त्वमीदृशः ।
सर्वाङ्गक्षतवान् रक्तस्रावववान् पूतिगन्धवान् ।।१९।।

श्यामास्यः कृशतायुक्तो बधिरोऽथान्ध एव च ।
एवंविधः पिता तेऽस्ति तं निवेदितुमागता ।।२०।।

पितृधर्मेण तेन त्वं ताडितोऽनर्थकृद् यदि ।
तत्रापराधो नैवास्ति श्रुतिस्मृतिपुराणतः ।।२१।।

पुत्रधर्मान्निरीक्षस्व कुर्वारोग्यविचारणम् ।
त्वया श्लाघ्यतमो लोके पिता ते पितृवत्सल ।।२२।।

मातापितृवचः कार्यं सत्पुत्रेण यशस्विना ।
पूजनञ्च तयोः कार्यं पोषणं पालनं तथा ।।२३।।

औषधान्मन्त्रतश्चापि देवताप्रार्थनादपि ।
उपायं कुरु पुत्र ! त्वं मयि दृष्टिं निवेशय ।।२४।।

यशस्ते भविता लोके सौभाग्यं मम बालक !
इति तस्या वचः श्रुत्वा बल्लालो वाक्यमब्रवीत् ।।२५।।

त्यो दयनीय अवस्था देखेर पनि उहाँलाई त्यसै हालतमा छोडेर छोराको हालत बुझ्न यहाँ आउन विवश भएँ ।।१२-१३।। तपाईंहरूले भगवान्को भक्तिमा निरत मेरा छोरालाई हेर्नुहोस्।

**मुनिले भने** - बल्लालको त्यो अवस्था देखेर चकित भएका नगरवासीहरूले केही पनि भन्न सकेनन् ।।१४।। कसैले भने - महाभक्तिको महिमा हामीले के बुझ्न सकौं ? इन्दुमती सिन्दूरले रातो अङ्ग भएका, रक्तचन्दनको लेपन गरेका, राता कपडा र राता फूलहरूबाट सुहाएका, निर्मम, निरहङ्कार, विना सूँढका श्रीगणेशजस्ता आफ्नो छोरालाई देखेर निश्चिन्त र आनन्दित भइन् । स्नेहले स्तनबाट दूधका धारा बगाउँदै उनले छोरालाई आलिङ्गन गरिन् ।।१५-१७।। इन्दुमतीले छोरासामु गएर भनिन् - हे बुद्धिमान् छोरा! हिंड, अब हामी घर जाऔं। तिम्रा पितालाई ठूलो विपत्ति आइलागेको छ । त्यसको निराकरणका लागि तिमी पनि केही उपाय गर ।।१८।। हामी माता-पिता धन्य छौं, जसले तिमीजस्ता छोरा जन्मायौं। हेर, अहिले तिम्रा पिताको सर्वाङ्गमा घाउ नै घाउ छ, शरीरबाट रक्तस्राव भइरहेको छ र ज्यादै नराम्रो दुर्गन्ध फैलिरहेको छ । उहाँको मुखलाई कालो पोतोले ढाकेको छ । उहाँ दुर्बल, बहिरो, अन्धो, कुजो र लाटो पनि हुनुभएको छ । पिताको यस अवस्थाबारे जानकारी गराउन म यहाँ आएकी छु ।।१९-२०।। यदि तिम्रा पिताले तिमीलाई कुनै दिन बाबुको रूपमा पिट्नुभयो, गाली गर्नुभयो भने पनि त्यो श्रुति-स्मृति र पुराणअनुसार अपराध मानिंदैन ।।२१।। छोरा ! तिमीले पुत्रधर्मको महिमा बुझ र पितालाई जसरी स्वस्थ तुल्याउन सकिन्छ त्यसबारे विचार गर । हे पितृवत्सल छोरा ! तिमीजस्तो ज्ञानी छोरा जन्माएका कारण तिम्रा पिता संसारमा प्रशंसनीय हुनुभएको छ। यशस्वी सत्पुत्रले माता-पिताको वचन पालन गर्नुपर्दछ र सेवा-सत्कार एवं लालन-पालन पनि गर्नुपर्दछ ।।२२-२३।। हे छोरा ! तिमीले औषधोपचार, मन्त्रप्रयोग र देवप्रार्थनामध्ये कुनै एक अथवा सबै उपाय गर । म आमा हुँ, मप्रति दयादृष्टि लगाऊ, हे बाबु ! यसबाट लोकमा तिम्रो यश फैलिने छ र तिमी भाग्यशाली हुनेछौ । यसरी आफ्नी आमा इन्दुमतीले भनेको कुरा सुनेर बल्लालले आमालाई भने ।।२४-२५।।

वल्लाल उवाच

कस्य माता पिता कस्य कस्य पुत्रोऽथवा सुहृत् ।
विघ्नराजकृतं सर्वमानुषङ्ग्यखिलं स्मृतम् ।।२६।।

तस्मान्मम पिता भद्रे ! माता देवो विनायकः ।
यो यथा कुरुते कर्म स तथा फलमश्नुते ।

मया समर्पितो जीवो देवदेवे गजानने ।।२७।।
तेन जीवस्तथा ज्ञानं मम दत्तं सुभक्तितः ।

प्रासादभञ्जनाद् देवक्षेपणात् ताडनान्मम ।
विनायकातिभक्तस्य तथा प्राप्तं फलं शुभे ।।२८।।

विचार्यमाणे न त्वं मे माता वा स पितापि च ।
सर्वस्य हि पिता देवो माता देवो गजाननः ।।२९।।

स एव ज्ञानदस्त्राता संहर्ता कालरूपवान् ।
सर्वस्वरूपो देवेन्द्रो ब्रह्मविष्णुशिवात्मकः ।।३०।।

वृथा मे येन दुष्टेन ताडनं निर्घृणेन च ।
कृतं देवस्य विक्षेपः प्रासादस्यापि भञ्जनम् ।।३१।।

तस्यास्यदर्शने दोषः पतितस्य महान् भवेत् ।
स्नेहं त्यक्त्वा मदीयं त्वं पतिं स्वं परिषेवय ।।३२।।

विश्वामित्र उवाच

इतिपुत्रवचः श्रुत्वा सा तं पुनरथाब्रवीत् ।

मातोवाच

कृपयानुग्रहात्स्नेहादुच्छापं वक्तुमर्हसि ।।३३।।

पुत्र उवाच

भवान्तरेऽस्य जननी भवितासि वरार्थिनी ।
अयमेतादृशः पुत्रो भविता तव सुव्रते ।।३४।।

कल्याणनामा भविता वल्लभः क्षत्रियर्षभः ।
कमलेति च विख्याता नाम्ना त्वं च भविष्यसि।।३५।।

दक्ष इत्येव पुत्रस्य नाम ख्यातं भविष्यति ।
ततो द्वादशवर्षाणि वल्लभस्तप्स्यते तपः ।।३६।।

**वल्लालले भने** - संसारमा को कसको माता ? को कसको पिता ? को कसको छोरा ? र को कसको मित्र हुन्छ? अर्थात् कोही कसैको माता-पिता, छोरा अथवा मित्र हुँदैन, यो त भगवान् विघ्नराजले केही समयका लागि जोडिदिनुभएको आनुषङ्गिक सम्बन्ध हो ।।२६।। त्यस कारण हे कल्याणी ! मेरा माता र पिता भगवान् श्रीगणेशमात्र हुनुहुन्छ, अरू कोही पनि छैन । जसले जस्तो कर्म गर्छ, त्यसले त्यस्तै फल पाउँछ। मैले आफ्नो जीव भगवान् श्रीगणेशमा सुम्पिसकेको छु ।।२७।। उहाँले मेरो भक्ति देखेर आफूबाट झिकेर जीवतत्त्व र ज्ञान दिनुभएको छ । हे कल्याणी ! कल्याणनामक वैश्यले श्रीगणेशको मन्दिर ध्वंस गर्ने, देवमूर्तिलाई फ्याँकिदिने र श्रीगणेशभक्त ममाथि दण्डप्रहार गर्ने जस्ता कार्यबाट आज त्यो दुर्गति भोगिरहेका छन् ।।२८।। राम्ररी विचार गर्दा तपाईं मेरी आमा होइन र ती कल्याण वैश्य पनि मेरा पिता होइनन्। वास्तवमा सबैका माता एवं पिता भगवान् श्रीगणेशमात्र हुनुहुन्छ ।।२९।। श्रीगणेश नै ज्ञानदाता, त्राता र संहारकर्ता पनि हुनुहुन्छ । उहाँ सर्वात्मा इन्द्र, ब्रह्मा, विष्णु र शिवस्वरूप हुनुहुन्छ ।।३०।। हे कल्याणी ! जुन दुष्ट र निर्दय पुरुषले व्यर्थमा मलाई ताडना गरे, भगवान् श्रीगणेशको प्रतिमा फ्याँक्ने काम गरे र श्रीगणेश मन्दिर भत्काउने कामसमेत गरे त्यस्ता पतितको मुख हेर्दा पनि दोष लाग्छ । तपाईंले मप्रति यो छोरा हो भन्ने ममता छाडी घर जानुहोस् र आफ्ना पतिको सेवा गर्नुहोस् ।।३१-३२।।

**विश्वामित्रले भन्नुभयो** - पुत्रका यस्ता कुरा सुनेर तिनले फेरि भनिन् ।

**माताले भनिन्** - बाबु ! कृपा, अनुग्रह अथवा स्नेह जे गरेर भए पनि तिमीले तिम्रा पिताको सरापमोचनको उपाय बताऊ ।।३३।।

**वल्लालले भने** - हे कल्याणी ! उत्तम वरको आकाङ्क्षा गर्ने तपाईं कालान्तरमा ती कल्याण वैश्यकी आमा भएर जन्मनुहुनेछ र ती तपाईंका छोरा भएर जन्मनेछन् । अहिले कल्याण जुन रूप र आकारमा छन्, त्यतिबेला पनि यी त्यस्तै आकार - प्रकारका भएर जन्मिनेछन् । क्षत्रियश्रेष्ठ वल्लभ तपाईंका श्रीमान् हुनेछन् । तपाईं कमलाका नामबाट

अन्धतां बधिरत्वं च क्षतानि मूकतां तथा ।
व्यपनेतुन्तु दक्षस्य परं नियममास्थितः ।।३७।।

अलब्ध्वा स फलं तस्मात् सपुत्रां त्वां शुभानने ।
निराकरिष्यते गेहाद् विदेशस्था भविष्यसि ।।३८।।

कस्यचिद् द्विजवर्यस्य द्विरदाननचेतसः ।
दैवात् स्पर्शेन भद्रे ! ते सम्यक् पुत्रो भविष्यति ।।३९।।

तत्रैव गणनाथस्य दर्शनञ्च भविष्यति ।
तदा स दिव्यदेहत्वं प्राप्स्यते द्विरदाननात् ।।४०।।

इति सर्वं समाख्यातमुच्छापकारणं शुभे ।
भविष्यं कथितं तेऽद्य यथेष्टं गम्यतां त्वया ।।४१।।

विश्वामित्र उवाच

एवं निराकृता तेन जननी निरगात्ततः ।
दुःखशोकसमायुक्ता किञ्चिद्धर्षयुतापि च ।।४२।।

स चारुरोह तद्दिव्यं विमानं भक्तिभावितम् ।
गजाननेन विहितं बल्लालोऽथाऽगमद्दिवम् ।।४३।।

इति ते सर्वमाख्यातं यत् पृष्टोऽहमिह त्वया ।
या गतिस्तेन वैश्येन सम्प्राप्ता जन्मनोर्द्वयोः ।।४४।।

यथा जगाद बल्लालः सर्वं तदभवत्तदा ।
सा जज्ञे कमला भूत्वा सोऽभवत् क्षत्रियर्षभः ।।४५।।

प्रसिद्ध हुनुहुनेछ। तपाईंको छोराको नाम दक्ष रहनेछ । दक्षको जन्मजात अन्धोपन, बहिरोपन, लाटोपन, घाउ, रक्तस्राव र दुर्गन्ध हटाउन नियमपूर्वक वल्लभले बाह्रवर्षसम्म तपस्या गर्नेछन् ।।३४-३७।। तपस्यापछि छोराको परिस्थितिमा सुधार ल्याउन नसकेर वल्लभले छोरासहित तपाईंलाई घरबाट निकालिदिनेछन् र तपाईं देश छोडेर विदेशमा बस्नुहुनेछ ।।३८।। संयोगवश भगवान् श्रीगणेशमा मन लगाउने कुनै ब्राह्मणको स्पर्श पाएर तपाईंका छोरा दक्ष स्वस्थ हुनेछन्।।३९।। त्यस बेला तपाईंले गणनाथ भगवान्को दर्शन पनि पाउनुहुनेछ । श्रीगणेशको कृपाबाट तपाईंका पुत्र दक्षले दिव्यदेह प्राप्त गर्नेछन् ।।४०।। हे कल्याणी! मैले तपाईंलाई भावी घटना र सरापनिवृत्तिको प्रक्रिया बताएँ । अब तपाईं इच्छानुसार जानसक्नु हुन्छ ।।४१।।

**विश्वामित्रले भन्नुभयो** – यसरी छोराद्वारा रित्तै हात फर्काइएकी आमा इन्दुमती दुःख र शोकले आकुल थिइन् । तापनि भविष्यका कुरा सुनेर केही आश्वस्त र केही हर्षित भई घर फर्किन् ।।४२।। बल्लाल पनि भगवान् श्रीगणेशमा भक्तिका कारण श्रीगणेशद्वारा पठाइएको दिव्य विमानमा आरोहण गरी दिव्य लोकमा गए।।४३।। जसरी तपाईंले सोध्नुभएको थियो- तदनुसार मैले कल्याण वैश्यका दुई जन्म र ती-ती जन्ममा जस्तो गति भयो ती सबै कुरा बताएँ ।।४४।। बल्लालले जस्तो भविष्यवाणी गर्दै भनेका थिए, सबै कुरा त्यस्तै भयो । अर्को जन्ममा ती इन्दुमती कमला भएर जन्मिन् र ती वैश्य क्षत्रियको रूपमा पैदा भए ।।४५।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे भविष्यकथनं नाम त्रयोविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'बल्लालद्वारा वैश्यदम्पतीको भविष्यकथन' शीर्षकान्वित तेइसौं अध्याय पूर्ण भयो ।।२३।।

ॐ

## चतुर्विंशोऽध्यायः { २४ अध्याय }

भीम उवाच

दक्षेण मुनिशार्दूल राजपुत्रेण धीमता ।
अनुष्ठानं कृतं कुत्र कथं वा कस्य वा मुने ।।१।।
एतद् विस्तार्य ब्रूहि त्वं शृण्वँस्तृप्याम्यहं न च ।

विश्वामित्र उवाच

अविदूरे पुरस्तस्याः कौण्डिन्यस्य महावनम् ।।२।।
रम्यं नानावृक्षयुतं नानाश्वापदसङ्कुलम् ।
नानापक्षिगणैर्युक्तं लताजालविराजितम् ।।३।।
सन्मनोनिर्मलपयःसरोवापीविराजितम् ।
जीर्णप्रासादमध्यस्थगजाननविराजितम् ।।४।।
तत्र स्थित्वा तपश्चक्रे गजाननसुतोषकम् ।
मुद्गलेनोपदिष्टेन मन्त्रेणैकाक्षरेण सः ।।५।।
तोषयामास तं देवं वर्षैर्द्वादशसम्मितैः ।
स्नानैर्वस्त्रैः सुगन्धैश्च माल्यैर्धूपैश्च दीपकैः ।।६।।
नैवेद्यं कन्दमूलैश्च भक्षणीयैरकल्पयत् ।
मनसा कल्पयामास दक्षिणां क्षत्रियर्षभः ।।७।।
एवं तस्यागमन् भूप ! दिनानि त्वेकविंशतिः ।
ततः प्रभातसमये स्वयमेवं ददर्श सः ।।८।।
एकं महामतङ्गञ्च सिन्दूराक्तं सुशोभितम् ।
मदस्राविसुगण्डाभ्यां सुन्दरं गिरिसन्निभम् ।।९।।
चारुप्रसन्नवदनं दन्तशोभिमहत्करम् ।
भ्रमरालिसमाकीर्णं गजाननमिवापरम् ।
तेन तत्कण्ठदेशे तु रत्नमाला समर्पिता ।।१०।।
तत उत्थाप्य तं स्कन्धे स्थापयामास दन्तिराट् ।
स दन्ती नगरं यातः पताकाध्वजशोभितम् ।।११।।
ततः स प्रतिबुद्धः सन् पप्रच्छ जननीं निजाम् ।
कमले वद मातस्त्वमस्याभिप्रायमद्य मे ।।१२।।
आरोहणं गजस्कन्धे शुभं वा यदि वाऽशुभम् ।

**भीमले भने -** हे मुनिश्रेष्ठ ! राजपुत्र बुद्धिमान् दक्षले कसको अनुष्ठान गरे र त्यो अनुष्ठान कुन ठाउँमा गरे । यो कुरा विस्तारपूर्वक मलाई बताउनुहोस् । तपाईंबाट श्रीगणेशसम्बन्धी कथा सुन्न पाउँदा मैले कहिले पनि तृप्तिको अनुभव गर्दिनँ ।

**विश्वामित्रले भन्नुभयो -** कौण्डिन्यपुरको समीपमा नै अत्यन्त रमणीय, नानाथरि वृक्षले सुहाएको, अनेक थरि वन्यप्राणीहरूले परिपूर्ण, धेरै प्रकारका चराचुरुङ्गीहरूको कलरवले गुञ्जायमान, लतापुष्पले परिपूर्ण, मनझैं निर्मल जलराशि भएका सरोवर र तलाउले सम्पन्न र गजाननको प्रतिमाद्वारा जीर्ण मन्दिरले सुहाएको महावन थियो ।।१-४।। दक्षले त्यहाँ रहेर श्रीगणेशलाई प्रसन्न तुल्याउने हेतुले मुद्गल ऋषिले बताएको एकाक्षरी मन्त्रको जप गर्दै तपस्या गरे ।।५।। बाह्र वर्षसम्म तपस्या गरी दक्षले श्रीगणेशलाई प्रसन्न तुल्याए । स्नान, गन्ध, माल्य, धूप, दीप, कन्दमूल र अन्य स्वादु-पदार्थको नैवेद्य टक्र्याएर उनले श्रीगणेशको पूजा गर्ने क्रममा मानसिकरूपमा दक्षिणा टक्र्याएका थिए ।।६-७।। यसरी तिनले २१ दिनसम्म पूजा गरे । कुनै दिन बिहानको सपनामा दक्षले एउटा सिन्दूरले रङ्गिएको, सुन्दर, गालाबाट मद चुहाइरहेको, विशाल आकारको र प्रसन्न मुख भएको एकदन्त र सूँढले शोभायमान र भँवराले घेरिएको श्रीगणेशझैं लाग्ने एउटा हात्ती देखे । त्यसपछि उनले त्यसको घाँटीमा माला लगाइदिए ।।८-१०।। त्यसपछि त्यो हात्तीले दक्षलाई उठाएर आफ्नो काँधमा राख्यो र त्यो हात्ती सुन्दर पताका र तोरणले शोभायमान नगरमा पुग्यो । यस्तो सपना देखेर दक्ष जागे र आफ्नी आमासँग भने । हे आमा कमला ! यो सपनाको के अभिप्राय हो ? बताउनुहोस् ।।११-१२।। सपनामा हात्तीको काँधमा आरोहण गर्नु राम्रो हो अथवा नराम्रो? मलाई बताउनुहोस्।

कमलोवाच

धन्यस्त्वमसि दृष्टोऽयं गजरूपी विनायकः ।।१३।।

आरोहणफलं राज्यप्राप्तिरेव न संशयः ।

दक्ष उवाच

यदि राज्यस्य प्राप्तिः स्यात् तदा तुभ्यं ददाम्यहम्।।१४।।

नरयानं तथा ग्रामान् दीपिकां मौक्तिकस्त्रजम् ।
धर्मं च कारयिष्यामि गवाष्टापददानतः ।।१५।।

व्रतानि नियमाँश्चैव दानान्यन्यान्यनेकशः ।

मुनिरुवाच

श्रुत्वेत्थं कमला हृष्टा जगाद तनयं प्रति ।।१६।।

त्वयि राज्यस्थिते पुत्र ! परमानन्दता मम ।
सद्धर्मे रमतां चेतः सतः सारभृतस्तव ।
आयुष्यं विपुलं तेऽस्तु द्विजदेवार्चने रतिः ।।१७।।

**कमलाले भनिन् -** बाबु ! तिमी धन्य छौ, तिमीले सपनामा हात्तीको रूपमा भगवान् श्रीगणेशको दर्शन पाएका छौ ।।१३।। सपनामा गजारोहण गर्नुको अर्थ राज्यप्राप्ति नै हो । यसमा कुनै सन्देह छैन ।

**दक्षले भने -** आमा ! यसको फल राज्यप्राप्ति हो भने मैले पाएको राज्य हजुरलाई टक्र्याउनेछु ।।१४।। नरयान, गाउँको समूह, दीपमाला र मोतीको हार पनि म तपाईँलाई टक्र्याउँनेछु। गाई र सुवर्ण आदि अनेक उत्तम पदार्थहरूको दान गरेर धर्मको संवर्धन गर्नेछु ।।१५।। यसैगरी अनेक व्रत, नियम र दान पनि गर्नेछु।

**मुनिले भने -** छोराका यस्ता कुरा सुनेर प्रसन्न भएकी माता कमलाले भनिन् - हे बाबु ! तिमी राजसिंहासनमा आरूढ भएको देख्न पाउँदा मलाई ठूलो आनन्दको अनुभूति हुनेछ । तिम्रो चित्त असल धर्ममा रमाओस् । सज्जन स्वभाव भएका, सारतत्त्वमा ध्यान दिने र श्रीगणेशको आराधनामा रमाउने तिम्रो पूर्ण आयु होस् । फेरि तिम्रो मन द्विज-देवताको स्वागत-सत्कार एवं पूजा-आराधनामा लागोस् ।।१६-१७।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे स्वप्नकथनं नाम चतुर्विंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'दक्षद्वारा श्रीगणेशाराधना र शुभ स्वप्नदर्शन' शीर्षकान्वित चौबीसौं अध्याय पूर्ण भयो ।।२४।।

ॐ

# पञ्चविंशोऽध्यायः { २५ अध्याय }

विश्वामित्र उवाच

श्रृणु राजन् ! महाश्चर्यं दैवकालकृतं शुभम् ।
कौण्डिन्ये नगरे राजा चन्द्रसेनो महामतिः ।।१।।

स्वकर्मपरिपाकेन निधनं कालयोगतः ।
अगमद् दिव्ययानेन धर्मबाहुल्यतो दिवम् ।।२।।

तच्च नागरिकाः श्रुत्वा हाहाकारं प्रचक्रिरे ।
धावमाना ययुस्तत्र त्यक्त्वा कार्याण्यनेकशः ।।३।।

शिरांसि च विनिघ्नन्तः पाणिभिः शोककर्षिताः ।
चस्खलुश्च पतन्तश्च ददृशुः प्रेतभूपतिम् ।।४।।

नेमुः पादौ प्रगृह्यैव दुःखमोहवशं गताः ।
केचिद्धस्तं गृहीत्वैव स्वस्वमूर्ध्नि न्यवेशयन् ।।५।।

रुरुदुःसुस्वरं केचित् पाणिपृष्ठमुखस्वनाः ।
मृता इव निपेतुश्च स्नेहातिशयतोऽपरे ।।६।।

तस्य पत्नी तु सुलभा रुरोद करुणस्वरा ।
पाणिभ्यां निघ्नती स्वीयं हृदयं भृशदुःखिता ।।७।।

विकीर्णभूषणा मूर्च्छामागता पतिता भुवि ।
समानव्यसनाभिः सा पुरस्त्रीभिर्धृता तदा ।।८।।

विललाप तदा कान्ता चन्द्रसेनस्य सुन्दरी ।
निर्लज्जा निरनुक्रोशा नाथनाथेति जल्पती ।।९।।

रे धातर्न दया तेऽस्ति बालवच्चरितं तव ।
युनङ्क्षि स्नेहभावेन विनियुङ्क्ष्यकृतार्थकम् ।।१०।।

राजन् ! न पृष्ट्वा क्व गतो वद मां करुणानिधे ।
दिने दिने वदस्येवं यामि भद्रासनं प्रिये ।।११।।

अद्य निष्ठुरतां केन गमितोऽस्यागसा मम ।
तत् क्षमस्व नमाम्येषा जनमध्ये गतत्रपा ।।१२।।

विश्वामित्रले भन्नुभयो - हे राजन् ! दैव र कालद्वारा निष्पन्न शुभ फलदायक आश्चर्यबारे सुन्नुहोस् । कौण्डिन्य नगरमा चन्द्रसेन नामक बुद्धिमान् राजा थिए ।।१।। आफ्ना कर्मका परिपाकले र कालयोगले तिनको एक दिन निधन भयो । ती धेरै धर्म गरेका कारण दिव्य विमानमा सवार भई स्वर्ग गए।।२।। राजाको निधन थाहा पाएर नागरिकहरूले हाहाकार गरे। ती प्रजाहरू आ-आफ्ना काम-कर्तव्य छोडी यताउति भौंतारिन थाले ।।३।। शोक-सन्तप्त ती प्रजाहरू आफ्नो हातले शिरमा प्रहार गर्दै भुइँमा लड्न थाले। लर्खराउँदै अगाडि बढ्दा तिनले मृत राजाको लाश देखे ।।४।। दुःख र मोहमा परेका केही जनताले मृत राजाको पाउ समाती प्रणाम गरिरहेका थिए ।।५।। कसैले मृत शरीरको हात समातेर आफ्नो शिर छुवाइरहेका थिए, केही मानिस आफ्नो हातले मुख छोपेर रोइरहेका थिए, कुनै मानिस राजामा आफ्नो प्रेमातिशय भएका कारण मरेझैं निष्पन्द भएर भुइँमा सुतिरहेका थिए ।।६।। राजा चन्द्रसेनकी पत्नी सुलभा आफ्ना हातद्वारा छातीमा प्रहार गर्दै अत्यन्त दुःखी भएर करुणस्वरले रोइरहेकी थिइन् ।।७।। शोकावस्थामा रानी सुलभाका गहनाहरू भुइँमा छरिएका थिए। उनी विलाप गर्दागर्दै एक्कासि भुइँमा लडिन् र मूर्च्छा परिन् । त्यस बेला उनीसमान वेदनाको अनुभूति गर्ने दुःखित नगरवासी नारीहरूले उनलाई समालेर राखे ।।८।। राजा चन्द्रसेनकी सुन्दरी रानी सुलभा होशमा आएपछि हे नाथ ! हे नाथ ! भन्दै विलाप गर्न थालिन् । शोकका कारण उनी निर्लज्ज र निष्करुण बनेकी थिइन् ।।९।। तिनी भन्दै थिइन् - हे विधाता! तिमी निर्दयी छौ, तिमीले केटाकेटीको जस्तो काम गऱ्यौ, तिमीले दम्पतीहरूलाई स्नेहका माध्यमबाट जुटाउँछौ र त्यसको परिपाक हुन नपाउँदै तिनलाई वियुक्त गराउँछौ ।।१०।। हे करुणामय राजा ! तपाईं मलाई नसोधीकन कहाँ जानुभयो ? बताउनुहोस्। तपाईं दिनदिनै म सिंहासनतर्फ जान्छु भनेर बिदा माग्नुहुन्थ्यो, आज मैले कुन अपराध गरें ? जसबाट तपाईं मलाई केही नसोधीकन जानुभयो? हे नाथ ! मलाई क्षमा दिनुहोस् । म सम्पूर्ण मानिसहरूका बीचमा निर्लज्ज भएर तपाईंलाई प्रणाम गर्छु ।।११-१२।। हे

नय मां यत्र यातोऽसि प्रियान्ते प्रियकारिणीम् ।
त्रिलोकीं पश्यतीं शून्यामपुत्रां पतिना विना ।।१३।।

मुनिरुवाच

सुमन्तुः प्रकृतिस्तस्य मनोरञ्जन एव च ।
द्वावप्यवोदितां तत्र किं राज्यस्य भविष्यति ।।१४।।

आवाभ्यामविचार्यैव क्व गतो नृपसत्तमः ।
कस्मान्न वदसे राजन् ! किमर्थं मौनमास्थितः ।।१५।।

न पश्यसि प्रियां भार्यामनाथामिव विह्वलाम् ।
सहैव यावो नृपते ! त्यक्त्वा सर्वं गृहाश्रमम् ।।१६।।

अनाथं नगरं तेऽद्य राष्ट्रं वा कोऽथ पास्यति ।।१७।।

मुनिरुवाच

एतस्मिन्नन्तरे तत्र बभाण ब्राह्मणः सुधीः ।।१८।।

वेदशास्त्रार्थतत्त्वज्ञः प्रस्तुतं निष्ठुरं वचः ।
सर्वे स्वार्थपरा यूयं नाप्तः कश्चन विद्यते ।।१९।।

सुहृदां रोदनाश्रूणि मुखे प्रेतस्य यान्ति हि ।
पृथिव्यां भारतां याति प्राणहीनं कलेवरम् ।।२०।।

ब्रह्माण्डगोलके को नु मृतमन्यो नु गच्छति ।
इयञ्च सुलभा राज्ञी रोदिति जीविताशया ।।२१।।

मृतकस्यानुगत्यर्थं न सा रोदिति कर्हिचित् ।
यूयं सर्वे नागरिकाः स्वकार्यगमनाकुलाः ।।२२।।

सूर्यवंश्याः सोमवंश्या ये राजानो मृता न किम् ।
तस्मादुत्थाय सर्वेऽपि राज्ञः कुर्वन्तु संस्कृतिम् ।।२३।।

मृतसंस्कारकारी यः स एवाप्तो न चापरः ।
एतदर्थं हि लोकस्य ज्यायसी पुत्रगृध्नुता ।।२४।।

तस्मादानीयतां धर्मपुत्रो वाप्यन्य एव च ।
स हि क्रियामारभतु सर्वैर्देयस्तिलाञ्जलिः ।।२५।।

नाथ ! तपाईँ विना त्रिलोकीलाई नै शून्य देखिरहेकी, पुत्रहीन, तपाईँमा असाध्य स्नेहभाव राख्ने म प्रेयसीलाई तपाईँ जहाँ जानुभएको छ, त्यहीं पुऱ्याउनुहोस् ।।१३।।

**मुनिले भने** - चन्द्रसेन राजाका अमात्य सुमन्तु र मनोरञ्जन दुवै विलाप गर्दै भन्न लागे - अब राज्यको के गति होला ? ।।१४।। हामीहरूसँग विचारै नगरी हाम्रा राजा कहाँ जानुभयो ? हे राजा ! तपाईँ किन कुरा गर्नुहुन्न ? किन मौन हुनुहुन्छ ? ।।१५।। तपाईँले अनाथझैं भएकी, शोकले व्याकुल आफ्नी प्यारी रानीलाई किन हेर्नुहुँदैन ? हे महाराज ! अब हामी पनि गृहस्थाश्रम छाडेर तपाईँका साथ जान्छौं ।।१६।। आज तपाईँ नहुनाले यो राजधानी अनाथ भएको छ । अब यो राष्ट्रको रक्षा कसले गर्ला ? ।।१७।।

**मुनिले भने** - यसै बीचमा एक जना वेद एवं शास्त्रका तत्त्वदर्शी बुद्धिमान् ब्राह्मणले निष्ठुर वचन प्रयोग गर्दै भने- तिमीहरू स्वार्थी छौ, तिमीहरूमध्ये सज्जन कुनै पनि छैन ।।१८-१९।। मानिस मर्दा शोकले रोइरहने आफन्तका आँसुहरू मृतात्माका मुखमा पर्छन् । मृतकको नजलाएको लाश पृथिवीको निमित्त भाररूप हुन्छ ।।२०।। यो विशाल ब्रह्माण्डमा जति मानिस मरेर जान्छन् तिनका पछि को लाग्छ ? यी रानी सुलभा पनि जीवनकै आशाले रोइरहेकी छन् ।।२१।। यी मृतक श्रीमान्को अनुगमन गर्नका लागि रोइरहेकी छैनन् । तिमी सबै नागरिकहरू पनि आ-आफ्नै कार्यतर्फ जानका लागि आतुर छौ ।।२२।। यस धर्तीमा जन्म लिने सूर्यवंशी र चन्द्रवंशी राजाहरू के मरेर गएनन् ? अर्थात् जो जन्मिन्छ त्यो मर्दछ । त्यस कारण तिमीहरू सबै उठ र राजाको अन्तिम संस्कार सम्पन्न गर ।।२३।। जसले मरेका मानिसको अन्तिम संस्कार गर्दछ, त्यसलाई नै आफन्त भन्नुपर्दछ, अरूलाई होइन । अन्तिम संस्कारका लागि नै मानिसहरूले पुत्रको अत्यधिक चाहना गरिरहेका हुन्छन् ।।२४।। यी राजाको अन्तिम संस्कारका लागि कुनै धर्मपुत्र छ भने त्यसलाई र छैन भने अरू कसैलाई तयार गर । त्यसले अन्तिम क्रिया शुरू गरोस् । हामी सबैले राजालाई तिलाञ्जलि प्रदान गरौं ।।२५।।

मुनिरुवाच

ततस्ते नागराः सर्वे द्वावमात्यौ स्त्रियश्च ताः ।
प्रबोधिता ब्राह्मणेन चक्रुस्तस्यौर्ध्वदेहिकम् ।।२६।।

सुमन्तुना कृतं सर्वं सर्वैर्दत्तस्तिलाञ्जलिः ।
पुनः स्नात्वा तु ते सर्वे नगरं विविशुश्चिरात् ।।२७।।

अश्नन्ति पिचुमन्दस्य पत्रं नत्वेश्वरञ्जनाः ।
सान्त्वयित्वा तु सुलभां ययुः स्वं स्वं निकेतनम् ।।२८।।

त्रयोदशाहे निर्वृत्ते राज्यै दत्त्वाम्बराणि ते ।
चक्रुस्ते भोजनं प्रीत्या प्रत्यहं बहुवासरम् ।।२९।।

एकदा नागराः सर्वे द्वावमात्यौ नृपप्रिया ।
सर्वे संशयिता आसन् प्रजापालनकर्मणि ।।३०।।

एतस्मिन्नन्तरे तत्र मुद्गलो मुनिराययौ ।
उवाच सर्वाशयविदस्य राज्ञो महागजः ।।३१।।

गहनो नाम गृह्णातु मालां पुष्करनिर्मिताम् ।
समाजे यस्य कण्ठे तां निक्षिपेत् स नृपो भवेत् ।।३२।।

तथेति च तदा सर्वे साधु साध्वित्यपूजयन् ।
अतीन्द्रियज्ञानवतो वचो मुद्गलशर्मणः ।।३३।।

**मुनिले भने** - ब्राह्मणद्वारा प्रबोधित सबै नगरवासी जनता, दुवै मन्त्री, सुलभा रानी र अरू नारीहरूले दिवङ्गत राजा चन्द्रसेनको और्ध्वदैहिक संस्कार गरे ।।२६।। सम्पूर्ण क्रिया अमात्य सुमन्तुले गरे भने अरू सबैले तिलाञ्जलि दिए। त्यसपछि स्नान गरेर ती सबैले नगरमा प्रवेश गरे ।।२७।। ईश्वरलाई नमस्कार गरी नीमको पात चपाएर महारानी सुलभालाई सान्त्वना दिंदै मानिसहरू आ-आफ्ना घरतर्फ गए ।।२८।। तेह्र दिन बितेपछि रानीलाई वस्त्र टक्र्याएर सबै नगरवासीले प्रीतिपूर्वक भोजन गरे । धेरै दिनसम्म सबै मानिसले राजभवनमा आएर दिनदिनै प्रीतिपूर्वक भोजन गरे ।।२९।। एक दिन सबै नगरवासी, दुवै अमात्य र रानी सुलभालाई राज्यको सञ्चालन र प्रजापालन कसरी गर्ने भन्ने विषयमा संशय पैदा भयो ।।३०।। यसै बीचमा त्यहाँ मुद्गल नामक ऋषि आइपुगे । सबै मानिसको आशय बुझेका ती मुनिले भने - दिवङ्गत राजाको गहन नाम गरेको यौटा हात्ती छ, त्यसले आफ्नो सूँढमा कमलको माला धारण गरोस्, ठूलो जनसमूहमा गएर जुन मानिसको घाँटीमा त्यसले त्यो माला लगाइदिन्छ, त्यो मानिस नै यो देशको राजा हुनेछ ।।३१-३२।। मुद्गलले गरेका कुरा सुनेर, हुन्छ त्यसै गरौं भन्दै सबैले साधुवादका साथ अतीन्द्रिय ज्ञानसम्पन्न मुद्गल ऋषिको वाचनिक प्रस्तावलाई अनुमोदन गरे ।।३३।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे चन्द्रसेनोपाख्यानं नाम पञ्चविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'राजा चन्द्रसेनको उपाख्यान' शीर्षकान्वित पच्चीसौं अध्याय पूर्ण भयो ।।

ॐ

# षड्विंशोऽध्यायः { २६ अध्याय }

विश्वामित्र उवाच

एकस्मिन् दिवसे शुभग्रहयुते लग्ने शुभे वासरे
योगे चारुफले जने च नगरे नानाविधे मेलिते।
मालां रत्नमयीं ददौ नरपते राज्ञी करेणोः करे
सम्प्रार्थ्य द्विरदं कुरुष्व नृपतिं लोकेषु यस्ते मतः।।१।।

तामाज्ञां प्रतिगृह्य वारणपतिः संरञ्जितो धातुभि-
र्बभ्राम द्विजवन्दिचारणगणैराशासितः सर्वतः ।
नानावाद्यकरैर्वृतो नृपभटैं राज्यार्थिभिः पूरुषै-
र्जिघ्रन् सर्वजनं सभापरिगतं यातो बहिः पत्तनात्।।२।।

नार्यस्तन्नगरे शिशूनथ पतीन् कृत्वा पुरोऽवस्थितान्
राज्यार्थं विविधा नराश्च बहुधा श्रेणीमुखाश्च स्थिताः।
ते सर्वे विमनस्कतां परिगताः स्वं स्वं गृहं चागता
यातेऽस्मिन् गहने करिण्यथ पुरो याता बहिश्चापरे।।३।।

गजस्तु यातः कमलासुतं तं
सम्पूजयन्तं द्विरदाननन्तम् ।
दृष्ट्वैव तस्मिन् निदधे स मालां
पश्यत्सु लोकेषु सुरेषु नाके ।।४।।

वस्त्राणि माल्यानि च भूषणानि
दक्षाय दत्तानि तदैव लोकैः ।
ज्ञात्वा मतं पौरजनस्य राजा
राज्ञः प्रकृत्योरुभयोस्तदैव ।।५।।

ववदुर्वाद्यसङ्घाश्च दिव्या भौमा अनेकशः ।
मुमुचुः पुष्पवर्षा ते देवा हर्षयुताः शुभम् ।।६।।

उपविष्टास्तदा लोका यथास्थानं यथाक्रमम् ।
नेमुश्च तं दक्षनृपममात्यद्वयसंयुतम् ।।७।।

ताम्बूलानि च वस्त्राणि जनेभ्यः प्रददौ नृपः ।
ब्राह्मणान् पूजयित्वैव दत्त्वा दानान्यनेकशः ।।८।।

सम्पूज्य मातरं तान्तु वस्त्रालङ्करणादिभिः ।
दापयामास दानानि ब्राह्मणेभ्यो यथाविधि ।।९।।

**विश्वामित्रले भन्नुभयो-** हे राजन् ! एक दिन शुभग्रहले परिपूर्ण, शुभ लग्नमा उत्तम बारका दिन उत्तम फल प्रदान गर्ने योगसमेत रहँदा नगरमा अनेक थरि मानिसहरूको भेला भएको बखतमा रानी सुलभाले हात्तीलाई - हे गजराज ! तिमीलाई जुन मानिस मन पर्छ, त्यसको कण्ठमा यो माला लगाई राजा तुल्याऊ भनी प्रार्थना गर्दै त्यसको सूँढमा कमलको माला लगाइदिइन् ।।१।। रानीको आज्ञा स्वीकार गरी अनेक अलङ्कारद्वारा अलङ्कृत, ब्राह्मण, स्तुतिपाठक र चारणहरूद्वारा राम्रो राजाको चयन गरोस् भन्ने आशाका नजरले हेरिएको, अनेक थरि वाद्य बजाइरहेका राज्यार्थी, राजगण र सैनिक गणद्वारा घेरिएको त्यो गहननामक हात्ती सभामा आएका सबै मानिसहरूलाई सुँघ्दै नगरदेखि बाहिर गयो ।।२।। त्यो नगरका नारीहरू आफ्ना पति र पुत्रहरूलाई अगाडि सारेर दर्शकदीर्घामा उभिएका थिए । राज्यप्राप्तिको इच्छाले अनेक मानिसहरू पङ्क्तिबद्ध भएर रहेका थिए । ती सबै मानिस हात्ती नगरबाट बाहिर गएपछि खिन्न भएर आ-आफ्ना घरतर्फ लागे । केही मानिस भने हात्तीले कसलाई चयन गर्छ भन्ने जिज्ञासा लिएर त्यो हात्ती गएको बाटो लागे ।।३।। त्यो हात्ती भगवान् श्रीगणेशको पूजा गरिरहेका, कमलाका छोरा दक्षको नजिकमा गयो । तिनलाई देख्नासाथ त्यसले पृथिवीका मानिस र स्वर्गका देवताहरूका सामु तिनको घाँटीमा माला लगाइदियो ।।४।। पुरवासी जन, मन्त्री र रानीको समेत मत बुझेका देवताहरूले त्यस बेला दक्षलाई वस्त्र, माला र अलङ्कार प्रदान गरे ।।५।। त्यस समयमा पृथिवी र दिव्यलोकका अनेक थरि बाजा बजे । देवताहरूले खुसी भएर दक्षमाथि फूल वर्षाए ।।६।। क्रमअनुसार आ-आफ्नो ठाउँमा बसेका पुरवासी नर-नारीले दुई जना अमात्यका बीचमा रहेका ती नवनियुक्त राजा दक्षलाई प्रणाम गरे ।।७।। राजा दक्षले सबै मानिसहरूलाई वस्त्र र ताम्बूल प्रदान गरेपछि ब्राह्मणहरूको पूजा गरेर अनेक थरि दान दिए ।।८।। दक्षले वस्त्र, गहना आदिद्वारा आफ्नी आमा कमलाको सत्कार गरेर तिनका हातबाट पनि विधिपूर्वक ब्राह्मणहरूलाई अनेक थरि दान दिलाउने काम सम्पन्न गराए।।९।।

नरयाने समारोप्य स्वयमारुरुहे गजम् ।
अलङ्कृतं सिक्तमार्गं पताकाध्वजसंयुतम् ।।१०।।

अश्वारूढावमात्यौ तौ पुरस्कृत्य ययौ पुरम् ।
स्तुवन्ति बन्दिनः पौरा नृत्यन्त्यप्सरसः पुरः ।
गन्धर्वा गाननिष्णाता धावित्वा यान्त्यमुं पुरः ।।११।।

जयशब्दैर्नमःशब्दो वाद्यशब्दोऽगमद् दिवम् ।
नृपद्वारं समासाद्य नत्वा केचिद् गृहं ययुः ।।१२।।

सभायां विविशुः सर्वे सङ्ख्यातीता नृपास्तदा ।
नृयानं प्रेषयामास मुद्गलाय महामतिः ।।१३।।

छत्रं ध्वजं चामरञ्च सुमन्तुं प्रकृतिं तथा ।
आयान्तं मुद्गलं दृष्ट्वा स्वासनात् पुरतो ययौ ।।१४।।

स किरीटेन शिरसा पादयोः प्रणनाम तम् ।
न्यवेशयत् स्वासने तं तेनाज्ञप्तोऽन्य आसने ।।१५।।

उपविष्टो राजसङ्घैः पूजयामास तं मुनिम् ।
गाश्चापि प्रददौ तत्र ब्राह्मणाय महामतिः ।।१६।।

उवाच तं नृपो दक्षो भो मुद्गल ! महामुने ।
अद्य ते महिमा ज्ञातो लोकैरेतैर्महानयम् ।।१७।।

शरीरे चारुता राज्यप्राप्तिश्च त्वत्प्रसादतः ।
क्व सावस्था पूर्वतनोः क्वेदृक् राज्यं महामुने ।।१८।।

विनायकमहं जाने त्वामेव मुनिसत्तम ।
पुनर्मे मस्तके ब्रह्मन् ! निधेहि करपङ्कजम् ।।१९।।

येनाऽहं सर्वकामानां भाजनं स्याञ्चिरं मुने ।

विश्वामित्र उवाच

आकर्ण्य वचनं तस्य मुद्गलोऽथाऽब्रवीच्च तम्।।२०।।

न ते भयं रिपुकृतं भविष्यति कदाचन ।
यं यं कामयसे कामं सर्वतस्ते भविष्यति । ।।२१।।

राजा दक्षले आफ्नी माता कमलालाई नरयानमा सवार गराएपछि वस्त्र र गहनाले सिंगारिएको मदका धाराले बाटोलाई सुगन्धित र शीतल तुल्याउने, ध्वजा-पताकाले सुहाएको हात्तीमा आरोहण गरे ।।१०।। त्यसपछि ती राजाले घोडामा सवार ती दुवै अमात्यलाई अगाडि लगाएर नगरमा प्रवेश गरे। तिनले नगरप्रवेश गर्दा बन्दीहरू स्तुति पाठ गरिरहेका थिए, अप्सराहरू अगाडि आएर नाचिरहेका थिए र गायनकला कुशल गन्धर्वहरू तिनका सामु आएर मीठो गाना सुनाइरहेका थिए ।।११।। महाराजा दक्षको जय जयकार हुँदा वाद्यवादनको ध्वनि र नमो नमको ध्वनि पुञ्जीभूत भएर स्वर्गसम्म घन्किरहेको थियो। राजाको जुलुस राजद्वारमा पुगेपछि केही मानिस तिनलाई नमस्कार गरी घरतर्फ लागे ।।१२।। त्यसपछि राजासहित विशिष्ट मानिसहरूले राजसभामा प्रवेश गरे। त्यहाँ असङ्ख्य राजाहरू उपस्थित थिए। मुद्‌गललाई त्यहाँ झिकाउन राजाले नरयान पठाए । नरयानका साथै छाता, ध्वजा, चामर र सुमन्तु नामक मन्त्रीसमेत पठाएका थिए । केहीबेर पछि मुदगल ऋषिलाई राजसभामा आइरहेका देखेर राजा दक्ष स्वागतका लागि उठी अगाडि बढे ।।१३-१४।। दक्षले शिर झुकाएर मुद्‌गललाई प्रणाम गरी आफ्नै आसनमा बसाए । मुद्‌गलको आज्ञाबाट अर्को आसनमा बसेका दक्षले उपस्थित राजमण्डलद्वारा पनि मुद्‌गल ऋषिको स्वागत-सत्कार र पूजा गराए । त्यस बेला बुद्धिमान् दक्षले ब्राह्मणहरूलाई गाई दिएर सम्मान गरे ।।१५-१६।। राजा दक्षले मुद्‌गल ऋषिलाई आदरपूर्वक भने - हे महामुनि मुद्‌गल! आज बल्ल यो नगरका मानिसहरूले हजुरको महत्त्व र महिमा जान्ने अवसर पाएका छन् । हजुरको कृपाबाट मेरो शरीरमा सौन्दर्य छायो र राज्यको प्राप्ति पनि भयो । मेरो पूर्व शरीर कस्तो घिन लाग्दो थियो । हे महामुनि ! त्यो अवस्था कहाँ ? यो राज्यप्राप्तिको अवस्था कहाँ ? यो सबै हजुरको कृपाबाट भएको हो ।।१७-१८।। हे मुनिवर ! मैले हजुरलाई भगवान् श्रीगणेशको स्वरूप नै मानेको छु। हजुरले मेरो मस्तकमा आफ्नो वरद करकमल राखिदिनुहोस्। जसबाट म सम्पूर्ण कामना साकार गर्नका लागि सत्पात्र बन्न सकूँ ।

**विश्वामित्रले भन्नुभयो** - दक्षका यी कुरा सुनेर मुद्‌गल ऋषिले भने ।।१९-२०।। हे दक्ष ! तिमीलाई शत्रुको कुनै भय हुने छैन। तिमीले जुन-जुन कामना गर्नेछौ, ती कामना

ततस्तस्मै ददौ ग्रामान् वासोरत्नधनादिकम् ।
अन्येषां ब्राह्मणानाञ्च गोधनान्यंशुकानि च ।।२२।।

आशीर्भिरभिनन्द्याऽथ ययुस्ते ब्राह्मणा गृहम् ।
अमात्याभ्यां गृहिभ्यश्च ददौ ग्रामाननेकशः ।।२३।।

प्रासादं कारयामास गणेशस्य बृहत्तरम् ।
कुण्डिने नगरे तस्मिन् प्राक्तनं संस्थितं लघुम् ।
विसर्जयामास सभां प्रविवेश गृहं नृपः ।।२४।।

आययौ वल्लभस्तत्र श्रुत्वा वार्तां जनेरिताम् ।
वीरसेनो नरपतिः स्वां सुतां पतिमिच्छतीम् ।।२५।।

ददौ तस्मै स्वप्नगतगणेशस्याज्ञया शुभम् ।
दक्षाय राज्ञे महते त्रिलोकश्रुतकीर्तये ।।२६।।

तस्यां तस्याऽभवत् पुत्रो बृहद्भानुरिति श्रुतः ।
ततोऽभवत् खड्गधरः सुलभस्तत्सुतोऽभवत् ।।२७।।

पद्माकरस्तत्तनयो वपुर्दीप्तस्तु तत्सुतः ।
चित्रसेनस्तत्सुतोऽभूच्चित्रसेनात् त्वमेव हि ।।२८।।

ब्रह्मोवाच

विश्वामित्रमुखात् सर्वां श्रुत्वा वंशपरम्पराम् ।
ततः स नरशार्दूलो भीमो नाम महीपतिः ।।२९।।

सन्तोष्य तं मुनिं प्रार्थ्य पप्रच्छ द्विजपुङ्गवम् ।

भीम उवाच

विनायकः कदा मे स्यात् सुप्रसन्नो महामुने ।।३०।।

नमुपायं वद विभो ! येन मे तदनुग्रहः ।
कदाऽहं कृतकृत्यः स्यां दृष्ट्वा देवं गजाननम् ।।३१।।

परिपूर्ण हुनेछन् ।।२१।। त्यसपछि राजा दक्षले मुद्गल ऋषिलाई केही गाउँ, वस्त्र, रत्न र धन-सम्पदा प्रदान गरे । अरू ब्राह्मणहरूका निमित्त पनि गाई, धन र वस्त्र प्रदान गरे । आशीर्वादद्वारा अभिनन्दन गरी ती सबै ब्राह्मण आ-आफ्ना घरतर्फ लागे । राजा दक्षले आफ्ना दुई जना अमात्य र राजकाजमा सघाउने अन्य भारदारहरूलाई पनि अनेक गाउँ दिएर सत्कार गरे।।२२-२३।। दक्षले कौण्डिन्य नगरमा रहेको सानो तर पुरानो श्रीगणेशमन्दिरलाई विशाल श्रीगणेशमन्दिरका रूपमा परिणत गराए। त्यसपछि सभाविसर्जन गरी आफ्नो निवासभवनमा प्रवेश गरे।।२४।। मानिसहरूका मुखबाट दक्ष राजा भएको सुनेर वल्लभ नामक दक्षका पिता पनि त्यहाँ आए । श्रीगणेशको आज्ञाबाट वीरसेन राजाले पतिको कामना गर्ने, उत्तम शीलस्वभाव भएकी आफ्नी छोरीको विवाह स्वर्ग, मर्त्य र पातालमा प्रसिद्ध महान् राजा दक्षका साथ सम्पन्न गराए ।।२५-२६।। दक्षबाट ती रानीमा जन्मेका छोरा बृहद्भानुका नामबाट प्रसिद्ध भए। तिनका छोरा खड्गधर भए । खड्गधरका छोराको नाम सुलभ थियो ।।२७।। सुलभका छोरा पद्माकर भए । पद्माकरबाट वपुर्दीप्ति जन्मे । वपुर्दीप्तिका छोराको नाम चित्रसेन थियो। हे राजा भीम ! ती चित्रसेनबाट तपाईं जन्मनुभयो ।।२८।।

**ब्रह्माजीले भन्नुभयो -** महर्षि विश्वामित्रका मुखबाट आफ्नो वंशपरम्पराको वर्णन सुनेपछि पुरुषसिंह राजा भीमले विश्वामित्र मुनिलाई सन्तुष्ट गराई नम्रतापूर्वक सहर्ष फेरि प्रार्थनाको मुद्रामा सोधे ।

**भीमले भने -** हे महामुनि! भगवान् विनायक कहिले र कसरी मसँग प्रसन्न हुनुहुनेछ ? उहाँलाई प्रसन्न गराउने उपाय के छ ? हे सर्वज्ञ मुनि ! त्यो मलाई उपदेश गर्नुहोस् । जसबाट गजानन प्रभुको ममाथि अनुकम्पा हुन सकोस् । उहाँको दर्शन पाएर म कहिले कृतकृत्य हुन पाउँला ? यस निमित्त पनि हे ऋषिवर ! मलाई उपाय बताउनुहोस् ।।२९-३१।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे वंशपरम्परावर्णनं नाम षड्विंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'दक्षको वंशपरम्परावर्णन' शीर्षकान्वित छब्बीसौं अध्याय पूर्ण भयो ।।

ॐ

# सप्तविंशोऽध्यायः { २७ अध्याय }

व्यास उवाच

क उपायस्तु मुनिना विश्वामित्रेण धीमता ।
कृपावता तु भीमाय कथितस्तं वदस्व मे ।।१।।

मन्मनोमोहपटलं मृत्योरिव विनिःसृतम् ।
तत्कथामृतपानेन पितामह ! मृता यथा ।।२।।

ब्रह्मोवाच

भीमाय कथितस्तेन य उपायः शृणुष्व तम् ।
उवाच तं प्रसन्नात्मा विश्वामित्रः सुधर्मवित् ।।३।।

विश्वामित्र उवाच

अनेनाराधय विभुं दैवतं गणनायकम् ।
अनुष्ठानं कुरुष्व त्वं प्रासादे दक्षनिर्मिते ।
विनायकः प्रसन्नस्ते सर्वान् कामान् प्रदास्यति ।।४।।

धर्ममर्थं तथा कामं मोक्षमन्यदपेक्षितम् ।
गच्छ वा स्वपुरं भीम ! चिन्तां कामपि मा कुरु ।।५।।

ब्रह्मोवाच

इत्युक्तः स तदा तेन तं प्रणम्य ययौ नृपः ।
सपत्नीको ददर्शाऽथ पत्तनं स्वं जहर्ष च ।।६।।

अमात्यौ सेनया सार्द्धं नागरैरीयतुर्नृपम् ।
आलिलिङ्गुर्नृपं केचिन्नेमुर्दूरात्तथान्तिके ।।७।।

प्रविवेश पुरं राजा सर्वैः साकं ध्वजालिमत् ।
सिक्तमार्गं चारुगन्धं नानावादित्रशब्दितम् ।।८।।

**व्यासले भन्नुभयो** – हे पितामह ! कृपालु र बुद्धिमान् विश्वामित्र मुनिले राजा भीमलाई कस्तो उपाय बताउनुभयो? त्यसबारे मलाई बताउनुहोस् ।।१।। हे पितामह ! जसरी मृतकहरू अमृतपानपछि अमर हुन्छन् त्यसै गरी यो कथामृत पान गर्नाले विषयको कालो अन्धकारमा रुमलिएको मेरो मोह मृत्युको साम्राज्यबाट माथि उठेको छ र त्यसले अमृततत्त्वलाई आत्मसात् गर्न खोजेको छ ।।२।।

**ब्रह्माजीले भन्नुभयो** – विश्वामित्र मुनिले राजा भीमलाई जुन उपाय बताएका थिए, त्यो म बताउँछु । विश्वामित्रले राजा भीमलाई श्रीगणेशको एकाक्षरी महामन्त्रको उपदेश गर्नुभएको हो । हे मुनिश्रेष्ठ वेदव्यास ! म त्यसबारे खुलस्त पार्दछु । उपदेशको क्रममा महात्मा विश्वामित्रले प्रसन्न भएर भीमलाई भन्नुभयो ।।३।।

**विश्वामित्रले भन्नुभयो**– हे राजा ! एकाक्षरी महामन्त्रद्वारा तपाईँले सर्वव्यापक भगवान् श्रीगणेशको आराधना गर्नुहोस्, तपाईँले यो आराधना अथवा मन्त्रानुष्ठान दक्षद्वारा निर्मित भगवान् श्रीगणेशको मन्दिरमा रहेर गर्नुहोस् । तपाईँको अनुष्ठानबाट प्रसन्न हुनुभएपछि श्रीगणेशले तपाईँका सबै कामना परिपूर्ण तुल्याउनु हुनेछ ।।४।। तपाईँले धर्म, अर्थ, काम र मोक्ष अथवा अन्य कुनै विषयमा जे जस्तो अपेक्षा गर्नुभएको छ, त्यो पनि पाउनुहुनेछ । अब तपाईँ आफ्नो नगरमा जानुहोस् अरू कुनै चिन्ता गर्नुपर्दैन।।५।।

**ब्रह्माजीले भन्नुभयो**– यसरी विश्वामित्रद्वारा आज्ञा प्राप्त गरेर ती राजा उहाँलाई प्रणाम गरी आफ्नी पत्नीका साथ प्रस्थान गरे । उपयुक्त समयमा आफ्नो नगरको दर्शन गरेपछि ती हर्षित भए ।।६।। अमात्यहरूले सेना र नगरवासीहरूका साथ राजाको सवारी चलाए । कुनै मानिसले राजाको दर्शन पाउँदा खुसी भएर आलिङ्गन गरे । कसैले नजिकमा रहेर प्रणाम गरे भने कसैले टाढैबाट प्रणाम गरे ।।७।। राजा ती सबैका साथ ध्वजापताकाले सिङ्गारिएको, जल सिञ्चन गरी सफाई गर्नाले धूलो–मैलो केही नभएको, अनेक थरिका सुगन्ध छर्केर सुगन्धित तुल्याइएको र अनेक बाजा–गाजा बज्नाले सङ्गीतमय बन्न पुगेको नगरमा प्रवेश गरे ।।८।। त्यहाँ मानिसहरूले

ऊचुः परस्परं लोकाः पुरीयं शोभतेऽधुना ।
यथा नारी पतिं प्राप्य यथान्धो वाऽपि सद्दृशम् ।।९।।

इति शृण्वन्नृयानस्थस्तथा सा चारुहासिनी ।
वस्त्रालङ्कारशोभाढ्यौ स्तूयमानौ मुदान्वितौ ।।१०।।

उभौ विविशतू रम्यं पुरं नानर्द्धिसङ्कुलम् ।
विसृज्य सर्वलोकं तौ वस्त्रालङ्कारमौक्तिकैः ।।११।।

ताम्बूलैस्तेषु यातेषु भवनं स्वमगच्छताम् ।
ततः शुभे दिने राजा दक्षप्रासादमागमत् ।।१२।।

यत्कौण्डिन्यपुरेऽकारि पुरा दक्षेण धीमता ।
तत्रार्चयामास विभुं सर्वदा तं विनायकम् ।
उपवासपरो नित्यं तन्मन्त्रमवलोडयन् ।।१३।।

भोजने शयने याने वचने श्वसनेऽपि च ।
तमेव चिन्तयन् नित्यमनन्यमनसा नृपः ।।१४।।

जले स्थले नभोमार्गे स्वर्गे देवे नरे द्रुमे ।
भक्ष्ये पेये नृपोऽपश्यद् विनायकमनुत्तमम् ।।१५।।

यं यं पश्यति तं नौति दृढालिङ्गनतत्परः ।
नगरे तं जनाः सर्वे पिशाच इति मेनिरे ।।१६।।

ततो विनायकोऽभ्येत्य धृत्वा पाणितले नृपम् ।
आह तं नृप ! मुक्तोऽसि किं वाञ्छसि वदस्व तत् ।।१७।।

तमुवाच नृपो नान्यं जाने त्वच्चरणाम्बुजात् ।
ततो विनायकः प्राह पुत्रस्ते चारुदर्शनः ।।१८।।

भविता मत्प्रसादेन गुणी स्वर्णतनुर्नृप ।
व्रज स्वं भवनं देवद्विजपूजापरो भव ।।१९।।

स गत्वा भवनं राजा तच्चकार तथैव च ।
देवानां ब्राह्मणानाञ्च पूजनं तर्पणं तथा ।।२०।।

आपसमा भनिरहेका थिए- अहा ! आज यो नगरी राजाको आगमनका कारण पति आउँदा कुनै युवती सुहाएझैं अथवा आँखाको दृष्टि प्राप्त गर्दा अन्धो मानिस रमाएझैं सुहाएको छ र रमाएको छ ।।९।। यस्ता कुराकानी सुन्दै वस्त्रालङ्कारको शोभाले दीप्त, जनताबाट प्रशंसित र अत्यन्त हर्षित नरयानमा आरूढ राजा र चारुहासिनी रानी ज्यादै प्रसन्न भए ।।१०।। त्यसपछि राजदम्पतीले अनेक समृद्धिले सम्पन्न र रमणीय नगरमा प्रवेश गरे । आफ्नो साथमा आएका नर-नारीहरूलाई वस्त्र, गहना, मोती र ताम्बूल प्रदान गरी बिदाई गरेपछि राजभवनमा प्राप्त भए ।।११-१२।। केही समयपछि राम्रो दिन जुराएर ती राजा दक्षले बनाएको श्रीगणेश मन्दिरमा गए । बुद्धिमान् दक्षद्वारा निर्मित त्यो श्रीगणेश मन्दिर कौण्डिन्यपुरमा रहेको थियो । त्यहाँ गएर उनले निरन्तर सर्वव्यापी श्रीगणेशप्रभुको आराधना गरे । उपवास गरी एकाक्षरी मन्त्रको पनि जप गरिरहे ।।१३।। भोजन, शयन, गमन, वचन र श्वास-प्रश्वास क्रियामा समेत उनले एकमना भएर नित्य विनायक प्रभुको चिन्तन गरिरहे ।।१४।। तिनले जल, थल, आकाशमार्ग, स्वर्ग, देवता, मानिस, वृक्ष, भोज्यपदार्थ र पेयपदार्थमा समेत सर्वश्रेष्ठ आफ्ना आराध्य भगवान् श्रीगणेशको दर्शन गरिरहेका थिए ।।१५।। सर्वत्र भगवान् श्रीगणेशको दर्शन गर्ने ती राजाले जसलाई देख्दा पनि श्रीगणेशकै रूप मानेर आलिङ्गन गर्दै नमस्कार गर्दथे । आराधनाको महत्त्व नबुझेका केही मानिसले राजा भीमको त्यो व्यवहार देखेर तिनलाई पिशाचसमान पनि मान्न थाले।।१६।। तिनले यसरी आराधना गरेपछि प्रसन्न हुनुभएका भगवान् श्रीगणेशले दर्शन दिएर हातले उठाउँदै भन्नुभयो - 'हे राजा! तिमी मुक्त भएका छौ । के चाहन्छौ? मलाई भन'।।१७।। भीमले उत्तर दिए - 'हे प्रभो ! मैले हजुरको चरणकमलबाहेक केही जानेको छैन।' त्यसपछि भगवान् श्रीगणेशले भन्नुभयो- 'मेरो कृपाले तिमीलाई स्वर्णमय कान्ति भएको गुणवान् र सुन्दर पुत्र पैदा हुनेछ । अब तिमी आफ्नो घर जाऊ र देवता एवं ब्राह्मणको नित्य आराधना गर' ।।१८-१९।। भगवान् श्रीगणेशको आज्ञाबाट राजा भीम राजभवनतर्फ लागे । त्यहाँ गएर तिनले श्रीगणेशले बताएबमोजिम एकमन गराएर देवता र